# मर्यादा

श्री ५ महाराजाधिराज सरकारको
शुभ जन्मोत्सव
विशेषाङ्क

5-3

वार्षिक मूल्य रु. १०।-

यस अङ्कको मूल्य— रु. ३।-



प्रकाशक :-

प्रधानाचार्य

श्री रामनाथ आचार्य

निमित्त, शास्त्रानुसन्धान परिषद्

(वाल्मीकि संस्कृत महाविद्यालय शास्त्रानुसन्धान परिषद्को मुखपत्र)

# मर्यादा

वर्ष—१ अङ्क—२

(चैत, वैशाख र जेठ-२०२६)

"तस्माच् शास्त्रं प्रमाणं ते
कार्याकार्यव्यवस्थितौ ।
ज्ञात्वा शास्त्रविधानोक्तं
कर्म कर्तुमिहार्हसि ॥"

भगवद्गीता, १६।२४

( शास्त्रै प्रमाण छन् सारा
कार्याकार्य बुझाउन ।
तस्मात् शास्त्रविधानैका
कार्यमा चल अर्जुन ! )

कोमल अनुवाद ।

# शास्त्रानुसन्धान परिषद्का कार्यसमितिका

## संस्थापक सदस्यहरू

अध्यक्ष— श्री रामनाथ आचार्य

( वाल्मीकि सं. म. विद्यालयका प्रधानाचार्य पदेन )

उपाध्यक्ष— प्रा० श्री नयराज पन्त

सचिव— प्रा० श्री चूडानाथ भट्टराय

प्रचारसचिव—प्रा० श्री रामचन्द्र पौडेल

कोषाध्यक्ष - प्रा० श्री तोयनाथ पाण्डेय

उपसचिव— प्रा० श्री गोपालनिधि तिवारी

सदस्य— प्रा० श्री वदरीनाथ भट्टराई

" --- प्रा० श्री शेषराज रेग्मी

वाल्मीकि संस्कृत महाविद्यालयका अरू सबै प्राध्यापकहरू
परामर्शदातृ-समितिका पदेन सदस्य।

शास्त्रानुसन्धान परिषद्को

सदस्यता :—

आजीवन सदस्यशुल्क रू. ५००।-

साधारण सदस्यशुल्क रू. ५।-

# शुभाशीर्वादः

गाम्भीर्येण सरस्वतोन्नतशिराः शैलेन यः स्पर्धते
वाचा यो मधुना गतेन करिणा शौर्येण सिंहेन यः ।
कान्त्या यः शशिना प्रतापमहितः सूर्येण दीप्तत्विषा
सोऽयं राजगुरौरलङ्कृतवपुर्जीव्यान्महेन्द्रश्चिरम्॥

— शास्त्रानुसन्धान-परिषत् परिवारस्य



श्री ५ महाराजाधिराज महेन्द्रको
चिरायु होस् !

# शास्त्रानुसन्धान परिषद्को मूल उद्देश्य

शास्त्रप्रतिपादित कल्याणकारी मार्गको प्रचार-प्रसार, सामाजिक तथा धार्मिक चाडपर्वहरूको परिशीलन, शास्त्रमा उठेका संदेहहरूको निराकरण, सच्चरित्रता देश-भक्ति राजभक्तिमा दृढ आस्था पैदा गर्नु र अनुसन्धान परिशीलन अन्वेषण आदि कार्यको प्रबन्ध गर्नु ।

## यस अङ्कको विषयवस्तु

## मर्यादाका नियमहरू

१—मर्यादा त्रैमासिक पत्रिका हो, प्रत्येक तीन महिनामा यसको प्रकाशन हुन्छ ।

२—मर्यादामा प्रकाशनार्थ आउने सबै रचनाहरू अनुसन्धानात्मक र शास्त्रानुसन्धान परिषद्‌को उद्देश्यसंग मेलखाने गद्यलेखहरू हुनुपर्दछ ।

३- मर्यादामा प्रकाशनार्थ आएका लेखहरू काटछाँट गर्ने वा छाप्ने नछाप्ने सम्पूर्ण अधिकार सम्पादक मण्डलमा रहने छ ।

४—रचनाहरू पठाउँदा कागजको एकापट्टि मात्र स्पष्ट बुझिने गरी लेखिएको हुनुपर्दछ । अस्वीकृत लेख फिर्ता चाहनेहरूले डाँक-व्यय आफैं वेहोर्नु पर्नेछ ।

५—यसमा शास्त्रानुसन्धान परिषद्‌को उद्देश्यको अनुकूल विज्ञापनहरू मात्र लिइने छन् ।

६ -मर्यादामा प्रकाशितहुने लेखहरूको उत्तरदायित्व लेखक रचयिताहरूमा नै रहने छ ।

# महाराजाधिराज श्री ५ महेन्द्रको दीर्घायु होस्

—प्रधानाचार्य श्री राजनाथ आचार्य

अनादिकालदेखि धाराप्रवाहरूपले चली आइरहेको यो ब्रह्माजीको सृष्टिपरम्परामा; जसमा पराक्रम, बुद्धिकौशल, परोपकारपरायणता, सहनशीलता, अगाध गुणगाम्भीर्य, प्राणिमात्रमा बन्धुत्वभावना आदि अलौकिक गुणहरू विद्यमान हुन्छन् त्यस्ता महापुरुषको जन्मजयन्ती कुनै न कुनै रूपले भव्य समारोहका साथ मनाउनु परमकर्तव्य हुन आउँदछ। जनताले पनि महापुरुषमा रहेका यिनै गुणहरू ग्रहणगरी आफ्नो मानवजीवनलाई सार्थक बनाउनू भन्ने जन्मजयन्ती समारोहको लक्ष्य हो।

अलौकिक गुणशाली महनीय चरित्रले शोभित भएका राम कृष्ण आदिहरूको जन्मजयन्ती प्रतिवर्ष समस्त आस्तिक जनताले मनाउँदै आएको हामीहरूको समक्ष छ र हामी पनि व्रत, उपवास, पूजा आदिहरूले श्रद्धाका साथ मनाउँदैछौं।

यसै सन्दर्भमा वर्तमान हाम्रा राष्ट्रनायक युगपुरुष, "अष्टानां लोकपालानां मात्राभिर्निर्मितो नृपः", "नाविष्णुः पृथिवीपतिः" यो

शास्त्रको वचनानुसार महेन्द्र आदि अष्टलोकपालको अंश र साक्षात् विष्णुस्वरूप श्री ५ महाराजाधिराज महेन्द्र वीरविक्रम शाहदेवबाट मनुष्यरूपले नेपाल देशमा जन्म लिइबक्सेको आज ५० पचासौं शुभ-दिवस हो ।

जुन अनिर्वचनीय गुणशाली राष्ट्रपिता १ करोड जनताको सुख-समृद्धिको लागि शारीरिक मानसिक अनेक प्रकारको कष्ट सहेर निरन्तर जागरूक र सततप्रयत्नशील रहिबक्सेको कुरा नेपालमा हुँदैगएको विभिन्न क्षेत्रको विकासबाट प्रत्यक्ष भएको छ । समय समयमा महान् वाणीद्वारा जनतालाई देशको विकासमा प्रोत्साहित गराइबक्सेको एवं अन्यान्य उल्लेखनीय कार्यहरू पनि श्री ५ महेन्द्रको कुशलनेतृत्वको परिणाम र देशभक्तिको ज्वलन्त उदाहरण हो जसको कार्य कुशलताको सबै राष्ट्रहरूले मुक्तकण्ठले प्रशंसा गरिरहेका छन् । अस्तु । आज यो शुभजन्मोत्सवको उपलक्षमा जनतामा ठूलो हर्षोल्लासको लहर फैलिइ राखेको छ ।

आज कतै वैदिक परम्परा अनुसार अष्टचिरञ्जीविको पूजा जप पाठ भइराखेको छ, कतै नेपालका देवदेवीका मन्दिरमा मौसूफ सर-कारको दीर्घायुका निमित्त भव्य पूजा भइराखेको छ ।

वाल्मीकिसंस्कृत महाविद्यालयमा हाम्रा परमपूज्य श्री ५ महाराजा-धिराज सरकारको चिरायुको लागि "शतं जीव शरदो वर्धमानः" इत्यादि वैदिक मन्त्रध्वनिको साथै मौसूफ सरकारको तस्वीरमा अबीर फुल मालाले अर्चना भइराखेको छ । अन्यत्र महाविद्यालय तथा स्कूल पाठशालाहरूमा आ–आफ्नो कार्यक्रमानुसार राष्ट्रपिता श्री ५ महेन्द्रको दीर्घायु कामना गर्दै उच्च एकस्वरले "श्री ५ महेन्द्रको जय होस् ! जय होस् !!" भन्ने मधुरध्वनिले सबै अध्यापक छात्र-छात्राहरूको मनमा अनिर्वचनीय आनन्दको अनुभव भइराखेको छ । यो सबै काठमाडौंमा मात्र नभई मेचीदेखि महाकालीसम्मका जनताले हाम्रा प्यारा राजाको यो शुभ-

जन्मोत्सव भव्य समारोहका साथ मनाइरहेका छन् ।

यो हो महापुरुष राष्ट्रपिता श्री ५ महेन्द्रको प्रभाव। अन्त्यमा श्रीपशुपतिनाथ, श्रीगुह्येश्वरी तथा मार्कण्डेयादि अष्टचिरञ्जीविहरूले हाम्रा महेन्द्रलाई चिरायु राखून् । यही हार्दिक प्रार्थना गर्दछु ।

---

अमरवाणी

अहिलेसम्म पनि यहाँ हिन्दूहरूको रीति-स्थिति, पूजा-पद्धति, आचार-विचार छँदैछन् । यहाँ धार्मिक कट्टरता छैन ।

—श्री ५ महेन्द्र

( विश्वहिन्दू-सम्मेलनलाई बक्सेको
शुभकामना सन्देश
वि. सं. २०२२ माघ ६ गते)

# कर्मकाण्ड

— प्रा० वाल्मीकि पौडेल

कर्म नै जीवनको द्योतक छ र क्रिया नै जीवजगत्‌को आफ्नो धर्म हो। यसरी भगवान् श्रीकृष्णले भन्नु भएको छः—"न हि कश्चित् क्षणमपि जातु तिष्ठत्यकर्मकृत्", अर्थात् कोही पनि एक छिन पनि कर्म नगरी टिक्न सक्तैन। यो कुरा सत्य पनि हो। जन्म मरण आदि संसारचक्र नै कर्मको परिधिमा वेह्रिएको छ। यही विचार गरेर सबै व्यवस्था, सबै नियम र सबै संस्कारद्वारा मानवलाई सुसंस्कृत गर्न शास्त्रकारले कर्मकाण्डको सिर्जना गरे। त्यसमा पनि विन्ध्य हिमालयको बीचको क्षेत्र यी कर्महरूको समुचित क्षेत्र मानी आर्यहरूले यस देशलाई 'आर्यावर्त' भने; अनि कर्मविभाजन गरेर नै वर्ण र समयविभाजन गरी आश्रमको आविस्कार गरे। त्यसैले हिन्दूको सबैभन्दा वैज्ञानिक समाजव्यवस्था भयो वर्णाश्रमव्यवस्था।

क्रीयते यत्=कर्म। कृधातुबाट मनिन् प्रत्यय गरी नकारादि लोप गरेर यो शब्द बन्छ। यास्काचार्यले निघण्टुमा पनि कर्म क्रिया भनी उल्लेख गरे। जन्मँदा साथ सालले वेह्रिएको बच्चालाई नुवाइ धुवाइ गर्नु पर्‍यो, अनि पुछपाछ गरी घ्यू मह चटाउनु पर्‍यो, आमाको स्तन पखालेर चुसाउनु पर्‍यो। यी सबै कुरा मन्त्रपूर्वक गर्नुलाई जातकर्म भन्दछन्। आज पनि यी कुरा नहुने त होइनन्, तर शास्त्रविहित विधिपूर्वक गर्नु र त्यसै गर्नु यति फरक हो। अमन्त्रपूर्वक हुने कर्म शूद्रको कर्म हो। अर्थात् मन्त्रमा देवता, इतिहास, विधि सबै संलग्न हुन्छन्, तर कर्म-गर्नेलाई यी बोध हुँदैनन् र ऊ काम त गर्छ तर चूपचाप नबुझेर हेरी-जानेको भरमा, यो पनि विधान छ कर्मकाण्डमा। जन्मनुभन्दा अघि गर्भाधान भयो, त्यसपछि छोरो जन्मोस् भन्ने कामना भयो, जन्म्यो,

नाम राख्नुपर्‍यो, अन्न ख्वाउनुपर्‍यो, कपाल काट्नुपर्‍यो, पढाउन गुरुकहाँ लैजानुपर्‍यो, पढिसकेपछि दुलही ल्याउनुपर्‍यो, आखिर मर्‍यो, लाश जलाउनुपर्‍यो, वर्षदिन पछि मरेको दिनमा पितृ सम्झनुपर्‍यो श्रद्धाले। के यी कुरा सारा मानव समाजमा हुँदैनन् र हुन्छन् अवश्य नै हुन्छन्।

तर, अन्य समाजमा यसरी हुँदैनन् जसरी जुन एक श्रृङ्खलाबद्ध नियम, व्यवस्था र पद्धति अनुसार हिन्दूधर्ममा हुन्छ। यही विधिविधानगर्ने कुराकै नाम हो कर्मकाण्ड। यही कमकाण्ड नै आजको शब्दमा भन्ने हो भने संस्कृतिको आचार-संहिता। भिन्न भिन्न जातिको रिवाज हेर्न तिनीहरूको संस्कार–पद्धतिको अध्ययन गर्नुपर्छ। कोही आगो बालेर 'आयुष्मान् अस्तु मे पतिः' अर्थात् मेरो पोइ आयुस्मान् होस् भनी अग्निमा आहुति दिन्छे विवाहमा, कोही चर्चमा गएर पुरोहितले भने अनुसार गर्छे। कर्मकाण्ड त हिन्दू मुसलमान यहुदी क्रिश्चियन आदि सबै धर्मका छन्। सभ्यसमाजमा कोही मूर्दा पोल्छन् कोही गाड्छन्, असभ्य समाजमा कोही कोही खान्छन् कोही बगाउँछन्। तर शवको कृम्यन्त, विडन्त र भस्मान्त तीन रूप हुन्छ हुन्छ।

यसमा कुन सभ्यपरम्परा हो, कुन वैज्ञानिक–दृष्टिपूर्वक छ र कुनमा विद्वान्हरूले बढी विश्लेषण गरी अध्ययन गरेको छ यसलाई संप्रदायवादी नभएर निस्पक्षपूर्वक विचार गर्ने हो भने हामी हिन्दूधर्मलाई यहाँ सबै एक आदर्श-धर्मको रूपमा पाउँछौं। हिन्दूधर्म साम्राज्यवादी र तानाशाही धर्म होइन, बलात् अर्कालाई तरवारको र शासनको जोडले आफ्नो रूपमा ढाल्ने। यसको नीति छ "स्वधर्मे निधनं श्रेयः परधर्मो भयावहः।" यो सत्यले कुनै मुसलमानलाई हिन्दू बन्न रोक्तछ, कुनै क्रिश्चियनलाई मुसलमान बन्न सहमति दिंदैन। यसो गरेन भने अरूको संस्कृतिको लोप हुन्छ र रीति-रिवाज आचार-विचार खतम हुन्छ। यसमा यति उदारता छ।

कर्ममा कुकर्म पनि हुनसक्छ, आवेशमा। तर त्यसोभए त्यसको

प्रायश्चित्तकर्म पनि यसै धर्ममा लेखिएको छ । सुकर्मको तीन भेद छ, १ प्रशस्तकर्म, २ श्रेष्ठकर्म र ३ श्रेष्ठतमकर्म । कर्मकाण्डको यही विशद् व्याख्या हो । तर खेदको कुरा छ—आज संस्कृतभाषाको अज्ञानले ती विधानहरू बुझिदैनन्, अनि तिरस्कार गरिन्छ । बडो दयनीय दशा भएको छ हिन्दू समाजको । जसका पुरुषार्थ चार छन्–धर्म, अर्थ, काम र मोक्ष । यिनका साधनलाई व्याख्या गरेका छन् सूत्र भाष्य टीका टिप्पणी आदि गरी शास्त्रकारहरूले । तर रत्तिभर ज्ञान नलिएर हाम्रा सन्ततिहरू यसको उपहास गर्छन् । विद्वान्हरू अगाध हिन्दूशास्त्र देखेर उनको कर्मकाण्डको अध्ययनगर्न खोज्छन् एकातिर, अर्कातिर त्यो ज्ञानराशि अफालेर भड्किंदा छन् ।

अब वेला आयो – काल, नियम, अधिकार र साधनहरू जुटाएर विधि अनुसार शास्त्रीय–पद्धतिले गरिएको कर्मकाण्डको फलको विचारविमर्शगर्ने र आफ्नो राष्ट्रिय र विश्वकल्याणकारी मार्गतिर लम्कने । अभिषेक गर्दा हामीले नै भन्न सक्यौं—"द्यौः शान्तिरन्तरिक्षं शान्तिः पृथिवी शान्तिः" । फेरि तर्पणदिंदा भन्छौं पनि–"सप्तद्वीपनिवासिनाम्" भनेर ।

---

## अमरवाणी

*"आधुनिक ढङ्गले सांस्कृतिक सूत्रमा विश्वभरका हिन्दूहरूलाई बाँध्ने प्रयासगर्नु उत्तिकै आवश्यक छ ।"*

*— श्री ५ महेन्द्र*

*( विश्वहिन्दू-सम्मेलनलाई बक्सेको शुभ-कामना सन्देश*

*-- वि. सं. २०१९ माघ २० )*

# उपनयन-संस्कार

— सोमनाथशर्मा पौडेल

हिमालयका पावन कन्दराबाट निःसृत भागीरथीका जलप्रवाहले झैं तपोमूर्ति त्रिकालदर्शी-महर्षिका मस्तिष्कबाट प्रवाहित अक्षुण्ण ज्ञानधाराले विश्वनै आर्द्रित र तर्पित छ।

"कृण्वन्तो विश्वमार्याः" यो उदात्त सिद्धान्तलाई कार्यान्वित गर्न मानवमात्रको सुखनै आफ्नो सुख भनी त्यसका कारणहरूको गम्भीर अध्ययनले अन्वेषण गरी सर्वसमक्ष प्रस्तुत गर्ने हाम्रा आचार्यहरू विश्वकानै प्रशंसा पात्र छन्।

प्रातः स्मरणीय यिनै आचार्यका असीम दयाबाट जीवनतत्वको ज्योति अक्षयज्ञानको भण्डार वेदत्रयी र यम, नियम, धर्म, संस्कार आदि विविध साधनहरू मानवले प्राप्त गऱ्यो र "अहमिन्द्रो नपराजिग्ये" ( ऋ. १०।४८।५ ) म सर्वशक्तिमान छु मलाई कोही जित्न सक्दैन भनी आफूलाई सर्वाङ्गपूर्ण सम्झन्थ्यो।

यही सन्दर्भमा त्रिविधतापबाट मुक्तगरी ऐहिक, आमुष्मिक सुखका साथ मोक्षको द्वारसम्म पुऱ्याउन प्रातःकालदेखि रात्रिपर्यन्तका दिनचर्या, जन्मदेखि मरणसम्मका जीवनचर्या, ब्रह्मचारीदेखि संन्याससम्मका आश्रमविधिहरूको कर्मकलाप हाम्रा अगाडि प्रस्तुत छन्।

यसै भित्र हाम्रा संस्कारहरू पनि समाविष्ट छन्, संस्क्रियते पुरुषः, अनेन इति संस्कारः। जुन अनुष्ठानबाट शारीरिक वाचनिक दोषबाट पुरुष शुद्ध हुन्छ त्यसलाई संस्कार भनिन्छ। यी संस्कारका संख्याका विषयमा स्मृतिकारहरूमा विभिन्न मत देखिन्छ, जस्तो महर्षि गौतमका

मतमा ४०, तथा अङ्गिराका मतमा २५, भगवान् वेदव्यासका मतमा १६।यी मध्ये श्रीवेदव्यासको पक्षलाई नै मान्यता दिइएको छ। जस्तो—

" गर्भाधानं[१] पुंसवनं[२] सीमन्तो[३] जातकर्म[४] च।
नामक्रिया[५] निष्क्रमणो[६]ऽन्नाशनं[७] वपनक्रिया[८] ॥
कर्णवेधो[९] व्रतादेशो[१०] वेदारम्भ[११] क्रियाविधिः।
केशान्त[१२] स्नान[१३]मुद्वाहो[१४] विवाहाग्निपरिग्रहः[१५] ॥
त्रेताग्निसंग्रह श्चेति[१६] संस्काराः षोडश स्मृताः। इति।

संस्कारको फल के हो र त्यसको आवश्यता किन ?।

प्रकृतिसिद्ध कुनै पनि वस्तु विना संस्कार कार्यमा ल्याउन सकिंदैन, यो स्वतः सिद्धछ। सबैको यथोचित संस्कार गरेर नै उपयोगमा ल्याइन्छ जस्तो—

खानीबाट निस्केको सुवर्ण, त्यसमा सुवर्णमा हुने चमक सौन्दर्य आदि कुनै पनि गुण देखिंदैनन्. प्रत्युत माटोले संलिप्त छ र मलिन छ। स्वर्णकारले पखाल्नु आगोमा तताउनु मार्जन गर्नु आदि आदि संस्कार गर्दछ र सुवर्णको रूप दिई स्वानुरूप भूषणमा परिणत गर्दछ। तन्तुकारले कपासलाई उँइटनु काल्नु बुन्नु आदि क्रियाबाटनै कपडाको रूपमा परिणत गर्दछ। पुनः सूचीकारले परिधानयोग्य मयलपोस, सुर्वाल, कमिजको रूप दिन्छ।

वृक्षरूपमा वनमा खडा काष्ठ, धान्यरूपमा खेतमा रहेको खाद्यवस्तु समेत यथोचित संस्कारले मात्र हाम्रो इच्छापूरण गर्न-सक्तछन्। अतः ज्ञानविज्ञानको कर्णधार, उच्च आदर्शको पथिक, चतुर्विध पुरुषार्थको अधिकारी, मानवतत्त्वको विकासलाई शास्त्रीय संस्कारद्वारा संस्कृत पार्नु नितान्त आवश्यक छ।

यी संस्कारहरूमा दृष्टादृष्टरूप अनेक फल हामी पाउदछौं। मुख्यतः यिनको तीन विभागमा विभाजन गर्न सकिन्छ। जस्तो—

१ दोषमार्जन।

२ गुणाधान।

३ हीनाङ्गपूर्ति।

गर्भाधान, जातकर्म, नामकरणबाट दोषमार्जन हुन्छ।

चूडा करण, उपनयनबाट, चारित्रिक विकासको सृजना सिद्ध हुन्छ।

विवाह, अग्निहोत्रबाट हीनाङ्गको पूर्ति गरी कर्मक्षेत्रमा अधिकारी संभिइन्छ।

यिनै विषयहरूको मनुले विशद् रूपमा उल्लेख गर्नु भएको छ—

निषेकाद् बैजिकञ्चैनो गार्भिकञ्चापमृज्यते।
क्षेत्रसंस्कारसिद्धिश्च गर्भाधानफलं स्मृतम्॥......
बलायुर्वर्चोवृद्धिश्च चूडाकर्मफलं स्मृतम्।
उपनीतेः फलं त्वेतद् द्विजतासिद्धिपूर्विका॥ आदि आदि।

यिनै संस्कारले आर्यजातिका मस्तिष्कमा उर्वराशक्ति प्रदान-गरेको थियो। वसिष्ठ, विश्वामित्र, चाणक्य जस्ता चरित्रबलसम्पन्न विभूतिलाई जन्माएको थियो। यिनै संस्कारको सार्वभौमसत्तामा आधारित आर्य—

एतद्देशप्रसूतस्य शकासादग्रजन्मनः।
स्वं स्वं चरित्रं शिक्षेरन् पृथिव्यां सर्वमानवाः॥

भनी विश्वगुरुको शङ्खनाद गर्दथ्यो।

आज विदेशी शिक्षा दीक्षाको असर हाम्रो समाजमा पर्दै गयो र आफ्ना संस्कारको महत्ता बुझ्न समर्थ भएनौं, त्यस तर्फ शिथिल हुदै गयौं, हामीले गर्दै आएका कतिपय संस्कारहरूमा पनि काल वैचित्र्यवादलाई ख्याल नराखी आफ्नो अनुकूलमा यथाकथञ्चित् सम्पन्न गर्दै गयौं, फलतः "अदीनाः स्याम शरदः" का सट्टा दीन हीन अवस्थामा पुग्यौं। यो हिन्दूमात्रको हृदयलाई चोट पार्ने दैन्यको विषय छ।

ग्रीष्म ऋतुको प्रचण्ड ताप अनुभव गरे पछि मात्र सुखद वर्षा प्राप्त हुन्छ ।

धर्मप्रेमी हिन्दू सम्राट् श्री ५ महेन्द्र वीरविक्रम शाहदेवबाट यो विषम स्थितिको अनुगम गरिबक्सी "श्रीमहेन्द्र ब्रह्मचर्याश्रम" को आयोजना हुने समाचार सर्वविदित छ ।

उक्त आश्रममा विशुद्ध वेदाध्ययन प्रणालीद्वारा गराइएका वेदाध्ययनले प्राचीन गुरुकुलको कार्यभार समाल्ने छ, हाम्रा सबै संस्कारहरू पूर्वरूपमा प्रसारित र प्रचारित हुंने पनि छन् भनी नेपाली समाजले सुनौला त्यो भविष्यको प्रभातलाई प्रतीक्षा गरिरहेको छ । अस्तु—

अब प्रकृत विषयमा जाउँ ।

उपनयन—

उप–गुरुसमीपे 'वा' अग्निसमीपे, नयनम् ,

विधिपूर्वक संस्कारार्थ द्विजाति बटुकलाई गुरुका समीपमा वा अग्निका समीपमा लैजानुलाई उपनयन भनिन्छ,

व्रतबन्ध, यज्ञोपवीत, मौञ्जीबन्धन आदि नामान्तरबाट पनि यही संस्कारको बोध हुन्छ ! उक्त १६ संस्कार मध्ये आठौं यो संस्कार हो ।

यसले त्रैवर्णिक बटुक आचार्यबाट शिक्षादीक्षारूप पुनर्जन्म ग्रहण गरी द्विजत्व प्राप्तिका साथ वेदाध्ययनादि उत्तर क्रियामा अधिकारी बन्दछ ।

"वसन्ते ब्राह्मणमुपनयीत, ग्रीष्मे राजन्यम् , शरदि वैश्यम् " यी विधिवाक्यहरूबाट ब्राह्मण, क्षत्रिय, वैश्यका बटुकहरूलाई क्रमशः वसन्त, ग्रीष्म, शरद्ऋतुहरू उपदिष्ट छन् —

यी संस्कारका विधान केवल ब्राह्मणभागमा मात्र नभई साक्षात् मन्त्रभागमा समेत हामी पाउदछौं जो—

"आचार्य उपनयमानो ब्रह्मचारिणं कृणुते गर्भमन्तः, तं रात्रीस्तिस्र

उदरे बिभर्ति तज्जातं द्रष्टुमभिसंयन्तिदेवाः" अर्थात् आचार्यजुन बालकको उपनयन संस्कार गर्दछन् उसलाई तीन रात्रि पर्यन्त आफ्नो गर्भमा र सक्रीयमा परिरक्षित रूपबाट राख्दछन्, उस आचार्य परिपालित जायमान गुणसम्पन्न बालकको दर्शनार्थ सबै देवताहरू आउँदछन्।

अतः यो संस्कार अन्य संस्कार भन्दा उच्च श्रेणीमा गनिएको छ। आजको स्थितिमा समेत यसको सर्वत्र प्रचार छ। यस संस्कार मानै—

"माता भूमिः पुत्रोऽहं पृथिव्याः" म पृथिवीको पुत्र हुँ, भूमि मेरी आमा हुन्, यस्ता पवित्र पावमानी ऋचाको अभ्यास गराइन्छ।

यो संस्कारमा गरिने सूत्रानुसारका पदार्थहरूको विश्लेषण अर्को अङ्कमा क्रमशः गरिने छ। क्रमशः

---

सामाजिक तथा धार्मिक चाडपर्वहरूको परिशीलन र अनुसन्धान अन्वेषण आदि कार्यको प्रबन्ध गर्नु पनि शास्त्रानुसन्धान परिषद्को उद्देश्य हो। यस्ता अनुसन्धानात्मक कामको लागि यस परिषद्संग सम्पर्क राख्नुहोस्।

# संस्कृति र यसको स्वरूप

—प्रा. श्रीकृष्णशर्मा

आफ्नो जीवनलाई सुखमय र आनन्दमय बनाउने स्वाभाविक प्रवृत्ति मनुष्यजातिमा प्राचीनकालदेखि नै रहँदै आएको छ। हुन त पशु-पक्षी र वृक्ष-वनस्पति आदिमा पनि यो प्रवृत्ति देखिन्छ, तर मानवजातिमा रहेको बुद्धि या मेधा नामक एक विशेष तत्त्वले गर्दा उसमा यो प्रवृत्ति प्रवल रूपमा पाइन्छ। बुद्धि र विवेकशक्तिले गर्दा नै मानवजातिले जंगली अवस्थाबाट पशुपालक र पशुपालकबाट कृषक अवस्थामा प्रवेश गरेको हो भन्ने विद्वान्हरूको धारणा छ। पशुपालक अवस्थासम्म उ घुमन्ता थियो, तर कृषक अवस्थामा प्रवेश गरेपछि आफ्ना खेतबारीहरूको बन्धनमा पर्नु परेकोले उसले गाउँहरू बसाउन बाध्य हुनुपर्‍यो र मानवसमाजको निर्माण गर्‍यो। समाजको निर्माण भएपछि सामाजिक नियमहरू स्थिरगर्नालाई सभाको आवश्यकता भयो र सभाले निर्धारित गरेको नियम र मर्यादामा रहन लागेपछि मात्र उ सभ्य बन्यो। यसैले मानवजातिको यस अवस्था पछिको भौतिकस्थिति मात्र सभ्यता भनिने गरेको छ।

आरम्भदेखि नै भौतिक-पदार्थहरू सभ्यताका आधार हुंदै आएका छन्। भौतिक-पदार्थहरू 'अर्थ' कहिएता पनि भौतिक-तत्त्वहरूको ज्ञान संम्पादन गर्ने विद्या 'विज्ञान' भनिने हुनाले सभ्यताको मूल आधार प्राचीनकालदेखि नै विज्ञान हुँदै आएको छ। यसैले जातिविशेष वा देश-विशेषको अलग-अलग विज्ञान नभई एकै विज्ञान हुने हुनाले सभ्यताले एकातिर सबै सभ्यजातिहरूमा एकताको भावनालाई प्रोत्साहित गर्दछ भने अर्कातिर इनै भौतिक-पदार्थहरूका निमित्त जाति-जाति र ग्राम-ग्रामका बीचमा संग्राम पनि हुने भै बिरोधात्मक

प्रवृत्ति पनि प्राचीनकालदेखि चल्दै आएकोले यसले देश वा जातिहरू-लाई अलग–अलग रूपमा विभाजित पनि गर्दै आएको छ। यसै एकता र भिन्नताको संघर्षबाट नै इतिहासकालमा अनेक राष्ट्रहरूको उत्थान र पतन भयो र अनेक मनुष्यजातिहरू यस पृथ्वीतलबाट नष्टभए पनि।

जाति विशेष वा देश विशेषले आफ्नो भौतिक आवश्यकताहरूको पूर्तिको लागि जे–जस्तो उपाय र साधनहरूको प्रयोग गर्दछ र त्यसबाट जे–जति वस्तुहरूको उत्पादन हुन्छ· ती सबै त्यस जाति–विशेष वा देश–विशेषको सभ्यताका द्योतक हुन्छन्। यसैले जुन भूभागमा भौतिक पदार्थहरू प्रचुरमात्रामा पाइन्छन् , त्यो भूभाग सभ्यताको दौडमा अरू भन्दा सजिलैसंग अगाडि बढ्न सक्तछ र जुन भूभागलाई भौतिक पदार्थहरूको अभावको प्राकृतिक अभिशाप परेको हुन्छ, त्यस भूभागका निवासीहरू यस दौडमा पछाडि पर्दछन्। यस प्रकार भौतिक साधनहरूको भाव र अभाव, कमी र वेसी· भौगोलिक स्थिति र यस अनुसार हुने भौतिक आवश्यकताहरूले पनि देश–विशेष वा जाति-विशेषको सभ्यतामा अन्तर पर्नु स्वाभाविक छ।

यो भयो सभ्यताको कुरा। परन्तु मनुष्यजाति आवश्यकताको पूर्तिले मात्र संतुष्ट हुँदैन। आफ्नो जीवनलाई अधिक से अधिक सुखमय र बढी से बढी आनन्दमय बनाउने स्वाभाविक प्रवृत्ति अनुसार भौतिक आवश्यकताका पूरक वस्तुहरूलाई सुन्दर र आल्हादकर बनाउने इच्छा पनि उसमा स्वभावैले रहेको हुन्छ। यसै प्रवृत्तिद्वारा उसले आफ्ना निवासस्थानहरूलाई आलिशान महलको रूपमा सजाएको छ, देव-मन्दिरहरूलाई मनमोहक रूपमा सिंगारेको छ र आत्मसंतुष्टिको लागि साहित्य, संगीत र कलाहरूको पनि स्वतन्त्ररूपले विकास गर्दै आएको छ। साथै उसमा—यो संसार के हो ? मानव-शरीर किन उत्पन्न हुन्छ र नष्ट हुन्छ ? इत्यादि जिज्ञासा पनि आदिकालदेखि नै पैदाहुँदै आएको छ र यी प्रश्नहरूको समाधानमा उसले अनेक किसिमका

चिन्तन या दर्शनहरूको पनि विकास गर्दै आएको छ। आफ्ना यी सबै प्रवृत्तिहरूको अभिव्यक्तिको निमित्त उसले अनेक थरि धार्मिक–क्रिया-हरू, चाड–पर्वहरू, रीति–रिवाजहरू आमोद–प्रमोदहरू र आचार–विचारहरूको पनि स्वतन्त्ररूपले विकास गर्दै आएको छ। अर्थात् कुनै जनसमुदाय आफ्नो भौतिक आवश्यकता अनुरूप र देशको जलवायु अनुसार आफ्नो भवन निर्माण गर्दछ र यसै अनुसारको पहिरन समेत पहिरन्छ। यी सभ्यताका द्योतक हुन्। तर यत्तिले मात्र उ संतुष्ट हुँदैन र यी वस्तुहरूलाई मनोहर र आनन्ददायक बनाउने प्रयास पनि उसले निरन्तर गर्दै आएको छ। यस प्रकार हामी देख्दछौं कि जहाँ सभ्यताको अभिव्यक्ति भौतिक आवश्यकता, यसलाई पूरागर्ने भौतिक साधन र त्यसको उपलब्धिमा हुन्छ, त्यहाँ संस्कृतिको अभिव्यक्ति मानसिक चिन्तनमा। अर्थात् देश–विशेष वा जाति–विशेषले सौन्दर्यानुभव, आनन्दानुभव र आत्मसंतुष्टिको निमित्त जे–जस्ता कामहरू गर्दै आएको छ, जे–जस्ता चिन्तन या विचारहरू अपनाउँदै आएको छ र त्यसबाट जे–जस्ता उपलब्धिहरू मिलेको छ, ती सबैको समष्टि नै त्यस देश वा जातिको संस्कृति हो। संक्षेपमा, देश–विशेष वा जाति–विशेषमा रहेको बुद्धि या विवेकद्वारा उत्पन्न हुने मानसिक उपजहरूको समष्टि नै त्यस देश वा जातिको संस्कृति हो। फलतः कुनै पनि देश या जातिको रीति-रिवाज, आमोद-प्रमोद, धार्मिककृत्य, कला र साहित्य आदिमा नै देश-विशेष वा जातिविशेषको संस्कृति प्रतिबिम्बित भएर रहेको हुन्छ। यसबाट सिद्धहुन्छ कि संस्कृति त्यो शरीर हो, जसको आत्मा चिन्तन या दर्शन हो र रीतिरिवाज आदि सामाजिक व्यवस्थाहरू जसका विभिन्न अङ्ग हुन्।

संस्कृतिको निर्माण सहसा हुन सक्तैन। जब कुनै देशविशेष वा जातिविशेषले सभ्यतामा पदार्पण गर्दछ उसले देश, काल र परिस्थिति अनुसार एक पटक स्वतन्त्ररूपले आफ्नो नीति–नियम र आचार-व्यवहारहरूको मर्यादा निर्धारित गर्दछ। तर पछि उसको

अर्को नयाँ जाति वा जनसमुदायसंग सम्पर्क हुन्छ र उसले थाहा पाई वा नपाई त्यस जातिको सामाजिक विशेषताहरूको केही न केही अंशलाई ग्रहण गर्दछ। यसबाट त्यस जाति–विशेषको संस्कृतिमा केही न केही परिवर्तन अवश्य हुन्छ र त्यस जातिविशेषका नयाँ सन्तानहरू यस परिवर्तित संस्कृतिलाई सहजरूपले स्वीकार गर्दछन र यसलाई परिस्कृत र विकसित पार्दै लैजान्छन्। यो क्रम जुनसुकै जाति वा राष्ट्रमा पनि धेरै वा थोरै मात्रामा चली नै रहेको हुन्छ। तर विशेष सभ्य-जातिको प्रभाव कम सभ्यजातिको संस्कृतिमा बढी पर्दछ र प्रभावपार्ने र प्रभावितहुने जातिहरूको जनसंख्याको कम–बेसीले पनि प्रभावमा कम–बेसी हुन सक्तछ। यी सबै कुराहरू भिन्न भिन्न जन-समूहमा भिन्न भिन्न रूपले हुने हुनाले भिन्न भिन्न जाति वा भिन्न भिन्न देशको संस्कृतिमा पनि भिन्नता पाइनु स्वाभाविक छ।

संस्कृति नै कुनै पनि जाति या राष्ट्रको आत्मा हो। यदि राष्ट्र-विशेषको आफ्नो अलग संस्कृति छैन भने संसारमा उसको कुनै अस्तित्व रहँदैन। परन्तु संस्कृति सदा संघर्परत हुन्छ र यस संघर्षमा सबल संस्कृतिले निर्बल संस्कृतिलाई नष्ट गराइदिन्छ पनि। कुनै देश या जातिको राजनैतिक पराजय त्यत्तिको दुःखदायी हुँदैन जति कि त्यस देशको सांस्कृतिक पराजय हुन्छ। राजनैतिक पराजयबाट देश वा जाति पराधीन हुन्छतापनि त्यस देश वा जातिको सांस्कृतिक एकता सुदृढ छ भने यस राजनैतिक पराजयबाट त्यस देश वा जातिको संस्कृति सहसा नष्ट हुन सक्तैन र संस्कृति नष्ट भएको छैन भने राजनैतिक पराधीनताले गर्दा केही काल विजेताको दवावमा रहनु परेता पनि उचित समय आउने वित्तिकै फेरि आफ्नो राजनैतिक अधिकार प्राप्त गर्न समर्थ हुन्छ। तर सांस्कृतिक पराजय भैसकेको छ, अर्थात् उसको आफ्नो संस्कृति नष्ट भैसकेको छ भने राजनैतिक पराजयबाट त्यस देश वा जातिको अस्तित्व नै सदाको लागि लोप हुन्छ। यस प्रकारका दृष्टान्तहरू विश्व–इतिहासमा प्रशस्त पाइन्छन्। यसै कारणले नै

संसारका समृद्धसे–समृद्ध र शक्तिशाली से शक्तिशाली देशहरू पनि सांस्कृतिक पराजयदेखि सदैव सतर्क र भयभीत भएर रहेका हुन्छन्।

हाम्रो नेपाल प्राचीनकालदेखि नै एक स्वतन्त्र हिन्दूराष्ट्रको रूपमा रहँदै आएकोले नेपाली संस्कृतिको मूल–आधार पनि यद्यपि वेद र श्रुतिस्मृत्यादिमूलक हिन्दूसंस्कृति नै हुँदै आएको छ तापनि यसले वर्तमान समयसम्ममा आफ्नो अलग स्वरूप ग्रहण गरिसकेको छ। कारण, हाम्रो नेपाली संस्कृतिको जुन वर्तमान स्वरूप छ, यो पनि विभिन्न जाति वा जनसमुदायहरूको विभिन्न सामाजिक विशेषताहरूको मेलबाट बनेको छ र यसको निर्माणमा विभिन्न जाति वा जनसमुदायले प्रत्यक्ष वा परोक्ष रूपमा योगदान दिएका छन्। नेपाली इतिहासको एक विशेषता यो छ कि, यहाँ आदि-कालदेखि नै विभिन्न विचारधारा र विभिन्न सामाजिकव्यवस्था भएका अनेक जनसमुदायको बसो–बास भएतापनि यहाँ कहिल्यै पनि जातिगत वा सम्प्रदायगत विरोध भएन। जब जब नयाँ नयाँ विचार-धारा भएका नयाँ नयाँ जातिहरूले नेपालमा प्रवेश गरे, उनीहरू बडो मिलनसारभई नेपाली समाजमा नै मिले र यहाँका मूल निवासीहरूसंग हेल–मेल गर्दै गए। तर यसबाट यहाँको सामाजिक नियमहरू र जीवन–प्रणालीमा भने प्रत्यक्ष वा परोक्ष रूपमा केही न केही उनीहरूको सामाजिक र बौद्धिक विशेषताहरूको प्रभाव अनिवार्य रूपले पर्‍यो र यहाँका स्थानीय निवासीहरूले पनि थाहा पाई वा नपाई यस प्रभावलाई स्वीकार गर्दै गए। यसरी शताब्दियौंदेखिको विभिन्न जाति-हरूको पारस्परिक सहयोग, आदान–प्रदान र उनीहरूको आचार-विचारहरूको मेलबाट वर्तमान नेपाली संस्कृतिको निर्माण भएको छ। यसैले नै आज नेपाली मात्रको आचार–व्यवहार, रीति रिवाज र आमोद–प्रमोदहरू प्रायः एकै छन् र सामाजिक आदर्श र विचारपद्धति पनि लगभग एउटै छ। यसै सांस्कृतिक एकताले नै आज कुनै एक नेपालीको हर्षमा सबै नेपालीलाई हर्ष र कुनै एकको दुःखमा सबैलाई

दुःखको अनुभव हुन्छ ।

यस प्रकार हाम्रो सांस्कृतिक एकता सुदृढ बनेको हुनाले यसबाट हाम्रो राष्ट्रिय एकतालाई ठूलो बल मिलिरहेको छ। यस स्थितिमा आफ्नो संस्कृतिको आदर गर्नु हामी प्रत्येक देशभक्त नेपालीको कर्तव्य हुन आउँछ। यसैले आज हामी सबैको मुख्य कर्तव्य छ– आफ्ना परम्परागत आचार व्यवहारहरू रीति-रिवाजहरू र वेष-भूषा आदिको आदरसाथ पालना गर्नु र यसो गर्नुमा नै आफ्नो गौरव सम्झनु। यसबाट नै हाम्रो हृदयमा शान्ति मिल्दछ र जीवन सफल बन्दछ । शास्त्रको मर्यादा पनि यही नै छ।

# प्राणायाम

लेखक— प्रा. हरिनाथ उपाध्याय ढुङ्गेल
(वाल्मीकि संस्कृत महाविद्यालय)

ॐनमो योगेश्वराय गुरवे ॥ मान्य विद्वज्जनहरूले मलाई प्राणायामको विषयमा लेख लेख्न अनुरोध गर्नु भएकाले म त्यस विषयमा अल्पज्ञ भए तापनि जसले मलाई सिकायो, उनै गुरुदेवको चरणारविन्दको ध्यान गरी आज्ञा शिरोपर गर्दछु ।

यो सुनेर वा हेरेर मात्र आनन्द आउने विषय होइन । प्रक्रियाहरू सजिलोसँग र यथार्थरूपले बुझी कार्यरूपमा परिणत गरी अभ्यास र अनुभव समेत गर्नु पर्ने विषय हो । अनेक भूमिका बाँधी लेखाइको सौन्दर्यतिर दौडनु "काम काज एकातिर कुम्लो बोकी ठिमीतिर" भने जस्तो हुनेछ । अतः विद्वान् अनुभवी गुरुको उपदेश बमोजिमको प्रक्रिया र आफ्नो अनुभव मात्र दर्शाउने प्रतिज्ञा गर्दछु ।

"यम नियम आसन प्राणायाम प्रत्याहार धारणा ध्यान समाधि" योगका यी आठ अङ्गहरूमध्ये प्राणायाम चतुर्थ अङ्ग हो । यम नियमको पालन र आसनसिद्ध भएपछि मात्र प्राणायाममा अधिकारी हुन्छ । ब्रह्मचर्यहीन व्यावहारिक प्रपञ्चमा अतिप्रवृत्त अतिपरिश्रमी घाममा ज्यादा हिड्नु पर्ने पराधीन मद्यमांससेवी जन्मसिद्ध रोगीहरू यसमा प्रगति गरी सफल हुन सक्तैनन् ।

"अथासने दृढे योगी प्राणायामं समभ्यसेत्" आसन सिद्ध भए पछि मात्र प्राणायामको अभ्यास गर्नू' भन्ने शास्त्रको उपदेश छ । आसन अनेक छन् , ती सबैको आवश्यक प्राणायाममा पर्दैन । केवल सिद्धासन र पद्मासनको अभ्यास गरे पुग्दछ ।

हुनत सर्वप्रथम "नेति, धौति, वस्ति, कपालभाति, नौलिकी, त्राटक" यी षट्कर्मबाट घटशुद्धि ( देहशुद्धि ) समेत गरी प्राणायामको अभ्यास आरम्भ गरेमा अति चाँडो सिद्ध हुन्छ, त्यो उत्तम पक्ष हो तापनि सर्वसाधारण योगी र गृहस्थका निमित्त यी अन्यथासिद्ध छन्।

प्राणायाम शुरु गर्नु भन्दा पहिले "मूलवन्ध, जालन्धरबन्ध, उड्डीयानवन्ध" यी तीन वन्धको राम्ररी अभ्यास गरिसकेको हुनुपर्दछ। सिद्धासन वा पद्मासन गर्दा गुदद्वारलाई दृढता पूर्वक संकोच गरीराख्नु 'मूलबन्ध' हो। च्यूँडोलाई कण्ठकूपमा दृढता पूर्वक राखी जतिबेरसंम पनि रहनसक्नु 'जालन्धरवन्ध' हो। नाभिस्थानको तल र माथि आठ अङ्गुल पेट सेप्ल्याई मेरुदण्डमा मिलाएर विस्तारै छोड्ने अभ्यास गर्नु 'उड्डियानवन्ध' हो।

यी तीन वन्ध सिद्ध भएपछि आहारशुद्धि, कालशुद्धि, स्थानशुद्धि, आसनशुद्धि र नाडीशुद्धि नगरिहुँदैन, गर्नै पर्दछ। अनि मात्र प्राणायाम सफल हुन्छ।

## आहारशुद्धि

लसून प्याज, हाँस कुखुराहरूका फुल, मद्य मांस आदि अमेध्य पदार्थ र अरू अहविष्य पदार्थहरू पनि सेवन गर्नु हुँदैन। अतिपीरो, अतिअमीलो, अतितीतो, अतिचीसो, अतितातो, वासी, भुटेका दुर्जर पदार्थहरू तीक्खर शागहरू, कुभिण्डो, लौका, हीङ, इत्यादिको सेवन पनि निषिद्ध छ।

मार्सी वा अरू हविष्य चामलको भात, जउ वा गहूँका रोटी, मूगका छाँटाको दाल, पर्वर, कुरिलो, केरा, मेथी, लूँडे, वेथे, धनियाँ, आलु इत्यादिको नूनचर्को र पीरो नहालेको तर्कारी, गाईको दूध, घिउ, मोही र सुन्तला, केरा, अनार, चाक्सी, अङ्गूर इत्यादि फलहरू, तताएर सेलाएको वा निर्दोष सफा पानीको सेवन गर्नुपर्दछ। मिताहार ( आधापेट मात्र खाने , गर्नु पर्दछ। शुरुमा निराहार वा कुसमयमा

भोजन गर्नु हुँदैन। विहान वेलुका ठीक समयमा हित मित मेध्य आहार गर्नुपर्दछ। उपवास र कायक्लेश ज्यादा गर्नु हुँदैन। पेट सफा राख्नु पर्दछ। मल सञ्चित रहनु हुँदैन।

### कालशुद्धि

हेमन्त, शिशिर, ग्रीष्म, वर्षा यी ऋतुमा प्राणायामको आरम्भ र आरब्धको पनि अभ्यासमा वृद्धि गर्नु हुँदैन, गरे रोग लाग्दछ। यो कुरा प्रत्यक्ष छ।

वसन्त र शरद् ऋतु=अर्थात् फाल्गुन, चैत्र, वैशाख, आश्विन, कार्तिक यी पाँच महीना उत्तम मानिएका छन्। त्यसमा पनि प्रातः कालमा शुरु गर्नु उत्तम छ। अनि प्रतिदिन ब्रह्मचारी, वानप्रस्थी, संन्यासी यी स्वतन्त्र व्यक्तिहरूका निमित्त प्रातःकाल, मध्याह्नकाल, सायंकाल र मध्यरात यी चार समय अटूट गर्दैजानु वेस छ। गृहस्थ र आर्जे र जीवननिर्वाह गर्नु पर्ने साधारण व्यक्तिका निमित्त चाहिँ प्रातः सायंकाल दुई बखत मात्र गरे हुन्छ। सकिन्छ भने र निद्राकमप्रकृतिको मानिस भए मध्यरातमा पनि गर्नु अति उत्तम छ।

### स्थानशुद्धि

खलबल र जनसमूह नभएको एकान्त पवित्र स्थान हुनु पर्दछ। हावा बन्द भएको, दूषित हावा आउने, धुवाँ आउने, अति हावा लाग्ने, चर्को घाम लाग्ने, लामखुट्टे, भुसुना, उड्स, उपियाँ, झीङा र अरू कीराहरूले बाधा गर्ने ठाउँ हुनुहुँदैन।

### आसनशुद्धि

कुशासन, मृगचर्म बागम्बर, कम्बल वा अरू कुनै पवित्र आसन हुनु पर्दछ।

### नाडीशुद्धि

प्राङ्मुख वा उदङ्मुख भै पूर्वोक्त आसन मध्ये जो मिल्छ त्यस

माथि सिद्धासन वा पद्मासन बाँधी बस्नू र पहिले भस्त्रिका गरी अर्थात् दक्षिणनासापुट बन्द गरी वामनासापुटबाट खलाँतीले जस्तै वायु तानी विनाकुम्भक दशिणनासापुटबाट वेगले छोडिदिनू, यसरी आठ पटक गर्नू र अनि फेरि दक्षिणनासापुटबाट वायु तानी वामनासा पुटबाट वेगले ८ पटक छोडिदिनू· भित्री दूषित वायु फ्याँकिन्छ। विशुद्ध वातावरण छ भने भस्त्रिका नगरे पनि हुन्छ।

१. साधक अवस्थाको आरम्भमा चाहिँ सिद्धासनै बाँधी बस्नू, अर्थात् वायाँ गोडाको कुर्कुच्चो गुदद्वारको माथि, अण्डकोश भन्दा मनि बीच भागमा दृढता पूर्वक राख्नू र दायाँ गोडाको कुर्कुच्चो चाहिँ लिङ्ग भन्दा माथि दृढता पूर्वक राखी मेरुदण्ड सीधा पारी भ्रूमध्यमा दृष्टि लगाई बस्नू। ठीक आसन जमेपछि पहिले वायुवीज धूम्रवर्ण 'यं' वीजको ध्यान गर्नू।

अनि दायाँ हातको बूढी औंलाले सूर्यनाडी पिङ्गला (दायाँ नाकको प्वाल) बन्द गर्नू र चन्द्रनाडी इडा (वामनासापुट) बाट पूर्वोक्त 'यं' बीजको ८ आठ पटक मानसिक जप गर्दै विस्तारै श्वास तानी पूरक गर्नू। यसमा मूलवन्ध ठीक रहनु पर्दछ। अनि कनिष्ठिका र अनामिकाले वामनासापुटवाट बन्द गरी 'मूलवन्ध' का साथै 'जालन्धरवन्ध' बाँधी ३२ पटक मानसिक जपकालसंम कुम्भक गर्नू श्वास रोक्नू)। अनि दक्षिणनासापुट मात्र खोली १६ पटक मानसिक जपकालसंम मूलबन्धकासाथै 'उड्डीयानबन्ध' बाँधी विस्तारै विस्तारै श्वास छोडी रेचक गर्नू।

छिटो छोड्नाले वा वेगले छोड्नाले अथवा मुखबाट श्वास छोड्नाले दमको बेमारी हुने संभव हुन्छ। अज्ञानवश यसो हुँदा केही कालसंम कोहीलाई विपरीत फल पनि अनुभव भएको थाहा भएको छ।

२, त्यसपछि नाभिमूलमा त्रिकोण रक्तवर्ण अग्निवीज 'रं' को ध्यान गर्नू र अनामिका र कनिष्ठिकाकले वामनासापुट बन्द गरी सुर्य-

नाडी दक्षिणनासापुटबाट पूर्वोक्त अग्नि बीजको मानसिक आठपटक जपसंख्याद्वारा पूरक, ३२ जपकालसंम कुम्भक, १६ जपकालद्वारा बिस्तारै चन्द्रनाडी वामनासापुटबाट रेचक गर्नू ।

३, त्यसपछि पुनः नासाग्रभागमा कलापूर्णचन्द्रबिम्बको ध्यान-गरी 'ठं' बीज आठ पटक जप्दै मूलबन्धका साथ चन्द्रनाडीद्वारा पूरक गर्नू ३२ पटक 'वं' बीजको जपकालसंम जालन्धरबन्ध बाँधी कुम्भक गर्नू र अमृतप्रवाहले सम्पूर्ण नाडीहरू पखालिएको संझदै जालन्धर-बन्ध खोली 'लं' बीजको १६ पटक जपसंख्याकालद्वारा उड्डियानबन्ध बाँधी सूर्यनाडीद्वारा रेचक गर्नू । यसरी प्रथमदिन नाडीशुद्धि गरेपछि प्राणायाममा स्थिरता आउँछ । अनि प्रणवादि मन्त्रद्वारा प्राणायाम गर्न शुरु गरिन्छ ।

जसरी झ्यालीको नलीद्वारा दूध वा पानी विस्तारै विस्तारै तानी पान गरिन्छ, त्यसरी नै वायुलाई विस्तारै विस्तारै तान्दै पान गर्नुपर्दछ । चाँडो तानेमा फोक्सोमा आघात पर्दछ र कुम्भक नियमित कालसंम अड्न सक्तैन । हानि पनि हुने संभव हुन्छ ।

त्यस्तै रेचक क्रिया पनि चाँडो गर्नाले फोक्सोमा र नाडीहरूमा क्षोभ पैदाभई सारा अङ्ग प्रत्यङ्गमा दर्द हुने संभव हुन्छ । अतः साधक अवस्थामा भित्री पार्श्वभागमा दर्द हुन्छ तापनि सहँदै आन्तरिक बलद्वारा विस्तारै विस्तारै नियमित मात्राकाल बमोजिम नै रेचक गर्नु-पर्दछ, एक्कासी महाप्राण ( सूँ ३ ) गरी छोड्नु हुँदैन ।

आरम्भकालमा नै साधकहरूले उत्तम कक्षाको प्राणायाम अर्थात् १६ प्रणव जप कालद्वारा पूरक, ६४ प्रणव जपकालसंम कुम्भक, ३२ प्रणव जपकालद्वारा रेचक गर्ने हठ गर्नुहुँदैन । केही दिन कनिष्ठ प्राणायामको अभ्यास गर्नू, त्यसमा अनायास सफल भएपछि मध्यम-कक्षाको प्राणायामको केही दिन अभ्यास गर्नू । अनि त्यसमा पनि अनायास सफलता प्राप्त गरेपछि, प्रतिदिन तोकिएको समयमा उत्तम-कक्षाको प्राणायामको अभ्यास अविच्छिन्न रूपले गर्नु लाभदायक छ ।

अतः साधक अवस्थामा निम्न तालिका अनुसार अभ्यास बढाउँदै लैजानु सुगम र लाभदायक हुनजाने छ ।

कनिष्ठ प्राणायाम तालिका

| | पूरक | कुम्भक | रेचक |
|---|---|---|---|
| प्रथम दिन :— | ४ | १६ | ८ |
| द्वितीय दिन :— | ६ | २४ | १२ |
| तृतीय दिन :— | ८ | ३२ | १६ |

मध्यम प्राणायाम तालिका

| | | | |
|---|---|---|---|
| ” ” | १० | ४० | २० |
| ” ” | १२ | ४८ | २४ |

उत्तम प्राणायाम तालिका

| | | | |
|---|---|---|---|
| ” ” | १६ | ६४ | ३२ |

केही दिनमा यो उत्तमकक्षाको प्राणायाम अनायासले हुनसक्ने भएपछि शक्ति अनुसार कुम्भकमा चाँहि वृद्धि गर्नुहुन्छ, तर पूरक र रेचक प्रक्रिया चाहिँ यही बमोजिम नै गर्नु पर्दछ भन्ने गुरू उपदेश छ ।

एकैदिन एकैपटकमा बलात्कार अधिक समयसंम कुम्भक गर्ने हठ कदापि नगर्नू । यस्तो गर्नाले फोक्सोका रक्तवाहिनी सूक्ष्म शिरा छिन्न भै मुखबाट रगत आउने संभव हुन्छ । कदाचित् त्यस्तो हुन गयो भने–महीनादिन जति प्राणायाम बन्द गरी आराम लिनू, आफसे-आफ शिरासंधान भै निको हुन्छ, केही डराउनु पर्दैन । अनि फेरि नियमित श्रम र संख्या बमोजिम उत्तमकक्षाकै प्राणायाम गर्नू, शरीरमा बल फूर्ति कान्ति बढ्दै जान्छ । पूर्वोक्त रोगको पुनरावृत्ति हुँदैन । त्यो अज्ञानले हुन गएको विघ्न हो, रोग होइन । प्रतिदिन कुम्भकको समय सेकेण्डका हिसाबले विस्तारै विस्तारै बढाउँदै लैजानु पर्दछ ।

प्रातः काल, मध्याह्नकाल, सायङ्कालमा र मध्यरातमा प्रतिदिन ५ पाँच संख्याका दरले वढाउँदै लगी क्रमशः सूर्यनाडी, चन्द्रनाडी दुवै चलाई एक दिनमा ३२० प्राणायाम गर्न सक्ने हुनुपर्छ भन्ने उत्तमोत्तम प्राणायामको विधान छ। यसमा करीव ६ घण्टा लाग्छ। तर यो साधारण योगीजन र गृहस्थका निमित्त असंभव हुन्छ। अतः उनीहरूले 'प्रातः सायं' दुई पटक मात्र गर्नू, सकिन्छ भने मध्यरातमा पनि गर्नु अति लाभदायक छ। प्राणायाम गर्दा शरीर गरमाई पसीना आउँछ; पछि रुमालले पुछिदिनू, शरीर फूलको थुङ्गो जस्तो हलुका हुन्छ।

प्राणायाम शारीरिक र मानसिक दुवै क्रिया हो। प्राणायाम बराबर शरीरशुद्धि गर्ने र मनः शुद्धि गर्ने उपाय अरू कुनै छैन। यसले मनलाई तह लगाउँछ। शास्त्रोक्त त्रिदण्ड मध्ये एक यो मनोदण्ड हो। जस्तो कोर्रा हान्नाले घोडा तहमा आउँछ, त्यस्तै मन चञ्चल भएमा प्राणायाम गर्नू, कोर्रा हाने जस्तो भै चाञ्चल्य छोडी मन स्थिर हुन्छ, साथै स्वच्छ पनि हुन्छ। प्राणायामको अभ्यासबाट ज्ञानको अवरोधक अज्ञानरूप आवरण नष्ट हुन्छ, बौद्धिक विकास र स्मरणशक्ति बढ्छ, आत्मबल बढ्छ, निर्भयता आउँछ।

प्राणायाम भन्दा ठूलो तपस्या अरू कुनै छैन। प्राणायाम गर्नाले गङ्गा यमुना सरस्वतीको संगम तीर्थराज प्रयागमा स्नान गरेको भन्दा वढी पुण्य हुन्छ। हरेक कर्मको प्रायश्चित हुन्छ। कुनै आचार्यले भनेका छन् :— "आसनेन रुजो हन्ति प्राणायामेन पातकम्"। मन स्थिर स्वच्छ र आनन्द युक्त हुन्छ। वीर्यस्तम्भन हुन्छ, कामवासना घट्दछ र हट्दछ पनि। भोक, प्यास, निद्रा ग्लानि कम हुन्छ। चेहरा उज्ज्वल हुन्छ।

अधिकारको अनुरूप 'समन्त्रक' र 'अमन्त्रक' दुई किसिमको प्राणायामको विभाजन गरिएको छ। प्रणवादि मन्त्र जपपूर्वक गर्नु समन्त्रक प्राणायाम हो। विनामन्त्र केवल निर्दिष्ट संख्याको अनुसार गर्नु अमन्त्रक प्राणायाम हो।

विधिपूर्वक उपनयनादि संस्कार भएकाले बीज र प्रणवादि मन्त्र जपपूर्वक प्राणायाम गर्नू । उपनयनादि संस्कार नहुनेले चाहिँ अमन्त्रक निर्दिष्ट संख्यानुसार इष्टदेव देवीको ध्यानपूर्वक प्राणायाम गर्नु श्रेयस्कर छ।

प्रणवले प्राणायाम गर्ने विधिः— पवित्र आसनमा पद्मासन गरी बस्नू र 'अ' कार रूप रजोगुणी रक्त शुक्ल वर्ण मिश्रित कमलासन चतुर्मुख ब्रह्मालाई नाभिस्थानमा ध्यान गर्दै मूलबन्ध बाँधी दायाँ हातको बूढी औंलाले दक्षिण नासापुट बन्द गरी १६ पटक प्रणवको जप संख्याद्वारा वामनासापुटवाट श्वास तानी पूरक गर्नू, अनि 'उ' काररूप तैजस नीलकमल सदृश वर्ण, सूर्य मण्डल मध्यस्थित चतुर्बाहु नारायणको हृदय पुण्डरीकमा ध्यान गर्दै ६४ पटक प्रणव जपकालसंम मूलबन्धका साथै जालन्धरबन्ध बाधी अनामिका र कनिष्ठिकाले वाम नासापुट बन्द गरी श्वास रोकी कुम्भक गर्नू; अनि 'म' कार रूप शुद्ध स्फटिक वर्ण त्रिनेत्र धारी शङ्करको भ्रूमध्यमा वा ललाटमा ध्यान गर्दै ३२ पटक प्रणवजपसंख्याकालद्वारा दक्षिणनासापुट मात्र खोली त्यसबाट उड्डीयानबन्ध गरी बिस्तारै रेचक गर्नू ।

कसैको मतमा पूरक गर्दा नाभिस्थानमा विष्णुको ध्यान, कुम्भक गर्दा हृदयमा ब्रह्माको ध्यान भन्ने छ, आफ्नो इच्छानुसार गरे हुन्छ ।

चन्द्रनाडीद्वारा पूरक गर्नु अनुलोम, सूर्यनाडीद्वारा पूरक गर्नु विलोम प्राणायाम प्रक्रिया हो । प्रत्येक प्राणायाममा अनुलोम, विलोम दुवै गर्नुपर्दछ । अनुलोम, विलोमबाट एक प्राणायाम हुन्छ । कसैको मतमा दिनको चार पटक पाँच आवृत्ति गर्दा २० पटकमा एक प्राणायाम हुन्छ भन्ने पनि छ । जे होस् गृहस्थले चाहिँ विहान बेलुका संध्याकालमा अनुलोम विलोम प्राणायाम दुवै गर्नू, त्यतिले मात्र पनि अतिलाभदायक हुन्छ ।

आर्य संप्रदायमा हाम्रा ऋषि महर्षि पूर्वाचार्यहरूले आफ्ना सन्ततिहरूलाई उपनयनका साथै अनिवार्य रूपले अष्टाङ्गयोग सिकाउने गरेको स्पष्ट देखिएकै छ । किनकि उपनीत वटुलाई अहिंसा सत्य अस्तेय ब्रह्मचर्य अपरिग्रह रूप यम र शौच संतोष, तपः स्वाध्याय ईश्वर प्रणिधान रूप नियम पालन गर्ने प्रतिज्ञा गराइन्छ । त्यसपछि अहरहः (प्रतिदिन) ब्राह्ममुहूर्तमै उठाई प्रातःस्तुति गर्न लगाई स्नान शौचादि कर्म सकेपछि त्रिकाल वा प्रातः सायंकाल मृगचर्म कुशासन आदि पवित्र आसनमा बसाई सिद्धासन वा पद्मासन बँधाई सव्याहृतिक सशिरस्क गायत्री मन्त्रद्वारा प्राणायाम गराइन्छ ।

अनि बाह्य विषयतिर चित्त दौडन नदिई खिचेर राख्नु 'प्रत्याहार' कर्म गराई गायत्रीको स्वरूपमा मात्र चित्त लगाउनु रूप देशबन्ध 'धारण' गराई एकाग्र चित्तावृत्तिद्वारा भर्गरूपा गायत्रीको मात्र चिन्तन रूप 'ध्यान' गराइन्छ । त्यस बखत उनीहरूलाई जपकालसंम "तदेवार्थ मात्र निर्भासं स्वरूपशून्यमिव समाधिः" सहजै हुन्थ्यो ।

यसर्थ द्विजजाति पूर्वोक्त अष्टाङ्ग योगद्वारा ब्रह्मवर्चस्वी र शक्तिशाली हुन्थे । ब्रह्मचारी गृहस्थ सबै योगी हुन्थे । आज भोलि संन्यास लिएकालाई मात्र 'योगी' भन्ने चलन छ । यसमा कारण "संयोगो योग इत्युक्तो जीवात्मपरमात्मनोः" यस सिद्धान्तको अनुसार चतुर्थाश्रमी संन्यासीहरू जीवात्मालाई परमात्मामा संयोग गराई "अहं ब्रह्मास्मि" भावना गर्दछन्, तसर्थ उनीहरूलाई मात्र योगी भन्ने भएको हो ।

सज्जन सदाचारी ब्राह्मणहरूको कुलपरम्परामा अद्यावधि योगविद्याको ज्ञान देखिंदैछ । तर अपशोच ! अपशोच !! अपशोच !!! आज भोलिको परिस्थितिले गर्दा उपनयन कर्म गरिंदैछ तापनि त्यो देखौवा नामको मात्र हुन गयो । नियम पालन गर्ने र गराउन सकिने समयले पल्टा खायो । जसले नियम पालन गर्दछन् र गराउन खोज्दछन्,

उनीहरू विचरा अप्रगतिशील र प्रतिक्रियावादीको कलङ्कभागी हुन थाले।

अतः अष्टाङ्ग योग सहज र सुबोध विषय थियो तापनि दुर्बोध "कुन चिडियाको नाम हो हूँ" भने जस्तो हुन गयो। यस भन्दा अपशोच अरू के ?।

पुनश्चः— प्राणायामको प्रक्रिया आठ प्रकारका छन्,—सहित, सूर्यभेद, उज्जायी शीतली, भस्त्रिका, भ्रामरी, मूर्च्छा।

सहितः— अनुलोम विलोम क्रिया, अर्थात्–इडाबाट पूरक गरी कुम्भक गर्नू र पिङ्गलाबाट रेचक गर्नू; त्यस्तै पिङ्गलाबाट पूरक गरी कुम्भक गर्नू र इडाबाट रेचक गर्नू सहित प्राणायाम हो।

सूर्यभेदः— सर्दी लागेमा पिङ्गलाबाट पूरक गरी सकेसंम कुम्भक गर्नू, शरीर ताती पसीना आएपछि इडाबाट रेचक गर्नू, यो सूर्यभेद प्राणायाम हो। यसबाट शरीर तुरुन्त तातो हुन्छ।

उज्जायीः— दुवै नासापुटबाट वायु खिच्नू र मुखभित्र धारण गरी हृदयस्थित प्राण वायुलाई पनि खिची मुख मण्डलमै दुवैको संमेलन गराई 'जालन्धरबन्ध' बाँधी यथाशक्ति कुम्भक गर्नू र विस्तारै छोडि दिनू, उज्जायी प्राणायाम हो।

यसो गर्नाले कफवात प्रकोपबाट हुने मन्दाग्नि अजीर्ण, कब्जियत जलोदर आदि उदर सम्बन्धी रोगहरू नष्ट हुन्छन्।

शीतलीः— काकी मुद्रा गरी जिह्वाग्रले सीत्कार पूर्वक शुद्ध वायु पान गर्नू र यथाशक्ति कुम्भक गरी दुवै नासापुटबाट विस्तारै छोडि दिनू।

यसबाट भोक प्यास आलस्य निद्रा ग्लानि सम हुँदै जान्छन् र पित्त शमन पनि हुँदै जान्छ।

भस्त्रिकाः— सिद्धासन वा पद्मासनमा बसी वाम नासापुटबाट खलाँतीले जस्तै वायु तानी विना कुम्भक दक्षिण नासापुटबाट वेगले

छोडि दिनू ; यस्तो आठ आठ पटक गर्नू र फेरि दक्षिण नासापुटबाट पूर्ववत् तानी वाम नासापुटबाट वेगले छोडि दिने काम आठ पटक गर्नू । अनि विधिपूर्वक पूरक कुम्भक रेचक गर्नू, कुम्भकमा सुविधा हुन्छ र शरीर पनि आरोग्य रहन्छ ।

भ्रामरीः— आधा रातमा चकमन्द भएपछि सिद्धासन वा पद्मासन बाँधी बस्नू र दुवै हातका बूढी औंलाले दुवै कानका प्वाल टम्मसँग बन्द गर्नू, अथवा षण्मुखी मुद्रा नै गरी कुम्भक गर्नू 'अन्तर्नाद' खुल्दछ । पहिले आँधीबेरी आए जस्तो आवाज अनि मेघ, झर्ना, घण्टा ढोलक झयाली, शङ्ख कर्नाल, मादल, बाँसुरी, भ्रमरगुञ्जन इत्यादि नादहरू सुनिन थाल्दछन् । नित्य यसको अभ्यास गर्नू चित्त त्यसमै रमाउँछ, अनि वखत वखतमा ज्योति झल्कन थाल्दछ । त्यसमै चित्त लगाउनू, सारा विश्व नै ज्योतिर्मय बन्दछ, अरू केही भान हुँदैन । 'चित्' स्वरूप ब्रह्म साक्षात्कार त्यही हो भने पनि हुन्छ ।

मूर्च्छाः— सिद्धासनमा बसी दुवै नासापुटबाट पूरक गरी कुम्भक गर्नू र भ्रूमध्य भागमा ज्योति रूप परमात्माको ध्यान गर्दै मन स्थिर राख्नू, परमानन्दको अनुभव हुन्छ । यो प्रक्रिया उत्तानो परी सुतेर गरे पनि हुन्छ, मन मूर्च्छित हुन्छ र परमानन्दमा पुगिन्छ । अन्त्यावस्थामा अशक्त भए यसले ठूलो काम देला जस्तो लाग्दछ ।

केवलीः— अजपा गायत्रीको जप गर्दै श्वासोच्छ्वासको गति सीमित गराउँदै लैजानु केवली प्राणायाम हो ।

इडैव गङ्गा, यमुना तु पिङ्गला, सरस्वती ज्ञानमयी सुषुम्णा ।
संभेद आसां कथितः प्रयागः, पुनातु मां भ्रूगततीर्थराजः ॥

यो मेरो निजी रचना र दैनिक भावना हो ।

ॐनमो योगेश्वराय गुरवे

शुभम्

# संस्कृत साहित्यमा रस–एक विवेचना

— सिद्धिनाथ गौतम

मानवजातिको विकासक्रममा विभिन्न मनोरञ्जनका साधनहरूको पनि खोजी र विकास हुँदैजाँदा विवेक एवं तर्कशील मानवले अनुकरण अभिनय आदिबाट आनन्दयुक्त भई त्यस्तो आनन्ददायी पदार्थ कसरी कहाँ छिपेको छ र त्यसको संज्ञा के हुन सक्ला भनी धेरै विचार विवेक र अनुसन्धान गर्दै जाँदा त्यही नै आनन्द साहित्यिक परिभाषामा 'रस' संज्ञामा परिणत हुन गयो। यसरी पत्ता-लगाइएको रसको व्युत्पत्ति परिभाषा आदिका सन्दर्भमा—जुन आस्वादन गरिन्छ केवल स्वाद मात्र लिइन्छ, जसको स्वरूपादिको निर्वचन हुनसक्तैन, त्यस्तो सहृदयसंवेद्य अर्थात् सहृदयहरूद्वारा मात्र जान्न या स्वादलिन सकिन्छ त्यही नै रस हो। किन भने—व्याकरण-शास्त्र अनुसार 'रस्यते-आस्वाद्यते इति रसः' यस किसिमसंग रस शब्दको व्युत्पत्ति हुन जान्छ। यसरी रस शब्दको व्युत्पत्ति भइसके पछि परिभाषा हुन थाल्यो। कसैले भने—'भाव्यमानो विभाव एव रसः' भाव्यमान विभाव नै रस हो। कसैले भने—'अनुभावस्तथा' अनुभाव नै रस हो। त्यसमा पनि सहमत नभई कोही भन्दछन्—'व्यभिचार्येव तथा तथा परिणमति' व्यभिचारी भाव नै रसरूपमा परिणत हुन्छ। फेरि कसैले चाहिं भने —"त्रिषु य एव चमत्कारी स एव रसः अन्यथा त्रयोऽपि न।" विभावादि तीनमा जुन चमत्कारजनक हुन्छ, त्यही नै रस हो नत्र तीनैवटा रस हुन सक्तैनन्। क्रमशः यी ४ मतको आविर्भाव पछि रति आदि स्थायीभावको ज्ञानका साथ रस शृङ्गार आदि नौ भागमा विभक्त भयो।

यस पछि यौटै वस्तु अनेक रसको विभाव, एकै अनुभाव अनेक

रसको अनुभाव र एकै व्यभिचारी अनेक रसको व्यभिचारी हुन-सक्ने भई अव्यवस्था हुन जाने भयो र 'विभावादयस्त्रयः समुदिता रसाः' । विभावादि तीनैको समूह नै रस हो भन्ने यस्तो सिद्धान्त निस्कियो । अनि धेरै रसका एकै विभावादि हुन नमिल्ने अवस्था हुन-गयो ।'

उपर्युक्त विकासक्रम पछि नाट्यशास्त्रका प्रणेता भरतमुनिको आविर्भाव भयो र 'विभावानुभावव्यभिचारिसंयोगाद्रसनिष्पत्तिः' यस सिद्धान्त अनुसार विभाव, अनुभाव र व्यभिचारीभावको संयोगबाट नै रसको उत्पत्ति मानी उक्त सबै मतहरूको खण्डन गरियो । यस किसिमको भरतमुनिको सूत्रबद्ध परिभाषामा सबै विद्वान्हरू सहमतभई आफ्ना आफ्ना ढंगले व्याख्या गर्न लागे । मुख्यतः— रसको ज्ञान प्रत्यक्ष, अनुमान र शाब्द कुन किसिमको हुन्छ र रस अनुकार्य, अनुकर्ता र सहृदय कसमा रहन्छ यिनै दुइ कुरामा प्रकाश पार्न प्रयत्न गरे ।

( १ ) व्याख्याकार आचार्य भट्टलोल्लट भन्दछन्—रस वस्तुतः अनुकार्य–रामादिमा रहन्छ; तर रामादिको आरोपबाट अनुकर्ता नटादिमा पनि रहनसक्तछ । यिनको मत अनुसार 'सीता विषयक रतियुक्त यो नट राम हो' यस रूपबाट हुन्छ, जो प्रत्यक्षात्मक हुन्छ र 'सुरभिचन्दनम्' मा जस्तै अगाडि उपस्थित विशेष्यरूप नटको अंशमा लौकिक र अगाडि अनुपस्थित सीतादिको अंशमा अलौकिक हुन्छ । यो व्याख्या मीमांसादर्शनको अनुकूल मानिन्छ ।

( २ ) अर्का व्याख्याकार आचार्य श्री शङ्कुकलाई उक्त भट्टलोल्लटको व्याख्या मनपरेन । यिनले स्वयं आफैंले व्याख्या गरेकि-- संसारमा ज्ञान चार प्रकारका हुन्छन् । सम्यग्ज्ञान, मिथ्याज्ञान, संशयज्ञान, र सादृश्यज्ञान । 'यी राम नै हुन्, । 'यी नै राम हुन्', 'यी राम हुन् नै' यी तीन किसिमका ज्ञानबाट रामको सम्यग्ज्ञान र राम-

भिन्नको निवारण हुन्छ; जसलाई क्रमशः —अयोगव्यवच्छेद, अन्ययोग-व्यवच्छेद, र अत्यन्तायोगव्यवच्छेद भन्दछन्। यी सबै सम्यग्ज्ञान भित्र पर्दछन्। रामभिन्नमा 'यी राम हुन्' भन्ने ज्ञानहुनु मिथ्याज्ञान हो। 'यी राम हुन् वा होइनन्' यस्तो सन्देहास्पदज्ञान संशयज्ञान हो। 'यी राम तुल्य छन्' भन्ने यस्तो ज्ञान सादृश्यज्ञान हो। तर अभिनय-कर्ता नटलाई देखेर 'यी राम हुन' भन्ने जुन ज्ञान हुन्छ यो उपर्युक्त चारै ज्ञानदेखि भिन्नहुन्छ। जस्तो चित्रमा घोडा देख्ता 'यो घोडा हो' भन्ने ज्ञानहुन्छ, त्यस्तै नै नटमा रामादिको ज्ञानहुन्छ। यस्तो प्रका-रको ज्ञानद्वारा अभिनय गर्न सिपालु नटको कुशल अभिनयद्वारा कृत्रिम ती विभावादि जो स्थायी भावका कारणादि रूपले रहेका छन्, ती स्वाभाविक हुन थाल्दछन्। अनि सहृदय सामाजिक अर्थात दर्शक आदि राम आदिमा रहेको सीतादिविषयक जुन रति (प्रेम) हो, त्यसको अभिनय निपुणनटमा अनुमान गर्दछन्। यसै अनुमानको नाम नै रस हो। यो व्याख्या अनुसार वास्तवमा रस अनुकार्य रामा-दिमा रहन्छ तापनि अनुमानद्वारा त्यसको आस्वादन सहृदयहरू गर्दछन। यसै कारण 'रस सामाजिकमा रहन्छ' भन्ने व्यवहार भइरहन्छ। न्यायदर्शनद्वारा प्रभावित यस मतमा ज्ञान प्रत्यक्षात्मक नभएर अनुमित्यात्मक सिद्ध भएको छ।

(३) भरतसूत्रका तृतीयव्याख्याता भट्टनायकलाई श्रीशङ्कु-कको मत उपयुक्त जँचेन र उनले आफ्नै किसिमको अर्कै व्याख्या गरे जुन यस प्रकार छः— अभिधा, भावना, तथा भोगकृत्व काव्यका तीन प्रकारका व्यापार हुन्छन्। प्रथम व्यापार अभिधाद्वारा वाच्यार्थको ज्ञान हुन्छ। दोस्रो व्यापार भावनाद्वारा अनुकार्य राम, सीता आदि नाटकीय पात्रको साधारणीकरण हुन्छ, अर्थात् रामत्व, सीतात्व आदि व्यक्तिविशेषको धर्मबाट अलग गरी नायक, नायिका आदिको रूपमा उपस्थित गराइन्छन। भोगकृत्व व्यापारद्वारा रसको अनुभव हुन्छ। जुन भोगकृत्व व्यापारमा रहेको भोग हो, त्यो परमार्थतः आत्मानन्दको

विश्राम नै हो। त्यसो हुँदा रस सामाजिकमा रहन्छ र त्यसको ज्ञान आत्मसाक्षात्कार रूप हुन्छ। यो सिद्धान्त सांख्यदर्शन अनुरूप मानिन्छ।

(४) भरतसूत्रका अर्का प्रसिद्ध व्याख्याकार अभिनवगुप्त-पादाचार्यको व्याख्या रस संवन्धमा सर्वाधिक मान्य हुन गएको छ। सबै अरू आचार्यहरूको मतमा असहमति जनाउँदै भन्दछन्. कि-विभाव, अनुभाव, तथा सञ्चारीभावद्वारा अभिव्यक्त अर्थात् व्यञ्जना-वृत्तिद्वारा ज्ञात हुने या भएको रति आदि स्थायी भाव नै रस हो। यस मतका अनुसार सामाजिकहरूको आत्मामा वासना रूपले रहेका आफ्ना ती रति आदि चित्तवृत्तिहरू नै रसरूपमा परिणत हुन्छन। यसरी यस मतमा ज्ञान 'तत्त्वमसि' इत्यादि वाक्यजन्यबोधमा जस्तै शाव्द भएर पनि साक्षात्काररूप हुन्छ।

यस किसिमसंग अलङ्कारशास्त्रहरूमा यी चार आचार्यहरूको व्याख्या एवं मत प्रदर्शनका साथ रसपदार्थको विवेचना गरिएको छ। यसै विषयमा केही नवीन विद्वान्‌हरूले तल उल्लेख भए अनुसार पनि व्याख्या गरेका छन्: काव्य नाटक आदिको श्रवण दर्शन आदिबाट विभावादिको ज्ञान हुन्छ र सहृदयहरू व्यञ्जनावृत्तिद्वारा रामादिमा-रहेको सीतादि विषयक रतिको ज्ञान गर्दछन। त्यसपछि सहृदयता-सहकृत बारंबार अनुसन्धानरूप भावनात्मक दोषद्वारा सामाजिक अथवा श्रोताहरूको अन्तरात्मा अज्ञानले ढाकिन्छ र त्यस्तो आत्मामा सिपीमा चाँदीको आभास भए जस्तै अनिर्वचनीय रति आदि स्थायी-भाव उत्पन्न हुन्छन्, र तिनको अनुभव सहृदयहरूको आत्मचैतन्यका साथ हुन्छ। तिनै रति आदि स्थायी भावको नाम रस हो।

फेरि अरू नै कुनै विद्वान् भन्दछन् रामादिका जुन सीतादि-विषयक रति आदि स्थायी भाव छन्, तिनीहरूको ज्ञानको लागि व्यञ्जनावृत्तिको जरूरत छैन र अनिर्वचनीय रति आदि स्थायीभाव-

कल्पनाको पनि दरकार छैन। अभिनयकर्ता र पाठकहरूको चेष्टा आदि-द्वारा सीता आदिको रति आदि रामादिमा अनुमित हुन्छन् र त्यस पछि उपर्युक्त भावनात्मक दोषद्वारा आफूलाई राम आदि सम्झने सहृदयहरूमा यौटा यस्तो भ्रम उत्पन्न हुन्छ कि—'म सीताविषयक रतिवाला राम हुँ'। यस किसिमको भ्रम नै रस हो।

यसरी पण्डितराज जगन्नाथले रसगङ्गाधरमा रसको विषयमा ११ मतको उल्लेख गर्नुभई धेरैजसो मतमा भरतसूत्रका अर्थको संगति पनि गराउनु भएको छ। प्रमुख चार आचार्यहरूको मतबाहेक अरू मतको उल्लेख अन्यत्र नदेखिएकोले स्वयं पण्डितराजको बौद्धिक चमत्कार नै अरू मतको आविष्कारक हो भन्ने आधुनिक विद्वान्हरू ठान्दछन्।

यस किसिमसंग विभिन्न आचार्यहरूद्वारा विविध दृष्टिकोण, अनुभव तथा विचारहरूका आधारमा प्रतिपादन गरिएको रसको संख्याका संबन्धमा पनि धेरै मतभेदहरू पाइन्छन्। शृङ्गार, हास्य, करुण, रौद्र, वीर, भयानक, बीभत्स, अद्भुत र शान्त धेरै विद्वान्हरूले मानेका यी नौ रसहरू मध्ये केही विद्वान् शान्त रस चाहिं मान्दैनन्। "शान्तस्य रामसाध्यत्वान्नटे च तदसम्भवात्। अष्टावेव रसा नाट्ये न शान्तस्तत्र युज्यते ॥" यसका आधारमा भन् नाटकमा चाहिंत एकदमै असम्भव भन्दछन्। "उत्तरे रामचरिते भवभूतिर्विशिष्यते" भनी नाटककारमा सफल मात्र होइन विशिष्ट समेत मानिएका भवभूति चाहिंत केवल करुणरसलाई मात्र मान्दछन् र जसरी पानीका भुमरी, थोपा छाल आदि विभिन्न विकार हुन्छन् तापनि वास्तवमा ती केवल जल मात्र ठहरिन्छन्। त्यसरी नै अरू रसहरूलाई केवल विकार मात्र हुन् भनी बताउँदछन्। "एको रसः करुण एव निमित्तभेदात् भिन्नः पृथक्पृथगिवाश्रयते विवर्तान्। आवर्तबुद्बुदतरङ्गमयान् विकारान् अम्भो यथा सलिलमेव च तत्समस्तम् ॥"

धाराधराधीश भोज "शृङ्गारमेव रसनात् रसमामनामः" भन्दै

केवल शृङ्गारलाई मात्र रस भन्दछन् र अरू वीरादि रसमा भएको रस-व्यवहारलाई ऐतिह्यमूलक मात्र हो भनी ठोकुवा गर्दछन्। केही विद्वान् चाहिं "रसे सारश्चमत्कारः सर्वत्राप्यनुभूयते । तच्चमत्कारसारत्वे सर्वत्राप्यद्भुतो रसः ॥" अनुसार अद्भुतलाई मात्र रस मानी अरू रसको निराकरण गर्दछन्।

रसका विषयमा अग्निपुराणमा अर्कै किसिमसंग उल्लेख गरिएको छ । "वेदान्तदर्शनद्वारा प्रतिपादित सत् चित् आनन्दमय परब्रह्ममा रहेको जुन सहज आनन्द हो, त्यो कुनै कुनै वेला प्रकट हुन्छ। त्यही नै आनन्दाभिव्यक्ति चैतन्यचमत्कार रस हो। त्यसै आनन्दाभिव्यक्तिको पहिलो विकार अहङ्कारबाट अभिमान ( ममता ) उत्पन्न हुन्छ। तीनैलोक आवद्धहुने त्यस्तो ममताबाट उत्पन्न भएको रति (प्रेम) नै व्यभिचारीभावहरूको साम्यद्वारा पुष्ट भएर शृङ्गाररस कहलाउँदछ। यसैका अरू हास्य आदि अनेक भेद हुन्छन्। त्यही नै रति सत्त्वादिगुणको प्रसारबाट राग, तीक्ष्णता, गर्व र संकोच यी चार रूपमा परिणत भई क्रमशः यिनैदेखि शृङ्गार, रौद्र, वीर तथा बीभत्स यी चार रसको उत्पत्ति हुन गयो। यसपछि शृङ्गारबाट हास्य, रौद्रबाट करुण, वीरबाट अद्भुत र बीभत्सबाट भयानकरसको सृष्टि भयो र रति ( प्रेम ) को अभावरुप निर्वेदबाट शान्तरसको आविर्भाव भयो।" यसरी अग्निपुराणले पनि आखिरमा "लक्ष्मीरिव विना त्यागान्नवाणी भाति नीरस।" भनी वाणीमा रसको अत्यावश्यकता दर्शाएको छ।

रसको उत्पत्तिका संबन्धमा सबभन्दा प्राचीनग्रन्थ अग्निपुराणसम्मको विचार र भरतसूत्रका गम्भीर व्याख्याहरू समेत देखाइ सकिएकोले अब यसको स्वरूप तर्फ केही उल्लेख गरिन्छ। साहित्य-दर्पणकार विश्वनाथले रसको परिभाषा यसरी गरेका छन्।

" विभावेनानुभावेन व्यक्तः सञ्चारिणा तथा ।
रसतामेति रत्यादि स्थायीभावः सचेतसाम् ॥"

दूध दहीको रूपमा परिणत भए जस्तै चिदानन्द चमत्कारस्वरूपमा रत्यादि स्थायीभाव परिणत हुनु नै रस हो। पहिलेदेखि नै रहिरहेको घटादिवस्तुलाई दीपले व्यक्तगर्नु जस्तो होइन भनी 'व्यक्तः' यस पदको अभिप्राय मानिएको छ। यसको स्वरूपका सन्दर्भमा आस्वाद-प्रकार दर्पणमा—

" सत्त्वोद्रेकादखण्डस्वप्रकाशानन्दचिन्मयः।
वेद्यान्तरस्पर्शशून्यो ब्रह्मास्वादसहोदरः॥ "

आदि भनी अखण्ड, स्वप्रकाश, आनन्दमय, चिन्मय र अरू कुनै पनि विषयान्तरको सम्पर्कले शून्य, एकदमै ब्रह्मको आस्वाद तुल्य अर्थात् ब्रह्म साक्षात्कारस्वरूप मानिएको छ।

"रसो वै ब्रह्म" "रसं ह्येवायं लब्ध्वा आनन्दीभवति" इत्यादि श्रुतिवचनहरूका आधारमा भन्न सकिन्छ कि—काव्यपरिशीलनजन्य जुन अलौकिक, आल्हादात्मक, आनन्दरसास्वाद सहृदयहरूलाई हुन्छ, त्यो आनन्दमयब्रह्मको नै आनन्दस्वरूपको एक प्रतीक हो। यस्तो अनिर्वचनीय ब्रह्मसाक्षात्कारतुल्य रसको आस्वाद हुनु भन्दा पहिले नै कारणादिस्वरूप विभावादिको पनि साधारणीकरण भई कुनै पनि संवन्धविशेषको परिग्रह आदि हुँदैन भनी दर्पणकार भन्दछन्—

" परस्य न परस्येति ममेति न ममेति च।
तदास्वादे विभावादेः परिच्छेदो न विद्यते॥ "

मरीच, सुकुमेल, चिनी, पानी आदि मिलाइएको प्रमाणकरस (सर्वत)-मा मरीच आदिको बेग्लै स्वाद नभएर सबैको एकीभावमा जस्तो सर्वतको अर्कै स्वतन्त्र आफ्नो स्वाद पैदाहुन्छ, त्यस्तै विभावादिको साधारणीकरण अथवा एकीभाव भएपछि रसको पनि स्वतन्त्र लोकोत्तर एवं अनिर्वचनीय आस्वाद हुन्छ। कुनै पुण्यात्माहरूले त "पुण्यवन्तः प्रमिण्वन्ति योगिवद्रससन्ततिम्" भनेर पुण्यशालीहरू मात्र रस-प्रपञ्चको आस्वादनगर्न समर्थ हुन्छन् पनि भनेका छन्।

माथि उल्लेख गरिएका विभावादि कुन् हुन् देखाउनु र तिनी-हरूको स्वरूपका संबन्धमा केही चर्चागर्नु अस्वाभाविक नहुने हुँदा संक्षेपमा त्यस तर्फ विचार गरिन्छ। रस निष्पत्तिमा विभाव कारण-स्वरूपले रहेको हुन्छ। यसका नायक नायिकादि अर्थात् दुष्यन्त शकुन्तलादि आलम्बनविभाव; चन्द्र, चन्दन, भ्रमरझङ्कार, उपवन, एकान्तस्थल आदि उद्दीपनविभाव गरी दुइ भेद हुन्छन्। कटाक्ष अश्रुपात आदि कार्यस्वरूप अनुभाव हुन्छन्। उन्माद, हर्ष, चिन्ता आदि सहकारीस्वरूप सञ्चारीभाव हुन्छन्। सधैँभरि वासनारूपले रहेका रति आदि स्थायीभाव हुन्छन्। यसरी विभाव, अनुभाव, व्यभिचारीभाव र स्थायीभावको तारतम्यबाट रसनिष्पत्ति हुन्छ। सबै रसका आफ्नै स्थायीभाव र विभावादि पनि आफ्नै किसिमका रसानुकूल हुन्छन्। सबै रसका विभावादि प्रदर्शनका साथ उदाहरण प्रस्तुत गर्नु यहाँ सम्भव नभएको हुँदा सम्भोग र विप्रलम्भ दुइ प्रकारको शृङ्गाररसमध्ये सम्भोगशृङ्गारको उदाहरण यहाँ प्रस्तुत गरिन्छ।

"शयिता सविधेऽप्यनीश्वरा सफलीकर्तुमहो मनोरथान्।
दयिता दयिताननाम्बुजं दरमीलन्नयना निरीक्षते॥"

प्रियतमका समीपमा सुतेकी छँदी पनि नववधू आफ्ना विभिन्न अभि-लाषाहरू पूरागर्न नसकेर खालि प्रियतम-जीवनसाथीको मुखकमल-लाई मात्र लाज र उत्सुकतावश केही आँखा खुमच्याउँदै हेर्दछिन्। यहाँ नायक आलम्बनविभाव, एकान्तस्थल उद्दीपनविभाव र आँखा यताउति नगरी संकोचवश केही झुकाई हेर्नु अनुभाव हो। लाज र उत्सुकता व्यभिचारीभाव र रति ( प्रेम ) स्थायीभाव हो। यसै गरी अरू हास्य करुण आदि रसमा पनि अनुकूल विभावादि रहेका हुन्छन्, सम्भव अवस्था र औचित्य हेरी छुट्याउनु पर्ने हुन्छ।

औचित्यका संवन्धमा "अनौचित्यादृते नान्यत् रसभङ्गस्य कारणम्। औचित्योपनिबन्धस्तु रसस्योपनिषत्परा॥" भनी औचित्यको अति नं ख्याल हुनुपर्ने कुरा दर्शाइएको छ। साथै रस,

स्थायीभाव, सञ्चारीभाव आदिको पनि स्वशब्दले उक्ति अर्थात् व्यञ्जना-वृत्तिद्वारा मात्र व्यक्त नगराई छर्लंगहुने गरेर शब्दद्वारा नै (हिजो आजका साहित्यकारका साहित्यमा झैँ) प्रतिपादन हुनगयो भने दोष हुन्छ. रस हुन सक्तैन भनी इत्यादि विभिन्न किसिमसंग गहीरो विचार तथा विश्लेषणद्वारा काव्यको आत्मास्वरूप उत्तम ध्वनिकाव्यकोरूपमा गणनागरिनुपर्ने अवस्थामा स्थापना गरी संस्कृतसाहित्यमा रस-तत्त्वको विवेचना अति नै सूक्ष्मरूपमा गरिएको छ ।

---

# साङ्ख्य-दर्शनमा प्रकृति--पुरुष

प्रा. विश्वनाथ भट्टराई

ऋग्वेदकालदेखि नै दर्शनशास्त्रको परम्परामा दुई किसिमका प्रणालीहरू देखापर्दै आएका हुन् भन्ने कुरा अध्ययन परम्पराबाट थाहा-पाइन्छ । ती प्रणालीहरू हुन् :—

( क ) तर्कमूलक प्रणाली र ( ख ) प्रतिभामूलक प्रणाली । यी दुवै प्रणालीहरू आ—आफ्नो सैद्धान्तिक बाटोमा पाइलाचाल्दै तत्त्व-ज्ञानको खोजी गर्छन् । पानीमा परेको दूधलाई हाँसले छानेर लिएझैं विषयगत असत्पक्ष र सत्पक्षको छानबीन गरी असत्पक्षलाई पर सारी सत्पक्षको स्थापनागर्नु नै उक्त दुवै किसिमका प्रणालीको मुख्य लक्ष्य हो ।

" संगच्छध्वं संवदध्वं सं वो मनांसि जानताम् " भन्ने ऋग्वेदको यस वाक्यलाई यी दुवै प्रणालीको मूल जरो हो भनेर मान्न सकिन्छ, कारण परस्परमा समन्वय नभई एक दोस्राको विचार बुझ्न र कुनै पनि विषयको ठीक तरिकासंग ज्ञानोपार्जन गर्न सकिंदैन । विषय-वस्तुको माध्यमबाट नै एक अर्काको विचार, कल्पना, भावना र तदनु-कूल सिद्धान्तसंग राम्ररी परिचित हुनसक्ने खालको क्षमता प्राप्त हुन्छ ।

वस्तुतः यी दुवै प्रणालीको परस्परको विचार र कल्पना आदिको फलस्वरूप नै उपनिषद् र उपनिषद्मा विशद रूपमा विवेचन गरिएको तत्वज्ञान(यथार्थज्ञान)को समुदय भएको हो । यसरी परस्परमा तार्किक वादविवाद गर्दै जांदा आखिरमा प्रतिभामूलक प्रणालीको पर्यवसान

वेदान्तमा गएर हुन्छ भने तर्कमूलक प्रणालीको पर्यवसान न्याय, वैशेषिक, साङ्ख्य, योग आदिमा गएर हुन्छ। अझ नियालेर हेर्ने हो भने तर्कमूलक र प्रतिभामूलक प्रणालीको आविर्भाव पनि, "तत्त्वमसि" भन्ने महावाक्यको आडभरोसामा नै भएको हो भन्ने कुरा स्पष्टरूपमा देखापर्दछ।

"तत्त्वमसि" यस महावाक्यको अर्थ हुन्छ 'त्यो तँ नै होस्'। यहाँ 'तत्' पदले परब्रह्मलाई लक्ष्य गरेको छभने 'त्वम्' पदले जीवात्मालाई औंल्याएको छ। अर्कोरूपमा भन्ने हो भने "जीवो ब्रह्मैव नापरः" यसको अर्थ हुन्छ। यस "तत्त्वमसि" महावाक्यको राम्ररी छानबीन वा जोखतौलगर्नेको लागि नै विभिन्न वाद तथा विवादहरूको आविर्भाव भएको देखिन्छ। जसको फलस्वरूप आस्तिकदर्शन र नास्तिकदर्शनको समुदय हुन्छ। साधारणतया भन्ने हो भने ईश्वर र ब्रह्मको अस्तित्वलाई अंगाल्ने विचार, कल्पना र भावनाले परिपक्व भएका शास्त्रलाई "आस्तिक दर्शन" र यस किसिमको अस्तित्वलाई खण्डन–मण्डनगर्ने विचारधाराले संपन्न शास्त्रलाई "नास्तिकदर्शन" भनिन्छ।

जम्मा आस्तिकदर्शन छ ओटा र नास्तिकदर्शन चाहिं तीन मात्र छन् भनेर प्राचीनग्रन्थहरूमा उल्लेख भएको पाइन्छ। यिनै आस्तिकदर्शनहरूको गणनामा साङ्ख्य–दर्शन पनि पर्दछ। युगानुयुगदेखि चल्दै आएको यो धेरै पुरानो दर्शन हो। यस दर्शनका पनि प्राचीन र नवीन गरी दुई धारा प्रचलित छन्। प्राचीन धारा ईश्वरवादी देखापर्दछ भने नवीन धारा निरीश्वरवादी देखापर्दछ। संभवतः यस दर्शनलाई प्राचीन धाराको अवलम्बन गरेर नै "आस्तिक दर्शन" संज्ञा उपलब्ध भएको हुनुपर्दछ। आधुनिकताको आधारमा यो दर्शन भौतिकवादी देखापर्छ। कारण, काल्पनिक कुरा भन्दा व्यावहारिकता माथि पूर्णतया विश्वस्त भएको कुरा अध्ययनपरम्पराबाट थाहा पाउन

सकिन्छ ।

"सतः सज्जायते" अर्थात् सत्कारणबाट नै सत्कार्यको प्रादुर्भावहुन्छ भन्ने यस दर्शनको मूलभूत सिद्धान्त हो। कुनै पनि कार्य उत्पन्नहुनु भन्दा पहिले आफ्नो कारणमा अव्यक्तावस्थामा हरहमेसा रहिरहेको हुन्छ। कार्य पैदाहुनुलाई "व्यक्तावस्था" र कार्यकारणरूपमा रहनुलाई "अव्यक्तावस्था" भनिन्छ। नभएको वस्तु कहिल्यै पैदाहुँदैन। जस्तो-खरायोको सिङ् हुँदैन त्यसैले त्यो पैदा पनि हुँदैन। नभएको वस्तु वा चीज पैदाहुने भए बालुवाबाट तेल निस्कनु पर्ने भन्ने यसको तथ्यपूर्ण तर्क देखापर्दछ।

साङ्ख्यको दृष्टिमा कार्य र कारण दुवै सत् छन्। कार्यको कारणमा लीन (लय) हुन्छ, नाश हुँदैन। अन्य दार्शनिकहरू कार्यलाई असत् र कारणलाई सत् मान्दछन्। कुनै चाहिं शून्यबाट नै कार्यको उत्पत्ति मान्दछन्। यिनीहरूको मतमा कार्य कारणमा लीन नभएर कार्यको विनाश हुन्छ। यिनै पार्थक्यहरूले गर्दा नै यो दर्शन सत्कार्यवादी देखापर्दछ। ब्रह्म र ईश्वरमाथि विश्वास नगर्ने हुनाले यो निरीश्वरवादी देखापर्दछ।

यसका प्रकृति र पुरुष दुइटा मूलभूततत्त्व छन्। दुवै नित्य र स्थायी छन्। प्रकृति र पुरुषको परस्पर सम्पर्कबाट नै यस दृश्यजगत्को आविर्भाव हुन्छ। प्रकृति जड छे, तथा एक छे। पुरुष चेतन छ, नित्य छ। सत्व, रज, र, तम यी तीन गुण प्रकृतिमा छन्। यी तीन गुणहरूको परस्पर वैषम्यबाट नै सृष्टि हुन्छ। प्रकृति नै सर्वसर्वा छे। यसको दृष्टिकोण अनुसार प्रकृतिबाट–महत्तत्त्व ( बुद्धि )–अहङ्कार–मन–पञ्चतन्मात्रा–पञ्चमहाभूत इत्यादि क्रमले कार्यजगत् उत्पन्नहुन्छ। अन्य दार्शनिकहरू यस किसिमको प्रणालीलाई मान्दैनन्। तर सृष्टिप्रक्रियामा त्रिगुणकै मुख्य हात रहेको हुन्छ भनेर यस दर्शनले मानेको बुझिन्छ। यसले प्रत्यक्ष, अनुमान र शब्द तीन प्रमाण मानेको छ। योगदर्शनले

पनि यिनै तीन प्रमाण मान्दछ । नैयायिकहरू प्रत्यक्ष, अनुमान, उपमान शब्द यी चार प्रमाण मान्छन् । मीमांसकहरू पूर्वोक्त चार र अर्थापत्ति गरी पांच मान्दछन् । वेदान्तीहरू पहिलेका चार अर्थापत्ति र अभाव गरी छ प्रमाण मान्दछन्। पौराणिकहरू त्यसमाथि पनि ऐतिह्य र संभव गरी जम्मा आठ किसिमका प्रमाणहरू मान्दछन् । चार्वाक प्रत्यक्षलाई मात्र अंगाल्दछ, अरू कुनै पनि मान्दैन । बौद्ध र वैशेषिकहरू प्रत्यक्ष र अनुमान गरी दुइटा मात्र मान्दछन् ।

वेदान्तीहरूको ब्रह्म र नैयायिक तथा वैशेषिकहरूको ईश्वरलाई यसले मान्दैन । शून्यवादी, विज्ञानवादी, सौत्रान्तिक तथा सर्वास्तिवादीहरूको शून्य एवं चित्त आदिको अस्तित्वबाट यो धेरै टाढा छ । त्यसैले यो धेरै कुरामा अनौठो जस्तो देखापर्दछ । अन्य दार्शनिकहरू मूलतत्त्व एउटा मान्दछन् भने यसले दुइटा मानेको छ । वेदान्ती तथा नैयायिकहरूको विचारमा ब्रह्म तथा ईश्वरको जुन स्थान छ, साङ्ख्यको दृष्टिमा पुरुष ( चेतन ) को त्यही स्थान देखापर्दछ । साथै वेदान्ती तथा नैयायिकहरूको ब्रह्म र ईश्वर एउटा छ तर साङ्ख्यको पुरुष यौटा मात्र नभएर धेरै छन्। यो एउटा निकै महत्वपूर्ण अन्तर हाम्रा अगाडि देखापर्दछ। यसैले त यो दर्शन न ब्रह्मवादी छ, न ईश्वरवादी, न त शून्यवादी नै अथ च ऊ निरीश्वरवादी देखापर्दछ । साङ्ख्यको दृष्टिमा पुरुषलाई एउटै मात्र मानेको पक्षमा संसारको वास्तविक वस्तुस्थिति नै गोलमाल हुने संभावना देखिन्छ । कारण, चेतनलाई एउटा मानेको पक्षमा एउटा जन्मदा सबै जन्मने; एउटाको मृत्यु हुँदा सबैको मृत्यु हुने, एउटा अन्धो हुँदा सबै अन्धो हुने, एउटा पागल हुँदा सबै नै पागल हुने, एवं एउटा बहिरो वा खोरण्डो हुँदा अर्को पनि त्यस किसिमको अवस्थामा पुग्नु पर्ने इत्यादि कुराहरूको यथार्थरूपमा विवेचन उसले प्रस्तुत गरेको छ । वस्तुतः एउटा जन्मदा, मर्दा र पागल हुँदा, न अर्को जन्मछ, न त मर्दछ, न त पागल नै बन्दछ । यसरी नै कुनै कुकर्ममा कटिबद्ध छ त कुनै सुकर्ममा । यदि

पुरुष एक मात्र भएको भए यस किसिमको अमिल्दो परिस्थिति देखा-पर्ने नै थिएन ।

व्याबहारिकताको आडमा यसलाई फेलाएर हेर्दा धेरै कुरामा साम्यता देखापर्दछ । बस्तुतः संसारको गतिविधि नै तदनुरुप चलेको प्रत्यक्षतः देखापर्दछ । कारण, कुनै शान्तमुद्रामा छ त कुनै पागल बनेर नाचिराखेको छ । अझ अगाडि गएर साङ्ख्य भन्दछ—

"तस्माच्च विपर्यासात्सिद्धं साक्षित्वमस्य पुरुषस्य
कैवल्यं माध्यस्थं द्रष्टृत्वमकर्तृभावश्च"

प्रकृतिगतधर्म पुरुषमा नभएकोले पुरुष हरहमेसा विचारवान् छ । अत्रिगुणात्मक छ । निर्विषयी र असाधारण छ । चेतन एवं सृष्टि नगर्नेवाला छ । वस्तुतः पुरुष चेतन र निर्विषयी भएकोले साक्षी र द्रष्टाको रूपमा अलग्ग भएर रहेको छ । जडपदार्थले देख्तैन चेतनले मात्र देख्तछ । साक्षी त्यो हो—जसलाई हामीहरू आफ्नो सबै कुरा अवगत गराउँछौं । यहाँ वादी र प्रतिवादी बनेर झगडागर्ने हाम्रो चलन धेरै पुरानो हो । यो कुरा अहिलेसम्म पनि हाम्रो समाजमा चलिरहेकै छ । यस किसिमको झगडामा जसरी वादी र प्रतिवादी दुवै आ-आफ्नो साक्षीलाई आफ्नो विषयवस्तु राम्ररी अवगत गराउँछन् त्यसरी नै साङ्ख्यकी प्रकृति पनि आफ्ना पुरुषलाई आफूले गरेको, देखेको र जानेसम्मको सबै विषय कतै केही बाँकी नराखीकन अवगत गराउछे । यस किसिमसंग आफ्नी प्रकृतिले देखाएको विषय अवगत गर्नको लागि नै पुरुष हरहमेसा साक्षीको रूपमा रहेको हुन्छ । पुरुष न त सुखमा सुखी र दुःखमा दुःखी बन्दछ । यसैले त्यो मध्यस्थ एवं उदासीन छ । प्रकृति नै हर्ता, कर्ता र धर्ताको रूपमा रहेकीले कर्तृगत-धर्महरू प्रकृतिमा नै छन् , पुरुषमा छैनन् । त्यसैले पुरुष अकर्ता छ । आध्यात्मिक आधिभौतिक र आधिदैविक दुःखहरू उसमा रहंदैनन् । दुःखत्रय उसमा नहुनु नै कैवल्य हो । "आत्यन्तिकोदुःखत्रयाभावः

कैवल्यम्" । यसैले त्यो चेतनपुरुष न त विषयवासनाले नै बांधिन्छ, न त उसको जन्म र मरण नै हुन्छ ।

यसरी एकातिर साङ्ख्य पुरुषलाई द्रष्टा, अकर्ता, उदासीन तथा साक्षीको रूपमा लगेर थन्कयाउँछ, अर्कातिर आफैं—

"तत्र जरामरणकृतं दुःखं प्राप्नोति चेतनः पुरुषः"

भनेर भन्न पनि हिचकिचाउँदैन । यसबाट त एक किसिमले अकर्ता तथा उदासीन र प्रेक्षकको रूपमा रहेको पुरुषको पनि जन्म र मरण हुन्छ भन्ने कुरा स्पष्ट हुन आएको देखिन्छ । तर वस्तुतः पुरुषको आभासले बुद्धितत्वको जन्म र मरण हुन्छ भन्ने कुरा अनुगमविधिको आधारमा अड्कलकाट्न सकिन्छ ।

यसरी साङ्ख्यले धेरै पुरुषहरूको कल्पना गरेको मतलब यस्तो पनि हुन सक्दछ—यी धेरै पुरुषहरूमध्ये एउटा जो मध्यस्थ, अकर्ता एवं प्रकृतिको साक्षी र प्रेक्षकको रूपमा हरहमेसा रहिरहेको छ त्यो चाहिं अलग छ । जसको जन्म र मरण छैन र जसलाई चेतन भन्ने संज्ञा साङ्ख्यले दिएको छ । एवं जुन जुन पुरुषहरूको जन्म र मरण होइरहन्छ, जो सांसारिक विषयवासनामा पौडिरहनुको साथै प्रकृतिको कानूनमा बांधिएका छन्, ती पुरुषहरू भिन्नै छन् भन्ने मेरो व्यक्तिगत ठनाइ छ ।

फेरि साङ्ख्यका प्रकृति र पुरुष परस्परमा देखादेख गर्दछन् र भेटघाट पनि गर्दछन् । कारण प्रकृति र पुरुषको परस्पर मिलनमा नै सृष्टिको अस्तित्व रहेको हुन्छ । उसैको कारिकाबाट—

"द्रष्टा मयेत्युपेक्षकः एको दृष्टाहमित्युपरमत्यन्या" उसको दृष्टिमा प्रकृति आफ्नो सिर्जनात्मकक्रिया समाप्तगरेपछि पुरुषबाट अलग भएर बस्तछे र पुरुष पनि प्रकृतिबाट अलग भएर रहेको हुन्छ । तर यसको मतलब यो होइन कि उनीहरूको कहिल्यै भेटै हुँदैन । मन लाग्यो

भने भेट पनि गर्ने गर्छन्—उसैको कारिकाबाट—

"सति संयोगेऽपि तयोः प्रयोजनं नास्ति सर्गस्य" अर्थात् सृष्टि क्रियाको समाप्ति-पछि पनि प्रकृति र पुरुषको संपर्क हुन सक्तछ, तर त्यस समयको सम्पर्कवाट सिर्जना चाहिं हुँदैन । यसरी यो कुरा व्यावहारिक दृष्टिकोणसंग मिल्न आएको देखिन्छ। किनभने हाम्रा पृथिवी-स्वर्गमा वसेका स्त्रीपुरुषहरू पनि बूढाबूढी भएपछि सन्तान पैदागर्न सक्तैनन्, यात उनीहरूवाट सन्तानको उत्पत्ति नै हुँदैन। फेरि यौवनावस्थादेखि नै सन्तान प्रशस्तहुने हुनाले वृद्धावस्थामा सन्तानोत्पत्तिको कुनै प्रयोजन नै रहंदैन।

'द्रष्टाहम्' भन्ने कारिकाको पङ्क्तिवाट प्रकृति चेतन छे भन्ने कुराको पुष्टि पर्याप्तमात्रामा मिल्दछ । यसरी एकातिर साङ्ख्य प्रकृतिलाई 'म देखिएं' भनेर पछि सर्दछे भन्दछ, अर्कातिर प्रकृति जड छे भनेर सिद्ध गर्दछ। अव यहाँ प्रश्न खडा हुन्छ 'प्रकृतिलाई जड भन्ने कि चेतन ? जड भनुँ भने 'म देखिएं' भन्ने ज्ञान उसलाई कसरी हुन्छ ? चेतन भनुंभने साङ्ख्यले उसलाई जड सिद्ध गरिसकेको छ अथ च—

"पुरुषस्य विमोक्षार्थं प्रवर्तते"

"रङ्गस्य दर्शयित्वा निवर्तते"

"आत्मानं प्रकाश्य विनिवर्तते प्रकृतिः"

"तस्यार्थं अपार्थकञ्चरति"

इत्यादि कारिकाहरूको पङ्क्तिवाट पनि प्रकृति चेतन छे भन्ने कुराकै पुष्टि भएको देखिन्छ। तर वास्तविकता चाहिं के हो भने सारा कार्य गरिसके-पछिको अवस्था दोस्रो शब्दमा "प्रकृतिको सुषुप्तिकालीन अवस्था" नै जडावस्था हो र त्यसवेलाको प्रकृतिको रूप नै जड रूप हो भनेर साङ्ख्य दर्शनको अनुगमात्मक दृष्टिकोणको आधारमा भन्न सहजै सकिन्छ। यस किसिमको अवस्थादेखि भिन्न अवस्थामा पुरुषको

सम्पर्कले गर्दा प्रकृति हरहमेसा चेतन जस्ती देखिएकी मात्र हो। जस्तो प्रत्येक मानव 'म गर्छु', "यो मैले गरेको", 'यो मेरो हो' इत्यादि कुरा भन्दछ तर वस्तुतः कर्ता आत्मा नै हो। त्यस्तै प्रकृतिलाई पनि 'म नै सर्वेसर्वा हुँ' भन्ने भान भएको मात्र हो। वस्तुतः चेतन अकर्ता छ। प्रकृति होइन। यसैले प्रकृतिलाई जड भनिन्छ ! पुरुषलाई चेतन मानिन्छ।

---

# संस्कृत साहित्यमा व्यापकता

— गोविन्दप्रसाद घिमिरे

यस शीर्षकमा रहेका अगाडिका तीन अक्षरको नाम लिने विट्टिकै नाक चेप्र्याउनेहरू पनि हामीले देखेकाछौं तर यसो गर्नु ठीक हो कि होइन भन्ने कुरालाई ठूला विद्वान्, दार्शनिक र विचारकले छुट्याइदिनु पर्दछ ।

हुनत यसको व्यापकतावारे कुरा गर्न लाग्दा हामीहरू कति गहिराइमा पुग्न सक्छौं र। सामान्यतः यसको महत्त्वमाथि प्रकाश पार्नेको पनि कमी देखिंदैन तर कार्यरूपमा भने··· ··· । त्यसकारण आजका विद्वान्हरूको कर्त्तव्य नै यसमा–अप्रत्यक्ष रूपमा रहेका चहकिला कणहरू सँगालेर यो भयभीत संसारको संत्रस्त र रूखखोपन-लाई हटाएर शान्तिको चीसोजल पियाउनु हो ।

आज मानवमात्रले आफ्नो मर्यादामा रही यस संस्कृत साहि-त्यको संरक्षण र संवर्द्धनको लागि कटिवद्ध हुनु परेको छ । अनि यसैमा प्राणीमात्रको कल्याण निहित छ भन्नमा केको संकोच । यस्ता कुरा सुन्दा आलस्य आउनु स्वाभाविकै हो किनकि यो कुरा भन्न उत्सुक एक साधारण मानिस हो न कि एक महान् विचारक । तर पनि मनमा उठेको भावनालाई टिपेरराखौं भन्ने उद्देश्यले यी दुई–चार अक्षर कोर्न लागेको हुँ ।—

ती हाम्रा महर्षिहरू जसले हामीलाई अमूल्य वचन छाडेर गएका रहेछन् । उनीहरूलाई यो संसारले कहिल्यै पनि विर्सन सक्तैन । उनीहरूले यदि मौखिकरूपमा मात्र ती वचनहरू दिएका भए आज के के भइसक्थ्यो तर जसरी भए पनि लिखित रूपमा छोड्नुबाट उनीहरूको

ठूलो दूरदर्शिता झल्झल्किन्छ भन्नलाई सबैले वाध्य हुनु परेको छ।

"मानवता" यी चार अक्षरको जमघटलाई हेर्दा विश्वका सबै मानिसको हृदयमा "बाँच र बाँच्नदेउ" भन्ने उक्तिको उपस्थिति हुन्छ। सिद्धान्त र व्यवहार फरक चीज हुन्। वर्तमान संसारमा मानवतावादी सिद्धान्तका लहर निकाल्नेको संख्या पनि थोरै छ भनेर भन्न सकिँदैन तर··· ···। अनि यति हुँदाहुँदै सांसारिक परिवर्तन हुँदै आयो हुँदै गएको छ र हुँदै जानेछ। समयको परिवर्तनको क्रममा स्थिति सधैं एकनास हुन्छ भन्नु त महान् गल्ती नै हो। त्यसकारण हामीले इतिहासका पाना पल्टाउन थाल्यौं भने पनि एक युगमा महान् क्रान्तिकारीको उदय भएको थियो भने अर्को युगमा आएर शान्तिका अग्रदूतहरू–जसले थोरै समयको निम्ति भए पनि तिर्खाले छट्पटाएका मानवलाई ठण्डाजल पियाएका थिए–को उदय भएको थियो। मानिस स्वभावतः एक शान्तिप्रिय प्राणी भएकोले उसलाई अशान्त र भयंकर वातावरणदेखि टाढा रहन मन लाग्छ। मानवले शान्तिको खोजीमा धेरै ठक्कर खानु परेता पनि उ एक विवेकशील प्राणी भएकोले कहिल्यै पनि हताश भएन र अन्तमा मेलमिलापद्वारा एक यस्तो संस्थाको जन्मदियो जसमाथि आज विश्वका तमाम जनताका तृषित कण्ठहरू शीतल जलको आशा राखेर त्यसैको प्रतीक्षामा छन्। यदि संस्कृत साहित्यको यस संसारमा अस्तित्व नै नरहेको भए आज "वसुधैव कुटुम्बकम्" जस्ता भावनाको पनि अभाव हुन्थ्यो अनि केको मानवता ?। यस धरतीमा आफू मरणान्त अवस्थामा पुगेर पनि परोपकार कसैले गरेको छ भने यै संस्कृत साहित्यले गरेको छ भनेर ठोकेर भन्न सकिन्छ।

यदि "वसुधैव कुटुम्बकम्" भन्ने भावनालाई सार्थक पार्ने हो भने "सर्वे भवन्तु सुखिनः" भन्ने सिद्धान्तलाई कार्यान्वित गराउन सक्नु पर्दछ। "समानताको" नारा दिएर असमानताको बीजारोपण

गर्नेलाई पक्कै पनि धरतीले सहन्नन् भन्ने मलाई विश्वास छ। फेरि दुःखको कुरा यो छ कि मानव अब त्यो ठाउँमा पुगिसकेछ कि जसले विशुद्ध भावना लिएर "मानवतावाद" लाई सार्थक गराउन खोज्यो उसलाई पनि यस धरतीमा रहन नदिने। आज गान्धी, केनेडी, मार्टिन किङ्ग लुथर रवर्ट केनेडी जस्ताले यहाँ रहन पाएनन् यो कहाँसम्मको न्यायिक फैसला हो मानव मात्रले सोच्नु परेको छ।

आज संसारमा कति कति मानव हितकारी सिद्धान्तहरू प्रतिपादित भएका छन् कस्ता कस्ता दर्शनको उत्पत्ति भएको छ। केवल यति मात्र नभएर संसारमा विभिन्न थरीका संविधानहरूको निर्माण भएको छ तिनीहरूको संस्कृतका ग्रन्थमा अभाव छ। भनेर र हाम्रो मौलिकता हो भनेर कोही पनि भन्न सक्तैन। हो आफ्नू आफ्नू आवश्यकता र सुहाउँदो तवरले संसारका विभिन्न ठाउँमा विभिन्न प्रकारको शासन प्रणाली देखिन्छ तर कसैले पनि हाम्रो यो मौलिकता हो भनेर दावी गर्न सक्तैन किनकि आज विश्वमा जति पनि संविधानको निर्माण भएको छ ती सबमा हाम्रा मनुस्मृति जस्ता ग्रन्थहरूको प्रभाव परेको पाइन्छ। यसको संबन्धमा मनु, कौटिल्य र याज्ञवल्क्य जस्ता हाम्रा महान् दार्शनिक महान राजनीतिज्ञको नाम नलिइ रहन सकिँदैन।

सामाजिक स्थितिमा पुग्दा हाम्रो संस्कृत साहित्यले मानवलाई नाशको बाटोतिर लम्कन नदिन प्राथमिकतहमा नै "काव्यशास्त्रविनोदेन कालो गच्छति धीमताम। व्यसनेन च मूर्खाणां निद्रया कलहेन वा॥" जस्ता श्लोकलाई अगाडि राखिदिएको छ। संसारमा कोही दुःखी कोही सुखी र कोही हाँसीरहने कोही रोइरहने होलान् भनेर समानताको भावनालाई अँगाल्दै हाम्रो संस्कृत साहित्य "सर्वेभवन्तु सुखिनः" भनेर कुर्लीरहेको छ। अर्कोतिर एकता भन्ने कुरालाई महत्व दिएर मानव मात्रलाई एक हुनको लागि आह्वान गर्दै उदाहरण स्वरूप भनिरहेको छ--"अल्पानामपि वस्तूनां संहतिः कार्यसाधिका। तृणैर्गु-

णत्वमापन्नैर्वध्यन्ते मत्तदन्तिनः" । अझ महाभारतकालमा आएर युधिष्ठिरको वचनलाई जोगाएर आज संसारलाई त्यैमन्त्र जप भनेर शक्ति प्रयोग गर्ने तरीका सिकाउँदै हाम्रो संस्कृत साहित्य भनिरहेको छ—"वयं पञ्च वयं पञ्च वयं पञ्चशतञ्च ते। परैः साकं विवादेतु वयंपञ्चोत्तरं शतम् "।

एउटा सानो परिवारमा झै झगडा हुन्छ भने यति ठूलो मानव समाज भित्र कहिले काहिं विवाद हुनु त स्वाभाविकै हो भन्नु पर्छ। हुनत खङ्ग्रङ्ङ भएर सुकेको पाखाको निम्ति अगुल्टैको आवश्यकता पर्दैन एउटा सानो झिल्को भए पुग्छ। यस्तो अवस्थामा मानवले धेरै सतर्क भइ सहनशीलताको पाठ पढी संसारमा एक सुनौला विहानको कल्पना गरी त्यसलाई साकार पार्न पट्टी अगाडि बढ्नु बुद्धिमानी देखिन्छ। संसारका वर्तमान समस्यालाई खडा पार्ने हो भने शायद आकाश भरि पनि अटाउँदैनन् होला तर यसो भयो भन्दैमा हताश हुने कुनै कुरा छैन।

कुनै राष्ट्रहरू "परोपदेशे पाण्डित्यम्" भन्ने उक्तिलाई सार्थक गराउँदैछन्। के उनीउरूले यो संझेका होलान् कि मैले पनि पहिले शान्तिको नारा दिएको थिएँ भनेर। आज तिनीहरूलाई धिक्कार छ जसले आफू जस्तै धेरैलाई बोका बली दिए झैं बली दिइरहेका छन्। आज तिनीहरूलाई धिक्कार छ जसले "शान्तिरेव शान्तिः सामा शान्तिरेधि:" भनेर कुर्लीरहेको वेदवाक्यलाई तिरस्कार गरेर संसार-लाई नाशको बाटोतिर लम्काइरहेछन्। हुन त यस धरतीमा शान्तिको लागि क्रान्तिगराएर रगतको खोलो वगेको हेर्न चाहने पनि केही व्यक्ति भए तर उनीहरूको त्यो कल्पना मानव समाजको प्रतिकूल थियो किनकि मानव स्वभावले नै शान्तिप्रिय प्राणी हो, उ शान्तिद्वारा नै शान्ति स्थापना गर्न चाहन्छ, नकि क्रान्तिद्वारा। फेरि तिनीहरूलाई धिक्कारछ जसले "त्यजेदेकं कुलस्यार्थे ग्रामस्यार्थे कुलं त्यजेत्, ग्रामं

# आत्मानुसन्धानको एक-दिग्दर्शन

— चेतोनाथशर्मा आचार्य

पूर्वीय दर्शनमा विवेचनीय वस्तु मध्ये प्रमुख विषय छ आत्मा अथवा अर्को शब्दमा पूर्वीय दर्शनका विवेचित वस्तुहरूमा विशेष रूपले विवेचित वस्तु छ आत्मा। यसरी सबै नै दर्शनमा समान रूपले विवेचनीयता प्राप्त हुनुबाट आत्माबारे सबै नै दार्शनिकहरूको समान आकर्षण रहेको देखिन्छ। यद्यपि आस्तिक दर्शनमा मात्र नभएर नास्तिक दर्शनमा पनि आत्माबारे प्रशस्त ऊहापोह भएको मिल्दछ तापनि यहाँ आत्माबारे जुन विचार प्रस्तुत गरिन्छ त्यो आस्तिक दर्शनसम्मत आत्माबारे र अरू विशेष गरेर न्यायवैशेषिकसम्मत आत्मा सम्बन्धी विचार प्रस्तुत गर्ने लक्ष्य राखिएको छ। किन भने नास्तिकदर्शनसम्मत आत्मा स्थूलशरीर जडइन्द्रिय मन बुद्धि आदि र क्षणिक विज्ञानसित सम्बन्धित भएकोले त्यो न्यायिक तर्कसंमत र वैदिकसिद्धान्त अनुकूल समेत नभएकोले त्यसलाई पूर्वीय दर्शनको लक्ष्य स्थानीय मान्न सकिंदैन। न्यायवैशेषिकसम्मत आत्माको विशेष अनुसन्धान प्रस्तुत गर्नुमा कारण भने आफ्नो विशेष परिचय तिनीहरू सित रहनु नै हो।

आत्मवस्तुको स्वरूपपरिचय पूर्व 'आत्मन्' शब्दको व्युपत्ति-सम्मत अर्थ देखाउनु अनुपयुक्त हुने छैन। आत्मन् शब्द भित्र धेरै अर्थ अनुस्यूत छन्, जसलाई आचार्यशङ्करले कठोपनिषद् २-३-४ को व्याख्यामा लिङ्गपुराणको १-७०-९६ को एक श्लोक प्रस्तुत गरेर स्पष्ट गर्नु भएको छ; श्लोक यही हो :—

यदाप्नोति यदादत्ते, यच्चात्ति विषयानिह।
यच्चास्य सन्ततो भावस्तस्मादात्मेति कीर्त्यते॥

यस श्लोकको अर्थ विचार गर्दा हामी निम्न गुण वा स्वभाव आत्मामा पाउँदछौं 'यदाप्नोति' आप् धातुको अर्थ हुन्छ व्याप्त गर्नु। यसैले आत्माको जगत्का समस्त चराचर वस्तुमा व्याप्तता रहेको छ। 'आदत्ते' यस पदबाट संसारका समस्त वस्तुलाई आफ्नो स्वरूपमा ग्रहण गर्ने स्वभाव उसमा देखिन्छ। स्थितिकालमा आत्मा संसारका विषयलाई खान्छ अर्थात् अनुभव गर्छ। जसकोसत्ता निरन्तर विद्यमान छ ( सन्ततोभावः ) यस्तो वस्तु हो आत्मा। उपर्युक्त व्युत्पत्ति अनुसार सबैमा व्याप्त रहनु सबैलाई आफ्नो रूपमा लिनसक्नु एवं सदासर्वदा विद्यमान रहनु र विषयको उपभोग गर्नु रूप स्वभाव जसमा छ त्यो वस्तु आत्मा र त्यस्तो स्वभावयुक्तता नै हो आत्मत्व।

यस किसिमको आत्माको स्वभावस्थित शरीरातिरिक्त आत्मवादी सबैको नै सम्मति पाइन्छ। हुन पनि कल्पित वस्तुको सत्ता तबै सिद्धहुन्छ जबकि त्यसको अधिष्ठान सत्ता विद्यमानछ। जस्तो कुनै रज्जु ( डोरी ) विना सर्पको कल्पना वा स्थाणु ( ठूटो ) विना पुरुषको कल्पना सम्भव हुँदैन त्यस्तै नै आत्माको अस्तित्व विना प्राणीमात्रको जीवन धारणरूपक्रिया सम्भव हुँदैन।

जीवन धारण त प्राण व्यानरूप वायुको सम्बन्धबाट भइहाल्छनि भन्ने शङ्कालाई खण्डनगर्दै उपनिषद् भन्छ "नाप्राणेन नापानेन मर्त्यो जीवति कश्चन" कठ. उ. २–२–५। एतावता प्राणीहरूको जीवन धारणमा प्राणको मुख्यता नभएर आत्माको मुख्यता रहेको छ।

यस किसिमको आत्माको अस्तित्वबारे पहिले कसबाट जिज्ञासाको आरम्भ भयो, यसबारे उपनिषदहरूमा विभिन्न आख्यान मिल्दछ। ती मध्ये छान्दोग्य उपनिषद ८–७ मा आत्माको जिज्ञासाबारे बडो रोचक आख्यायिका पाइन्छ। जस अनुसार आत्मतत्त्वको जिज्ञासा पूर्ति गर्न देवता र असुरहरूले आ-आफ्ना नेता इन्द्र र विरोचनलाई प्रजापति कहाँ पठाए। प्रजापतिले ३२ वर्षको कठोर

हाल्नु पर्छ, नत्र अरू योनिमा सम्भव छैन।

उपर्युक्त रूपमा आत्माबारे सैद्धान्तिक विचार प्रस्तुत गरेपछि यसमा केही दार्शनिक ऊहापोह पनि देखाउनु दृढताका निमित्त नै हुनेछ। किनभने श्रुतकुरालाई दृढ राख्न त्यसमा छलफल हुनु उपयुक्त मानिन्छ।

न्यायवैशेषिक दर्शनमा आत्माका दुइ रूप मानिएका छन्, एक जीवात्मा र अर्को परमात्मा। त्यसमध्ये जीवात्माको अनुभव प्रति व्यक्तिलाई हुने र परमात्माको चाहिं अनुमान र शब्दप्रमाणद्वारा गर्न सकिने बताइएको छ। अथवा जीवात्मा नै अज्ञानको सर्वथा निवृत्ति पछि परमात्मा हुने भएकोले आत्माको नै परमात्म अस्तित्वमा पनि कारण मान्न सकिन्छ। त्यसैले न्यायभाष्यकार भन्छन् "गुणविशिष्ट-मात्मान्तरमीश्वरः" अर्थात् गुण विशेषले युक्त भएको अर्को आत्मा नै हो ईश्वर।

आत्माको अस्तित्वबारे कुनै प्रमाण दिनु पर्ने जरुरत छैन, किन भने आफ्नो अस्तित्वबारे कसैलाई शंका हुँदैन, म जान्दछु (अहं जाने) म सुखी छु (अहं सुखी) भन्ने आदि प्रतीति आत्मालाई नै लिएर हुने हुन्। त्यसैले महात्मा भर्तृहरि भन्छन्—"स्वानुभूत्येकमानाय" अर्थात् आफ्नो अनुभव नै प्रमाण भएको। तैपनि सामान्य वा वि-प्रतिपन्न व्यक्तिलाई शरीर आदिदेखि अलग आत्मा हो भन्ने कुरा संभाउन त्यसमा व्यावहारिक उदाहरण पनि शास्त्रमा देखाइएको छ। त्यो उदाहरण हो आत्मालाई इन्द्रियादिको अधिष्ठातृत्वरूपमा प्रस्तुत गर्नु। हाम्रा शरीरमा विद्यमान जुन इन्द्रियद्वारा हामी रूपदेख्ने, शब्द सुन्ने, स्वादलिने, स्पर्शगर्ने आदि काम गर्दछौं ती इन्द्रियहरू र शरीरको पनि सञ्चालक मानिएको छ आत्मालाई। किनभने क्रियासिद्धिमा अत्यन्त उपकारक वस्तुलाई व्याकरणशास्त्रले करणसंज्ञा दिएको छ, दर्शनशास्त्रले व्यापार युक्त प्रमुख (असाधारण) कारणलाई करण

भनेको छ। उक्त परिभाषा अनुसार चक्षुरादि इन्द्रिय विना रूपादि विषयको ज्ञान नहुने भएकोले इन्द्रिय भए उक्त ज्ञानमा प्रमुख कारण अर्थात् करण। करण जहाँतहीं कर्ताको सहाराबाट मात्र कार्यसिद्ध गर्दछन्। जस्तो बसिलाले काठकाट्ने काम तवै गर्दछ जब त्यसलाई सिकर्मीले आफ्नो प्रयत्नद्वारा चलाउँछ, जब चालकले हाँक्छ तब नै कुनै सवारी दौडन्छ। यसरी जुनसुकै करणद्वारा पनि कर्ताको सहायता मिलेर नै क्रिया भएको देखिन्छ। एतावता चक्षुरादि इन्द्रिय पनि कर्ता नभै हेर्ने, सुन्ने, छुने आदि काम गर्न नसक्ने भएकोले जसको सहा-यताबाट यी इन्द्रिय विषयोपलब्धिको काम गर्दछ त्यही नै हो आत्मा। यसैले मुक्तावलीकार भन्छन्—"आत्मेन्द्रियाद्यधिष्ठाता करणं हि स कर्तृकम्" आत्माद्वारा नै रूप, रस, गन्ध, शब्द, स्पर्शजन्य सुख अनुभव हुने कुरा कठोपनिषद् यसरी व्यक्त गर्दछ :—

'येन रूपं रसं गन्धं शब्दान्स्पर्शांश्च मैथुनान्। एतेनैव विजानाति,

इन्द्रिय र शरीरादिको चैतन्योत्पादकत्वरूपमा आत्माको अस्तित्व मान्दा यस कुरालाई पत्यार नगर्नेहरू भन्दछन् कि शरीर इन्द्रिय वा मनलाई नै आत्मा माने के आपत्ति छ र त्यसदेखि व्यति-रिक्त वस्तुलाई आत्मा मान्ने ? किनभने सब मानिसलाई संसारका सबै भोग्यवस्तु भन्दा प्यारो आफ्नो शरीर लाग्दछ, त्यसैले कुनै रोगी चिकित्सकले अमुक-वस्तु सेवन गरेमा तिम्रो शरीर नष्ट हुन्छ भन्यो भने त्यो वस्तु त्याग्न ऊ तत्काल तयार हुन्छ। यस कारण शरीरलाई चैतन्यरूप आत्मा मान्नुमा कुनै अनुपपत्ति देखिंदैन। अथवा भनौं कि शरीरजस्तो स्थूलवस्तुलाई आत्मा मान्दा रोग ग्रस्त व्यक्तिको शल्यक्रिया ( अपरेशन ) गर्दा आत्माको मृत्यु हुने डर हुन्छ भनेक्षा पनि इन्द्रिय वा मनलाई आत्मा माने त्यस किसिमको भय देखिंदैन, त्यसैले उल्लिखित कुनैलाई आत्मा मान्नु अभीष्ट हो। यसरी आत्माबारे विभिन्न पूर्वपक्ष सुनिन्छन्, तर पनि उक्त विचार अनुकूल तर्कयुक्त भने कुनै पनि छैनन्। जसको अनुकूलराहित्यलाई हामी निम्न रूपमा

देख्न सक्छौं।

शरीरलाई आत्मा ( चैतन्य ) मान्न सकिँदैन, किनभने स्थूल शरीरलाई आत्मा मान्दा त्यसको कुनै भाग क्षतिभएमा आत्माको क्षति स्वीकार गर्नु पर्ने हुन्छ, तर त्यो कुरा अभीष्ट र प्रमाण सम्मत पनि देखिँदैन। अर्को कुरा शरीरलाई चैतन्य मान्दा मृतशरीरको दाह-पछि उसले गरेका यावत् धर्माधर्म दग्धहुने र तिनीहरूको सुफल वा दुष्फल आत्माले भोगगर्न नपाउने वा नगर्ने हुन आउँछ। जुन कुरालाई साधारण भन्दा साधारण मान्छे पनि मान्न तयार हुने छैन। किनकि सत्कर्म गर्नेले सुफल र असत्कर्म गर्नेले दुष्फल पाउनु यो ईश्वरीय नीति हो। यसो नभएमा हुने दोषलाई दार्शनिक शब्दमा कृतहानि र अकृता-भ्यागम भनिन्छ।

शरीरलाई जस्तै इन्द्रियलाई पनि आत्मा मान्न सकिँदैन, किनकि त्यसो मान्दा यही नै इन्द्रिय आत्मा हो भन्ने विनिगमक केही नभएको र इन्द्रियमा हुने अन्धत्व काणत्व ( अन्धोपना र कानोपना ) को सम्बन्धबाट आत्मामा पनि अन्धत्वादि दोष देखिएला। यसका साथै चक्षुरिन्द्रियरूप आत्माले पहिले अनुभव गरेको ज्ञान त्यो इन्द्रियमा विकृति आउँदा पछि अर्को इन्द्रियले तदनुकूल व्यवहारगर्न नपर्ने, तर गरेको देखिन्छ। यी सब कुराबाट के थाहा हुन्छ भने शरीर र इन्द्रिय भन्दा आत्माको अस्तित्व बेग्लै रहेछ। त्यसो नभए आँखाले देखेको सरस रसभरीबाट जिब्रो रसाउने हुन नपर्ने, किनकि जो अनुभव गर्छ त्यही नै संझन्छ ज्ञानमा यस्तो नियम छ। अतएव चक्षु, रसना जस्ता इन्द्रिय भन्दा आत्मा अलग नभएको भए आँखाले देखेको कुरामा जिब्रो रसाउनुपर्ने थिएन। यी सब कुरालाई केलाउँदा आत्माको अस्तित्व बेग्लं भएको भान हुन्छ। जुन कुरालाई 'इन्द्रिया-न्तरविकारात्' ३-१२ भन्ने न्याय सूत्रले व्यक्त गरेको छ।

अनित्यशरीर र इन्द्रियलाई चैतन्य मान्न नसकिए पनि मनलाई चैतन्य मान्दा ती दोष आउँन सक्तैनन्, किनभने न्यायवैशेषिकमतमा

मनको नित्यता निर्विवाद छ भन्ने मन–आत्मवादीहरूको कथन पनि तर्कसङ्गत देखिंदैन ।

बहिरिन्द्रियमा निष्क्रियता भएको अर्थात बाहिरी इन्द्रियले विषयको अनुभव नगरेको वेलामा पनि मनको व्यापारबाट सुख दु खको अनुभव हुने भएकाले आन्तरिक अनुभवमा मनलाई इन्द्रिय मानिएको छ । यदि मनलाई इन्द्रिय ( करण ) मान्नुको बदला चैतन्य मान्ने हो भने अनुभविता त मन होला, तर मन्ताको त जरुरत पर्छ नै । किनकि अनुभविता र मन्ता त यौटै हुँदैन । त्यसैले अनुभविता मनलाई मानेर मन्ता अर्कै इन्द्रिय मान्ने हो भने त्यहाँ नाम मात्रको भेद हुन्छ नकि कामको । तर त्यसोभए पनि ज्ञानमा रासन, चाक्षुप, श्रौत्र, स्पर्शन जस्ता जुन क्रमिकता देखिन्छन् त्यसबाट मनलाई अणुस्वरूप मान्नुपर्ने जरुरत पर्दछ । किनभने विषयका साथ इन्द्रियहरूको समान सम्पर्क रहेपनि जुन इन्द्रियका साथ मनको सम्पर्क छ त्यसैले मात्र ज्ञान गर्दछ, अरूले गर्न सक्तैन मनमा यदि व्यापकता वा स्थूलता रहेको भए यसरी कुनै इन्द्रियले ज्ञान गर्ने र कुनैले नगर्ने हुन नपर्ने । त्यसैले मुक्तावलीकार भन्दछन् कि 'अयौगपद्य ज्ज्ञानानां तस्याणुत्व मिहेष्यते" । जब यसरी मनलाई अणु स्वरूप मान्नु पर्ने युक्तिसिद्ध हुन्छ तब अणु स्वतः अप्रत्यक्ष भएकोले त्यसमा रहने ज्ञान इच्छा आदि गुण पनि अप्रत्यक्ष हुने कुरामा कुनै शङ्का रहदैन । त्यसैले मनलाई चैतन्य अर्थात् आत्मा मान्दा त्यसमा रहने सुख दुःखादिको प्रतीति नहुने हुन आउँछ, त्यसैले आत्मा हो शरीर इन्द्रिय मनदेखि अतिरिक्त ।

आत्मा शरीर इन्द्रिय र मनदेखि अतिरिक्त भएपनि बौद्धको जस्तो क्षणिक विज्ञानस्वरूप भने व्हैन । किन भने विज्ञान हुन्छ सविषयक, यदि विज्ञान नै आत्मा हो भने कुन विषयक विज्ञानलाई आत्मा मान्ने ? घटविषयक, पटविषयक वा मठविषयक । अमुकविषयक विज्ञान नै आत्मा हो भन्ने कुनै प्रमाण देखिंदैन । यदि सर्वविषयक विज्ञान नै आत्मा भन्ने हो भने आत्मामा सर्वज्ञता देखिनु पर्ने तर

देखिंदैन । अर्को कुरा क्षणिक-विज्ञानलाई आत्मा मान्दा सुषुप्ति-अवस्थामा त्यसको अस्तित्व मान्न सकिंदैन, किन भने सुषुप्ति-अवस्थामा कुनै पनि विषयको अस्तित्व नरहने कुरा सर्वविदित छ । यसबाट क्षणिक-विज्ञानलाई आत्मा मान्ने बौद्धमत पनि तर्कसम्मत र शास्त्रानुकूल देखिंदैन ।

एतावता शरीर इन्द्रिय मन र विज्ञान भन्दा अतिरिक्त आत्माको अस्तित्व न्यायवैशेषिक-दर्शन सम्मत छ । जुन आत्मा बुद्धि सुख दुःख इच्छा द्वेष प्रयत्न जस्ता छ विशेष गुणको आश्रय हुनुका साथै व्यापक पनि भएकोले सर्वत्र विद्यमान छ तापनि हृदयाकाशमा यसको अस्तित्व विशेष रूपबाट अनुभूत हुन्छ । जसको प्रतीति अहम् अथवा म रूपमा हरेक प्राणी गर्दछन । रथको गमनबाट सारथीको अनुभव गरे जस्तै शरीर इन्द्रिय आदिको संचलनबाट परात्माको पनि अनुभव गर्न सकिन्छ । केवल न्याय वैशेषिकमा मात्र नभै उपनिषद्मा पनि आत्मालाई रथीको रूपमा वर्णन गरेको छ "आत्मानं रथिनं विद्धि शरीरं रथमेवतु" कठ-उप.

---

*"मर्यादायां स्थितो धर्मः, शमश्चैवास्य लक्षणम् ।"*

*— महाभारत-१५।२२।२५*

( धर्म मर्यादामा अडेको छ र यसको लक्षण शान्ति नै हो )

सुन्तला दाख अनारहरूमा गुलियो; क्षारभूमिमा नुनिलो एवं स्वाति नक्षत्र परेको दिन समुद्रको सिपीमा परेर मोती हुन्छ। त्यसरी नै कारण कार्य र सहकारीहरूमा प्रयुक्त पद र पदार्थको सम्बन्धरूप व्यञ्जना उपाधिभेदले विभावन, अनुभावन र सञ्चरण नामले व्यवहार गरिन्छ। यसैलाई साधारणीकरण–व्यापार भन्दछन्। उपर्युक्त रत्यादि नौ स्थायी भावहरू र उनका विभाव अनुभाव संञ्चारीहरूमा आफ्नू र पराईको भन्ने बुद्धि नहुनु साधारणीकरण हो। यसले सामाजिकको हृदयमा अनुसन्धानात्मक भावना जगाएर उसको चित्तवृत्तिलाई विभावादि रूपकै गराउछ। "आवरणाभिभवार्था वृत्तिः" । (अन्तःकरणवर्ती चैतन्यको प्रकाश रति हासादि भावहरूमा पर्न नदिने अज्ञानको आवरण हटाइदिनु नै वृत्तिको काम हो) यस नीति अनुसार विभावादिद्वारा उद्बुद्ध एवं संमिलित रत्यादि स्थायीभावमा पर्ने अन्तः करणावच्छिन्न चैतन्यलाई ढाकिदिने अज्ञानको पर्दा उक्त चित्तवृत्तिद्वारा फाडिए पछि रत्यादि स्थायीभावहरूमा उक्त चैतन्यको प्रकाश पर्दछ। यी भावहरूको प्रत्यक्षमा वाहिरी इन्द्रियहरूको जरूरत नपर्ने हुदा यिनीहरू साक्षिभास्य हुन्छन्। यही चैतन्यगत अज्ञानको पर्दा टुट्नुलाई चर्वणा पनि भन्दछन्। यसरी प्रकाशमान अन्तःकरणवर्ती चैतन्यले आफ्ना अवच्छेदक रति हासादिलाई पनि प्रकाशमा ल्याउँछ। नाट्यशास्त्रकार भरतमुनि र अभिनवगुप्तको रायमा वृत्तिद्वारा अज्ञानको पर्दा टुटेर रति हास आदि भावहरूमा पर्ने (रत्याद्यवच्छिन्न) अन्तःकरणवर्ती चैतन्यकै नाम रस हो।

मम्मटाचार्यको राय अनुसार उक्त चैतन्यले उद्भासित रति हास आदि स्थायीभावहरूको नाम रस हो। यसरी यी दुइ थरी आचार्यहरूमा विशेष्य र विशेषण अंशमा मात्र फरक आएकोले पछिका आचार्यहरूले यसलाई नगण्य संझिए। रसको विषयमा मम्मटाचार्यको उक्ति यस प्रकार छ—

'कारणान्यथ कार्याणि सहकारीणि यानि च।

रत्यादेः स्थायिनो लोके तानि चेन्नाट्यकाव्ययोः ।
विभावा अनुभावाश्च कथ्यन्ते व्यभिचारिणः ।
व्यक्तः सतैर्विभावाद्यैः स्थायीभावो रसः स्मृतः ॥ ”

( का. प्र. ४।२७–२८ )

एघारौं शताब्दी पछिका जयदेव, विश्वनाथ, जगन्नाथ आदि अर्वाचीन आचार्यहरू यसै सिद्धान्तका अनुयायी हुन् ।

“आनन्दात् खल्विमानि भूतानि जायन्ते, आनन्देन जातानि जीवन्ति, आनन्दं प्रत्यभिनिविशन्ति ।”

( आनन्दबाट नै विश्वका प्राणीहरूको सृष्टि हुन्छ र आनन्दकै सहारा लिएर तिनीहरू जीवित रहन्छन्· अन्त्यमा आनन्दमै उनीहरूको लय हुन्छ । )

इत्यादि वेदवाक्यहरूको आधारमा वास्तविक आनन्दरूप उही सत् चित् सर्वज्ञ सर्वगत ब्रह्मबाट अग्निको ज्वालाबाट झिल्काहरू झैं निस्किएका अनन्त अल्पज्ञ जीवहरू मध्ये जीवदशामा पनि ब्रह्माऽऽस्वादको प्रवल संस्कार हुनेहरू योगाभ्यास समाधिद्वारा ब्रह्म साक्षात्कार गरी उही वास्तविक ब्रह्मऽऽस्वादाऽऽनन्दमा मस्त रहन्छन् । अरू अल्प-संस्कार भएका साधारण जीवहरू आफ्ना आफ्ना कर्मगति अनुसार सांसारिक सुख दुःखको अनुभव गर्दै पनि उही पहिलेका ब्रह्मावस्थाका आनन्दानुभूतिजन्य संस्कारले त्यसैका निमित्त लालायित रहन्छन् । किन्तु ब्रह्मगत आनन्दानुभूति सुखसाध्य नभएकोले तत्सदृश सुलभ पदार्थबाट उसको तृष्णा मेट्न बाहिरका विभाव अनुभाव संचारीका सहायताले [१] तदाकाराकारित चित्तवृत्ति रहुञ्ज्याल मात्र आवरण-भङ्ग भएर रति हास आदि भावहरूमा अन्तःकरणावच्छिन्न चैतन्यको

१ अन्तःकरणावच्छिन्न चैतन्य विभाव अनुभाव आदि प्रदेशमा भएर विभावादिकै आकारको बन्नु ।

प्रकाश पर्नु रूप शृङ्गार हास्य करुण आदि रसको 'जो पूर्ण एवं नित्य भएर पनि वृत्यवच्छिन्न हुनाले क्षणिक र ब्रह्माऽऽस्वाद जस्ता मात्र छन्' अनुभव गरेर दूधको तृष्णा मोइले मेटे झैं आफ्नो तृष्णा मेट्तछन् । यसरी वृत्त्यवच्छिन्न हुनाले थोरै समय मात्र अनुभव हुने भएता पनि ब्रह्माऽऽस्वादसहोदर शृङ्गार हास्य करुण आदि नवरसको अनुभूति-द्वारा प्रमोदार्णव ब्रह्मरसास्वाद तर्फ मनुष्यको प्रवृत्ति झुकाउने हुनाले साहित्यमा पनि दार्शनिकता छ भन्न सकिन्छ ।

---

" श्राद्धकर्म तपश्चैव सत्यमक्रोध एव च ।
स्वेषु दारेषु सन्तोषः शौचं विद्यानसूयिता ।।
आत्मज्ञानं तितिक्षा च धर्मः साधारणो नृप । "
— महाभारत ।

( श्राद्धगर्नु, तपस्यागर्नु, साँचो बोल्नु, नरिसाउनु, पत्निव्रत रहनु, शुद्ध हुनु, विद्या पढ्नु, कसैको डाह नगर्नु, आत्मज्ञानगर्नु र सहनशील बन्नु यी सबैका साझा धर्म हुन् । )

# न्यायशास्त्र-एक परिचय

— गोपीनाथ दवाडी

आर्य-दर्शनहरूमा न्याय-दर्शन एक प्रमुख दर्शन हो। आर्य-दर्शनलाई भारतीयदर्शनको पनि संज्ञा दिइन्छ। यसमा प्रमुख दुई विभाग छन्। पहिलो खण्डमा चार्वाक, जैन र बौद्धदर्शन पर्दछन्। दोस्रोमा न्याय वैशेषिक, सांख्य-योग, मीमांसा र वेदान्त पर्दछन्। यी सबै दर्शनहरूको आफ्नो आफ्नो सिद्धान्त र स्थान भिन्न भिन्न छ। कतिपय कुरामा यिनीहरूको एकरूपता पनि पाइन्छ। सामूहिक रूपमा एकले अर्कोलाई पुष्टि पनि गर्दछन्। यसै आर्य-दर्शन मध्येको एक न्याय-दर्शन-शास्त्रको परिचय यहाँ दिइन्छ।

## न्यायशब्दको परिभाषा

ज्ञानका सबै साधनद्वारा कुनै विषयलाई ठीक वेठीक छुट्याएर परीक्षागरी त्यस विषयको बोध गराउने उपपत्तिलाई 'न्याय' भन्दछन्। "प्रमाणैरर्थपरीक्षणं न्यायः, समस्तप्रमाणव्यापारादर्थाधिगतिर्न्यायः"– न्यायवार्तिक १–पृ. १४)। न्यायशब्दको व्युत्पत्ति यस्तो छ—जसद्वारा भन्नखोजेको कुरा सिद्धहुन्छ त्यसलाई न्याय भन्दछन्। (नीयते प्राप्यते विवक्षितार्थसिद्धिः अनेन इति न्यायः)।

## न्यायविद्या, आन्वीक्षिकी या तर्कशास्त्र

न्यायशास्त्रलाई 'आन्वीक्षिकी' पनि भन्दछन्। कुनै कुरा सुनेपछि त्यसको विचार गरी निरूपण गर्ने विद्या 'आन्वीक्षिकी' हो। (श्रवणात् अनु पश्चात् ईक्षा अन्वीक्षा उन्नयनम्। तन्निर्वाहिका आन्वीक्षिकी- गौ. सू. १।१।१।)। अथवा प्रत्यक्ष र आगममा आश्रित अनुमान

नै न्यायविद्या वा आन्वीक्षिकी हो। (प्रत्यक्षागमाभ्यामीक्षितस्य अन्वीक्षणमन्वीक्षा अनुमानम् तया प्रवर्तते इति आन्वीक्षिकी न्यायविद्या न्यायशास्त्रम्–न्यायभाष्य १।१)। न्यायविद्यालाई तर्कशास्त्र पनि भन्दछन्। कुनै विषयको निरूपणगर्नलाई श्रवण मनन निदिध्यासन गर्नुपर्दछ भनेर वेदमा भनिएको छ। श्रुति या आप्तवचन सुनेर त्यो ठीक वेठीक छुट्याउने काम मनन या तर्कद्वारा हुन्छ। सत्यकुराको समर्थन र असत्यकुराको खण्डनको निमित्त हामीलाई प्रमाणको साथमा तर्क सहायक हुन्छ। अतः प्रमाणको सहायक मानेर तत्त्वनिर्णयमा अग्रसर भएको न्यायविद्यालाई तर्कशास्त्र भन्दछन्।

## न्यायशास्त्रको प्राचीनता र व्यापकता

न्यायशास्त्रका दुई हाँगा छन्। एक वस्तुतत्त्वप्रधान जो वैशेषिक हो। अर्को तर्कप्रधान, जसलाई न्याय भन्दछन्। यसमा वस्तुतत्त्व पहिलो र त्यसको उपपत्तिगर्ने शास्त्र पछिको भएकोले वैशेषिक अघिको र तर्कशास्त्र पछिको हो। सर्वप्रथम 'न्यायो मीमांसा धर्मशास्त्राणि' (आत्मोपनिषद् २ खण्ड) भनेर वेदमा उल्लेख भएको पाइन्छ। त्यस पछि मनुले —

"अङ्गानि वेदाश्चत्वारो मीमांसान्यायविस्तरः।
पुराणं धर्मशास्त्रं च विद्या ह्येताश्चतुर्दश ॥"

भनेर चौध विद्यामा न्यायविद्याको गणना गरेका छन। यस्तै 'आन्वीक्षिकी त्रयी वार्ता' भनेर चार विद्यामा एक आन्वीक्षिकी गनिन्छ। यस्तै– 'पुराणन्यायमीमांसा' भनी चौध विद्यामा न्याय एक विद्या हो भनी याज्ञवल्य भन्दछन्। विष्णुपुराणमा पनि यही कुरा पाइन्छ। 'आन्वीक्षिकी दण्डनीतिस्तर्कविद्यार्थशास्त्रयोः' भनेर अमरकोषकारले तर्कविद्याको अर्को नाम आन्वीक्षिकी हो भनेर बताए। यस्तै गरेर न्यायशास्त्रको उल्लेख रामायण, महाभारत र अरू ग्रन्थ-

हरूमा 'आन्वीक्षिकी' 'हेतुविद्या' 'तर्कशास्त्र' 'वाकोवाक्य' 'प्रमाण-शास्त्र' आदि नामबाट भएको पाइन्छ। न्यायशास्त्र र त्यसको अध्ययन व्यवहार र प्रचार नभैकन श्रुति स्मृति इतिहास पुराण आदि उक्त ग्रन्थहरूमा यसको उल्लेख हुने थिएन। यसबाट न्यायशास्त्रको प्राचीनता र व्यापकता स्पष्ट हुन्छ।

## न्यायशास्त्र र ग्रन्थकार

*न्यायसूत्र* :- न्यायशास्त्रका प्रवर्तक गौतम हुन्। यिनलाई अक्षपाद पनि भन्दछन्। ऋषिको रूपमा गौतमको समय अति प्राचीन मानिए पनि आधुनिक इतिहासकारहरूले ईस्वीपूर्व छैटौं शताब्दि मानेका छन्। गौतमले न्यायसूत्रको रचना गरे। यसमा न्यायशास्त्रका १६ पदार्थ प्रमाण प्रमेय आदिको निरूपण गरिएको छ। यसै न्याय-सूत्रको आधारमा न्यायशास्त्रको सम्पूर्ण ग्रन्थहरू लेखिएका छन्। गौतमसूत्रमा ५ अध्याय छन्। हरेक अध्यायमा २ विभाग गरी जम्मा १० आह्निक छन्। जम्मा ८४ प्रकरण र ५२८ सूत्रहरू छन्।

*न्यायभाष्य* :- गौतमसूत्रको व्याख्याहरूमा वात्स्यायनको भाष्य सबै भन्दा पुरानो छ। यसको समय ईशापूर्व दोश्रो शताब्दि मानिएको छ। यसमा सूत्रानुसार व्याख्याको साथ आफ्नो मत पनि ठाउँ ठाउँमा वात्स्यायनले देखाएका छन्।

*न्यायवार्तिक* :- वात्स्यायनभाष्यमा उद्योतकराचार्यले विस्तृत वार्तिक लेखेका छन्। दिङ्नागादि बौद्ध कुतार्किकहरूको अज्ञान हटाउन वार्तिक लेखिएको हो भनी उद्योतकर भन्दछन्—'कुतार्किकाज्ञान-निवृत्तिहेतुः करिष्यते तस्य मया निबन्धः'।

*न्यायवार्तिक तात्पर्यटीका* :- उद्योतकरको वार्तिकमा दशौं शताब्दिमा वाचस्पतिमिश्रले तात्पर्यटीका लेखे। यसमा विशेष गरेर बौद्धमतको खण्डन पाइन्छ।

*तात्पर्यपरिशुद्धिः*— उदयनाचार्यले दशौं शताब्दिमा तात्पर्य-टीकामा तात्पर्यपरिशुद्धि नामको व्याख्या लेखे। यस्तै उनले 'न्याय कुसुमाञ्जलिः' नामक ग्रन्थमा अनीश्वरवादीहरूको मत खण्डन गरेर ईश्वरसिद्धि गरेका छन्। 'आत्मतत्त्वविवेक' नामक अर्को ग्रन्थमा बौद्ध-मत खण्डन गरी आत्माको सत्ता स्थापना गरेका छन्।

*न्यायमञ्जरी* :– एघारौं शताब्दिमा जयन्तभट्टले न्यायसूत्रको व्याख्यारूपमा न्यायमंजरी नामको ग्रन्थ लेखे। यसैगरेर न्याय-शास्त्रमा अरू विद्वान्हरूले पनि धेरै ग्रन्थ लेखेका छन्। यसमा भासर्वज्ञको 'न्यायसार' र वरदराजको 'तार्किकरक्षा' प्रसिद्ध छन्।

## प्राचीन र नव्यन्याय

बाह्रौं शताब्दिमा मिथिलामा गंगेश उपाध्याय नामका एक ठूला विद्वान् जन्मिए। यिनले न्यायशास्त्रको इतिहासमा एउटा ठूलो परिवर्तन ल्याए। 'प्रत्यक्षानुमानोपमानशब्दाः प्रमाणानि' यस गौतम सूत्रलाई लिएर प्रमाणशास्त्रमा 'तत्त्वचिन्तामणि' नामको एक नयाँ ग्रन्थ लेखे। यसको लेखनशैली र भनाइ विलकुल नयाँ ढंगको छ। त्यसैले यस ग्रन्थ र यस ग्रन्थका व्याख्याग्रन्थहरूलाई 'नव्यन्याय' को नाम दिइयो। यो भन्दा अघिका गौतमसूत्रका आधारमा लेखिएका सबै ग्रन्थहरू 'प्राचीनन्याय' को नामले प्रसिद्ध भए। नव्यन्यायका अरू ग्रन्थ एवं ग्रन्थकारहरूमा गंगेशका छोरा वर्द्धमानले तत्त्वचिन्ता-मणिमा 'प्रकाश' नामक टीका लेखे। यस्तै पक्षधरमिश्रले 'आलोक' वासुदेवमिश्रले 'न्यायसिद्धान्तसार' र पछि रघुनाथ शिरोमणिले बंगाल ( नवद्वीप ) मा नव्यन्यायको प्रचार गरे। यस्तै मथुरानाथ, जगदीश र गदाधर आदि ठूला ठूला विद्वान्हरूले नव्यन्यायमा विस्तृत टीका लेखेका छन्।

## न्यायशास्त्रको विषयवस्तु

न्यायशास्त्रका प्रवर्तक गौतमले आफ्नो सूत्रमा १६ दार्शनिक

विषयहरू प्रस्तुत गरे जसलाई पदार्थ भन्दछन्। संक्षेपमा १६ पदार्थ यी हुन् —( १ ) प्रमाण या ज्ञानको साधन जम्मा ४ छन्-प्रत्यक्ष, अनुमान, उपमान र शब्द। ( २ ) प्रमेय या ज्ञेयवस्तु जम्मा १२ छन्; जस्तै-आत्मा, शरीर, इन्द्रिय, अर्थ, बुद्धि, मन, प्रवृत्ति, दोष, प्रेत्यभाव, फल, दुःख र अपवर्ग। ( ३ ) संशय या शङ्का ( ४ ) प्रयोजन ( ५ ) दृष्टान्त ( उदाहरण ) ( ६ ) सिद्धान्त ( ७ ) अवयव ( अनुमान प्रक्रियामा प्रयोग गरिने वाक्य ( ८ ) तर्क ( प्रमाणको सहायक ) ( ९ ) निर्णय ( १० ) वाद ( तत्त्वनिर्णयको निमित्त गरिने छलफल ( ११ ) जल्प ( स्वपक्ष साधन र परपक्ष खण्डन गर्न प्रवृत्त भएको वादविवाद ( १२ ) वितण्डा ( परपक्ष खण्डनको मात्र उद्देश्यले भएको वादविवाद ) ( १३ ) हेत्वाभास ( दोषयुक्त हेतु ) ( १४ ) छल ( १५ ) जाति ( १६ ) निग्रहस्थान ( कुनै वाक्यको प्रयोगमा विपरीतज्ञान वा अज्ञान। यसरी निरूपण गरिएका विषयहरूलाई हेर्दा न्यायका विषयवस्तुलाई संक्षेपमा ४ भागमा विभाजित गर्न सकिन्छ। ( १ ) प्रमाण या ज्ञानको साधन ( २ ) प्रमेय या आध्यात्मिक वाह्यजगत् ( ३ ) आत्मा र यसको मोक्ष ( ४ ) ईश्वर। तत्त्वज्ञानबाट मिथ्याज्ञान नाश हुन्छ त्यसबाट दोष अनि प्रवृत्ति, जन्मको क्रमशः नाश हुँदै गएर दुःखको संधैको निमित्त नाश हुनु ( आत्यन्तिकी दुःख विमुक्ति ) मोक्ष हो।

## न्यायशास्त्रको निर्वचन शैली

नव्यन्यायको नयाँ ढंगको शैली प्रादुर्भाव हुनु भन्दा पहिलेका न्यायशास्त्रका ग्रन्थहरूमा विषयवस्तु निर्वचनगर्ने ढंग या तरीकाको क्रम यसप्रकार छ ( १ ) उद्देश-कुनै पदार्थको नाउँ यो हो भनेर बताउनु उद्देश हो। ( २ ) लक्षण-अरू पदार्थबाट त्यस पदार्थलाई छुट्याउने स्वरूप लक्षण हो। ( ३ ) परीक्षा-लक्षित पदार्थको लक्षण ठीक छ छैन भनी निश्चय गर्नु परीक्षा हो ( वात्स्यायनभाष्य १।२ )। कुनै पनि विषयको पहिले उद्देश हुन्छ अनि लक्षण र त्यस पछि परीक्षा गरेर

निर्णयमा पुगिन्छ ।

## न्यायशास्त्रको लक्ष्य

गौतमले आफ्नो न्यायसूत्रको पहिलो सूत्रमा उक्त सोह्र पदार्थहरूको तत्त्वज्ञानबाट मुक्ति हुन्छ भनेर बताएका छन् । जीवन दुःखमय छ, त्यो दुःख आत्मादि पदार्थहरूको तत्त्वज्ञानबाट नाश हुन्छ । सँधैको लागि दुःखनाश हुनु नै मोक्ष हो । यसरी न्यायदर्शनको लक्ष्य अरू आर्यदर्शनहरूको झैं 'मोक्ष' देखाएतापनि 'प्रमाणद्वारा वस्तुको यथार्थज्ञानगर्नु' नै न्यायशास्त्रको मुख्यलक्ष्य हो । यो कुरा सोह्र पदार्थमा संशयदेखि लिएर निग्रहस्थान तक चौध पदार्थहरूको निर्वचनबाट स्वतः स्पष्ट हुन्छ । वात्स्यायनले यसलाई न्यायभाष्यमा छर्लङ्ग पारेका छन् । "तेषां (संशयादीनां) पृथक् वचनमन्तरेण आध्यात्मविद्यामात्रमियंस्यात् यथोपनिषदः तस्मात् संशयादिभिः पदार्थैः पृथक् प्रस्थ्याप्यते"-(वात्स्यायनभाष्य १।१)। केवल मुक्ति मात्र यसको लक्ष्य भए प्रमाण र प्रमेय दुई पदार्थको ज्ञान मात्र भए पुग्दथ्यो । मुक्तिशास्त्रमा शंका, प्रयोजन, तर्क वाद, जल्प, वितण्डा, छल र निग्रहस्थान जस्ता पदार्थहरूको निर्वचन गर्नुपर्ने आवश्यकता थिएन । अतः न्यायशास्त्र पहिले तर्कशास्त्र या आन्वीक्षिकी हो अनि मात्र अध्यात्मविद्या या मुक्तिशास्त्र हो ।

## न्यायशास्त्रको पठन पाठन

संस्कृतदर्शनहरूमा 'न्याय' को अध्ययन अध्यापन नेपालमा अघिदेखि हुँदै आएको छ । परीक्षाको दृष्टिबाट प्रथमा, पूर्व र उत्तर मध्यमा र शास्त्री तक संस्कृतका विभिन्न विद्यालय र महाविद्यालयहरूमा र स्नातकोत्तर एम्. ए समकक्ष नव्य एवं प्राचीन न्यायाचार्यको अध्ययन त्रिभुवन विश्वविद्यालय अन्तर्गतको आचार्य विभागमा हुन्छ । न्यायशास्त्र लगायत सबै विषयहरूको अध्ययन र पाठ्यविषय आदिमा

आधुनिकता ल्याउने र यिनका मूल्यलाई उजिल्याउँदै लैजाने विषयमा विश्वविद्यालयका अधिकारीहरू र प्राध्यापकहरू उत्सुक भएर अघिबढ्दै छन्।

## न्यायशास्त्रको उपयोगिता

जुनसुकै कुराको तत्त्वनिर्णय गर्दा पनि तर्कको ठूलो आवश्यकता पर्दछ। वेदले 'मनन' या तर्कलाई विशेष जोड दिएको छ। भौतिक या आध्यात्मिक जुनसुकै वस्तुतत्त्वको यथार्थज्ञान गर्नुपर्दा पनि तर्क सहायक भएकोले तर्कशास्त्र सबैलाई सँधै सबै ठाउँमा ज्यादै उपयोगी हुन्छ। तर्कविद्या या न्यायशास्त्रले बुद्धिद्वारा सूक्ष्मातिसूक्ष्म विषय र विचारहरूलाई केलाएर शंका र समाधान गरी निरीक्षण र ज्ञानगर्ने प्रवृत्ति बसाल्दछ। अतः न्यायशास्त्रको अध्ययनबाट बुद्धिमा सूक्ष्मता र निर्मलता आउँछ। वाक्चातुर्यद्वारा जितहार हुने वादविवाद र वकालत जस्ता विषयमा चातुर्यकासाथ विजयप्राप्तगर्न न्यायशास्त्रको अध्ययन ज्यादै उपयोगी हुन्छ। प्रमाणको साथमा जल्प, वितण्डा, छल, जाति, निग्रहस्थान जस्ता विपक्षीलाई कुनै तरहले हराएर आफ्नो विजयगर्ने विषयहरूको विवेचनको प्रधानता न्यायशास्त्रमै पाइन्छ। वेद या धर्मशास्त्र, व्याकरण या साहित्य, वेदान्त या ज्यौतिष सबै शास्त्रहरूमा जब कुनै वस्तुको यथार्थनिर्णय गर्नु पर्‍यो 'ननु', 'नच' शंका, समाधान, तर्क, मननको स्थान पहिले आउँछ। त्यसैले सबैशास्त्रमा न्यायशास्त्र तत्त्वनिर्णयको साधन र सहायक बन्छ। अतः न्यायशास्त्रको उपयोगिता महान् छ। यो एउटा बत्ती हो जसले सबै विद्यालाई उज्यालो पारेर यथार्थ कुरा देखाइदिन्छ। त्यसैले न्यायशास्त्र सबै कामको उपाय हो, सबै धर्मको आश्रय हो। 'प्रदीपः सर्वविद्यानामुपायः सर्वकर्मणाम् । आश्रयः सर्वधर्माणां विद्योद्देशे प्रकीर्तिताः'।

## न्यायशास्त्रको मूल्याङ्कन

न्यायशास्त्र उपपत्तिशास्त्र हो। यसले मन बाहिर स्थूलजगत्मा वस्तुको स्वतन्त्रसत्ता स्वीकार गर्दछ। यो शास्त्र केवल विश्वासले या

कुनै शास्त्रमा बताएकोछ भन्दैमा मान्दैन। प्रमाणद्वारा कुनै विषयको यथार्थज्ञान नभएसम्म यो शास्त्र कुनै कुरा पनि स्वीकार गर्दैन। कुनै प्रमाण यदि दोषमुक्त छ भने त्यसबाट भएको ज्ञान वास्तविक हुनसक्तैन। अतः न्यायशास्त्रमा दोषी प्रमाणलाई केलाएर सच्चा प्रमाण पत्ता लाउने मार्गको विस्तृतव्याख्या पाइन्छ। प्रमाणको यथार्थतामा नै त्यसबाट हुने ज्ञानको यथार्थता भरपर्दछ। यो कुरा तर्कद्वारा निर्णय गरेर यो शास्त्र अघिबढ्छ। यसैले न्यायशास्त्र तर्कमूलक यथार्थवादमा आधारित छ। यस्तै गरी आत्मा, मुक्ति, ईश्वर जस्ता विषयहरूको विवेचनमा पनि न्यायशास्त्र पछि पर्दैन। आत्मा कहिल्यै मर्दैन। सारा जीवहरू सबै दुःखबाट मुक्तिपाउन चाहन्छन्। कुनै काम देख्दा त्यसको निर्माता थाहा भए झैं जगत्‌को कर्ता ईश्वर छ भनी धेरै प्रमाणद्वारा ईश्वरलाई स्वीकार गर्दछ। तर केवल ईश्वरमा नै सबै कुरा भर पर्दैन। जीवका सुख र दुःख उसका कर्मका फल हुन् भनेर यसले 'कर्मवादलाई प्रधानता दिन्छ। हामी जस्तो कर्म गर्दछौं त्यस्तै फल पाउँछौं। यो न्यायसिद्धान्त सार्वदेशिक र सार्वकालिक मानिन्छ। यो तर्कविद्या मानिसको बौद्धिकपक्षको पोषक हो। मानवले जहाँसम्म चिन्तन र मनन गर्ने छ, यसले पुष्टि दिइरहने छ।

'आयुर्वेदो धनुर्वेदो गान्धर्वश्चेति ते त्रयः।
अर्थशास्त्रं चतुर्थं तु विद्या ह्यष्टादशैव तु" ॥

आयुर्वेद, धनुर्वेद, गान्धर्ववेद र अर्थशास्त्र, चार वेदहरूका क्रमपूर्वक यी चार उपवेदहरूको समेत समावेश गर्दा जम्मा अठारह विद्या हुन्छन्। कुनै विद्वान्को मतमा अर्थशास्त्रको स्थानमा तन्त्रशास्त्रको ग्रहण गरिएको छ। महर्षि पाणिनिले शिक्षा–नामक वेदाङ्गमा —

"तस्मात्साऽङ्गमधीत्यैव ब्रह्मलोके महीयते।"

अर्थात् अङ्गहरूको साथ वेदको अध्ययन गर्ने पुरुष ब्रह्मलोकमा पूजित हुन्छ भन्नु भएको छ। त्यसैगरी महर्षि पतञ्जलिले पनि— "ब्राह्मणेन निष्कारणो धर्मः षडङ्गो वेदोऽध्येयो ज्ञेयश्च" यो वेदवाक्यको उद्धरण गरेर दृष्ट कारणको अपेक्षा नगरेर अङ्गहरूको साथ वेदको अध्ययन र ज्ञानको कर्तव्यता देखाउनु भएको छ।

स्मृतिकार भगवान् मनुले पनि "अध्यापनं ब्रह्मयज्ञः" भनेर वेद आदि शास्त्रको अध्ययन र अध्यापन दुवैलाई "ब्रह्मयज्ञ"को रूपमा निर्देश गर्नुभएको छ। तदनुसार ऐले पनि द्विजातिको नित्यकर्ममा निर्दिष्ट पञ्चमहायज्ञहरूका क्रममा ब्रह्मयज्ञको रूपमा वेद र वेदाङ्ग आदिको प्रतीक ग्रहण गरेर पाठ गर्ने पनि प्रचलन छ।

पूर्वोक्त विद्याहरूको अध्ययनको दृष्टफल ज्ञान र त्यसबाट तत्तत्कर्मको अनुष्ठान एवम् अदृष्टफल धर्म र ब्रह्मलोक आदि फलको प्राप्ति शास्त्रमा वर्णन गरिएको छ। शास्त्रले बताइएका प्रत्येक कर्ममा विधि र निषेध उपलब्ध हुन्छ। पूर्वोक्त विद्याहरूको अध्ययनको निषेध गरिएको समयलाई "अनध्याय" भन्दछन्। त्यसको म संक्षेपरूपमा केही उल्लेख गर्दछु। अनध्यायका दुइ भेदछन्:—नित्य र नैमित्तिक। यिनमा सामान्यतः निर्देश गरिएको अनध्यायलाई "नित्य" एवम् आइपरेको निमित्त–विशेषबाट हुने अनध्यायलाई "नैमित्तिक"

भन्दछन् । सामान्यतः अष्टमी, चतुर्दशी, पूर्णिमा, अमावास्या र प्रतिपत्‌मा हुने अनध्यायलाई "नित्य" भन्दछन् । ग्रहण आदिलाई निमित्त मानी हुने अनध्यायलाई "नैमित्तिक" भनेर निर्देश गरिएको छ ।

अब म नित्य अनध्यायको केही चर्चा गर्दछु । भगवान् मनु भन्नु हुन्छ—

"अमावास्या गुरुं हन्ति, शिष्यं हन्ति चतुर्दशी ।
ब्रह्माऽष्टकापौर्णमास्यौ, तस्मात्ताः परिवर्जयेत् ॥" (४-११४)

अर्थात् अमावास्यामा अध्ययन गर्नाले गुरुको, चतुर्दशीमा अध्ययन गर्नाले शिष्यको नाश हुन्छ । अष्टमी र पूर्णिमामा अध्ययन गर्नाले वेद आदि शास्त्रको विस्मृति हुन्छ, त्यस कारणले यी तिथिमा अध्ययन नगरोस् । यस्तै प्रकारको बृहन्मनुको उक्ति छ—

"पक्षद्वये चतुर्दश्योरष्टमी–द्वितये तथा ।
पक्षादावपि पक्षान्ते ब्रह्म नाऽधीयते नरैः ॥"

अर्थात् चतुर्दशी, अष्टमी, प्रतिपत्, अमावास्या र पूर्णिमामा शिष्टहरू वेद आदिको अध्ययन गर्दैनन् । पूर्वोक्त तिथिहरूमा अध्ययन गर्नाले हुने अनिष्ट पनि उहाँकै शब्दमा सुन्नुहोस्—

"अष्टमी हन्त्युपाध्यायं, शिष्यं हन्ति चतुर्दशी ।
अमावास्योभयं हन्ति, प्रतिपत्पाठमात्रतः ॥"

अर्थात् अष्टमीमा अध्ययन गर्नाले गुरुको, चतुर्दशीमा अध्ययन गर्नाले शिष्यको, अमावास्यामा अध्ययन गर्नाले दुवै ( गुरु र शिष्य )-को नाश हुन्छ, एवम् प्रतिपत्‌मा पाठमात्रले दुवैको नाश हुन्छ । बौधायनधर्मसूत्रमा यसमा केही फरक भएको पाठ पाइन्छ । जस्तै—

"हन्त्यष्टमी ह्युपाध्यायं, हन्ति शिष्यं चतुर्दशी ।

हन्ति पञ्चदशी विद्यां तस्मात्पर्वाणि वर्जयेत ॥" १-११-२३

अर्थात् अष्टमी र चतुर्दशीमा अध्ययनको फल बृहन्मनुले भने जस्तै एवम् पूर्णिमा र अमावास्यामा अध्ययन गर्नाले विद्याको नाश हुन्छ। महर्षि हारीत भन्नुहुन्छ—

"नाऽधीयीत नरो नित्यमादावन्ते च पक्षयोः।
आदौ तु हीयते बुद्धिरन्ते ब्रह्म च हीयते॥"

अर्थात पक्षको आदि (प्रतिपत) र अन्त (पूर्णिमा र अमावास्या) मा अध्ययन नगरोस्, किनभने प्रतिपत्मा अध्ययन गर्नेको बुद्धि हीन हुन्छ, एवम् पूर्णिमामा अध्ययन गर्नेको वेद आदि शास्त्रको नाश (विस्मृति हुन्छ। यस्तै प्रकारले वाल्मीकि रामायणमा प्रतिपत्मा अध्ययन गर्नाले हानि देखाएको छ—

"सा प्रकृत्यैव तन्वङ्गी तद्वियोगाच्च कर्शिता।
प्रतिपत्पाठशीलस्य विद्येव तनुतां गता॥" सु.का. ५९-३२

हनूमान्जी लङ्काबाट फर्केर अङ्गद आदिलाई भन्नु हुन्छ कि—स्वभावैले दुब्ली भएकी सीताजी रामचन्द्रजीको वियोगले प्रतिपत्मा पढने व्यक्तिको विद्या झैं झन दुब्ली हुनु भएको छ। यस प्रकार नित्य अनध्यायका आश्रय ती ती तिथिमा अध्ययनको विशेष दोषको चर्चा गरियो। अव अनध्यायमा अध्ययन गर्नाले हुने सामान्य दोषको केही चर्चा गरिन्छ। महर्षि लिखित लेख्नुहुन्छ—

"छिद्राण्येतानि विप्राणां येऽनध्यायाः प्रकीर्तिताः।
छिद्रेभ्यः स्रवति ब्रह्म ब्राह्मणेन यदार्जितम॥
तत्काले तस्य रक्षांसि श्रियं ब्रह्म यशो बलम्।
सर्वमादाय गच्छन्ति वर्जयन्तीसितं फलम्॥"

अर्थात जुन अनध्यायहरू बताइए ती ब्राह्मणहरूका छिद्र हुन्।

छिद्रहरूबाट ब्राह्मणले उपार्जन गरेको वेद चुहुन्छ ( नष्ट हुन्छ )। राक्ष-सहरू त्यस समयमा ब्राह्मणका लक्ष्मी, वेद, यश, बल सब लिएर जान्छन् र उनले इच्छा गरिएको फलको त्याग गराउँछन्। धर्मशास्त्रकार यम भन्नु हुन्छ—

"आयुः प्रज्ञां पशून्मेधां कृन्तामि सुकृतं च यत।
अनध्यायेष्वभ्यसतो ब्रह्म व्याहरतस्तथा ॥"

अर्थात् अनध्यायमा वेदको अभ्यास तथा उच्चारण गर्नेको आयु बुद्धि, पशु, मेधा ( धारणावती बुद्धि ) र धर्मको पनि म नाश गरिदिन्छु। महर्षि मार्कण्डेय भन्नुहुन्छ—

"अनध्यायेषु दारिद्र्यं कुष्ठरोगित्वमेव च।
प्राप्नोत्येव न सन्देहः परमध्ययनात्पुनः ॥"

अर्थात् अनध्यायमा अध्ययन गर्ने व्यक्ति दरिद्रता र कुष्ठ रोगको भोग गर्दछ, यसमा सन्देह छैन।

नित्य अनध्यायका केही प्रमुख भेदहरूको संक्षेपमा चर्चा गरियो। कलिकालको विकराल स्थितिमा भारत जस्तो धर्मनिरपेक्ष राज्यमा पनि संस्कृत जगत्मा पूर्वोक्त अनध्यायहरू मानिएकै छन्। पूर्वोक्त अनध्यायहरूको साथ जस्मा ३७ अनध्यायहरूको याज्ञवल्क्यस्मृतिमा उल्लेख गरिएको छ। कलियुगमा ती सबैको पालन अशक्य हुनाले मुख्य अनध्यायहरूको यहाँ प्रदर्शन गरिएको छ। हाम्रो धर्ममा व्रतबन्ध, विवाह आदि संस्कारहरूका र यात्रा आदिका कालहरूमा जस्तो अदृष्टमूलक विधिवाक्य र निषेधवाक्य छन् त्यस्तै अध्ययन र अध्याप-नका कालमा पनि छन्। यसकारण विषयान्तरको पठनमा जस्तो शनिवार वा रविवारमा अवकाशको लागि अवकाश मानिन्छ त्यसको विपरीत शास्त्रको अध्ययनमा शास्त्रमूलक अवकाश अनध्यायकालमा मानिन्छ। भगवान् श्रीकृष्णले गीतामा भन्नु भएको छ—

"तस्माच्छास्त्रं प्रमाणं ते कार्याऽकार्यव्यवस्थितौ ।
ज्ञात्वा शास्त्रविधानोक्तं कर्म कर्तुमिहाऽर्हसि ॥"१६-२४

अर्थात् हे अर्जुन ! तिमीलाई कार्य र अकार्यको व्यवस्थाको लागि शास्त्र प्रमाण छ. यो कुरा जानेर तिमीले शास्त्रविहित कर्म गर्नुपर्दछ । यस कारण हामीले शास्त्रको अध्ययनमा शास्त्रविहित विधि-निषेधको पालन गर्नुपर्दछ । शास्त्रोक्त जुन कुनै कुरा पनि श्रद्धापूर्वक गर्नुपर्दछ । गुरु र शास्त्रवाक्यमा विश्वास गर्नुलाई "श्रद्धा" भन्दछन् । अश्रद्धाले गरेका कर्मको फल भगवान् बताउनुहुन्छ—

"अश्रद्धया हुतं दत्तं तपस्तप्तं कृतं च यत् ।
असदित्युच्यते पार्थ ! न च तत्प्रेत्य नो इह ॥ (गीता) १७-२८)

हे अर्जुन ! अश्रद्धाले हवन, दान, तपस्या र जो कुनै कर्म गरिन्छ त्यसलाई "असत्" भन्दछन् ; त्यसको फल न परलोकमा मिल्दछ न यसलोकमा । भनेको पनि छ "यदेव श्रद्धया करोति तदेव वीर्यवत्तरं भवति" अर्थात् जो कार्य श्रद्धाले गर्दछ त्यो नै प्रवल अर्थात् सफल हुन्छ । यसकारण अनध्यायतिथिको वास्ता नगरेर अध्ययनगर्नाले शास्त्रोक्त फल मिल्दैन ।

इति ।

# चूडाला

— बदरीनाथ भट्टराई

हेर, महारानी ? म राजा भएको धेरै वर्ष भयो, स्वर्गको भन्दा पनि बढी सुखभोग गरें। तर खै शान्ति ? फेरि यही सुखसयलमा रमाइरहें भने पछि मेरो के गति होला ? घरैमा बसेर ज्ञान हुनेभए किन ऋृषिहरू वनमा जान्थे ?

जे पनि समयमा गरेको सुहाउँछ, महाराज ? वसन्तमा फुल फुलेको सुहाउँछ, शरद्मा फल फलेको। जहाँसम्म जवानी बितेको छैन तहाँसम्म घरमा बस्नाले नै शोभा दिन्छ। विवेक विचार गर्दै गयो भने गृहस्थ पनि मुक्त हुन्छ भन्ने वचन छैन र ? फेरि वेला भएपछि हामी दुवै वनमा जाऔंला। हुँदैन ?

त्यसो होइन, जैले वैराग्य आयो उसैदिन वन जाओस् भन्ने शास्त्र पनि त छ नि। फेरि वनमा न शत्रुहरूले हमला गर्ने डर हुन्छ न वन्धुहरूको षड्यन्त्रको भय हुन्छ. न कसैको आक्षेप सुन्नुपर्छ। यहाँ त सन्ध्याको उपासना गर्न लाग्दा पनि राजकाज नै फुरिरहन्छ। विहानैदेखि कैले मन्त्रीहरूसँग सल्लाह गऱ्यो, कैले दुनियाँको उजूर सुन्यो, कैले दूतहरूका कुरामा रुम्मझियो। कैले फौजतर्फ ध्यान दियो। यसरी दिनभर कसिगर थुपारेपछि त्यस्तो हृदयमा भगवान किन आइरहनुहुन्थ्यो ?

अरूको भारी हजूर किन बोकिबक्सिन्छ ? शरीर, इन्द्रिय, मन त हजूर व्हैन। यो सारा काम त उनीहरूको हो। वादल लागे पनि नलागे पनि सूर्यलाई के ? हामीले आत्मातिर पो दृष्टि दिनुपर्छ।

अलि चर्केर महाराज शिखिध्वजले भने, मन हल्लिइरहन्छ

भने कसरी आत्मदर्शन होला ? हल्लिएको पानीमा के सूर्यको छाया छर्लङ्ग देखिन्छ ?

त्यादै नम्रभावमा हात जोरेर महारानी चूडालाले भनिन् , 'म गर्छु' इत्यादि कर्तापनलाई हामीले छोड्नुपर्छ, वानी बिग्रेकोले म गर्ने, म भोग्ने इत्यादिभाव आए पनि विवेकद्वारा आफू कर्ता होइन भन्ने निश्चय बढाउनुपर्छ । हो· घरका जहान प्रतिकूल भए वन पनि जाने आवश्यकता पर्थ्यो, तर हजूर यहीं एकान्त बगैंचामा राज होस् । श्रवण, मनन, निदिध्यासनतिर लागिबक्सियोस् । सारा राजकाज म चलाइ-दिन्छु । भजनका लागि यहाँ हजूरलाई जति सुविस्ता होला त्यति बाघ भालु इत्यादिले सताउने वनमा कसरी ? फेरि कोमल गात भएको हजूर जंगलमा कसरी राज होला । यहाँ चौसट्ठी व्यञ्जन ज्यूनार हुने हजूरलाई वनको कन्दमूल कसरी रुच्ला ? फेरि कैसा सुबला होला ?

शिखिध्वजले भने, मान्छेले आँटेपछि के गर्न सक्दैन ? के पृथ्वीमाता छैनन् र ? म उनकै काखमा सुतिदिन्छु । हात नै तकिया बनाउँछु । अँजुली नै थाल, कचौरा, गिलास हो । छाहारीका साथसाथै फलफूलहरू सदावर्तमा बाँड्ने रूखहरू छँदैछन् । चमरपंखा हंकने लहराहरू पाइहालिन्छन् । पानी लैजाओ भनेर कराउँदै अगि बढेका खोलानाला बगिरहेकै हुन्छन् । अब के चाहियो ? हेर महारानी ? त्याग र तपस्या विना ज्ञान हुँदैन । त्यागभन्दा अर्को बाटो छैन भनेर वेदले घोषणा गरिरहेछन् । बहिरो जस्तो भएर वेदको वचन नसुने कहीं ज्ञान होला ? वास्तवमा यो शहर भन् डरलाग्दो जंगल हो । मानिसको आकार भएर के गर्नु ? यहाँका प्राणीहरू भन् भयानक छन् । यिनीहरूले नै मेरो मासु खाइसके, रगत सुकाइसके । यसैले तिमीलाई फेरि दोह-र्याएर भन्छु । सती स्त्रीहरू पतिको इच्छामा कहिले पनि बन्चरो चलाउँदैनन् । फेरि अर्को कुरा पनि भन्छु, तिमीले मेरो पछि नलाग्नू । यहीं बसेर हेरचाह गर्नू । किनभने तिम्रा शिरीष जस्ता अंगमा काँडाले घोच्दा मलाई बाधा हुनेछ उता सौराष्ट्रमा राजकुमारीको सुख भोग्यौ ।

यता यो मालवदेशमा पनि आएर रानी बन्यौ। यसैले दुःख भनेको तिमीलाई थाहा नै छैन। मैले त शिकारमा जाँदा घाम, पानी, भोक, प्यास इत्यादि सारा भोगेको छु। यसैले भन्या मान।

चूडालाले मनमनै विचार गरिन्, लोग्नेमान्छे ज्यादै एकोहरा हुँदा रहेछन्। के गर्नु? मैले हीरा दिंदा पनि यिनले लिएनन् अझ पत्थरतिर पो यिनको दृष्टि गइरहेको छ। यही दरबारमा बसेर मैले आत्माको अनुभव गरें। आत्मदर्शन भयो भन्दा यिनी पत्याउँदैनन्। अझ उल्टो उपहास गर्छन्। स्त्रीहरू भन्दा हामी बलिया छौं बुद्धिमान् छौं भन्ने भयानक अहंकार पुरुषहरूमा हुँदोरहेछ। जसले सक्ली आफूलाई चिनेको छैन त्यो केको बलियो? त्यो केको बुद्धिमान्? मेरो बाहिरी मुखको चमक र प्रसन्नता देखेर किन यस्तो भयो भनी एक पटक प्रश्न त गरेका हुन्। तर करोडौं चन्द्रमा भन्दा पनि शीतल मेरो अखण्ड अनुभवको विषयमा यिनलाई केही पनि थाहा छैन। योग-पद्धतिको आश्रय लिएर मैले कुण्डलिनी पनि जगाएँ। आफ्नो बाटोमा ल्याउनाको लागि एकदिन अलिकति सिद्धि पनि देखाएँ, तर के आउँथे। अझ चटक गरेकी भनेर उल्ल्याए। त्यसपछि आठै सिद्धि आफ्ना हातमा हुँदा पनि म चूप लागें। अब यिनलाई पनि ज्ञानी गराउने इच्छा गरेकी हुँ। पतिदेवको उद्धार गर्नु पत्नीको परम कर्तव्य हो। तर बाहिरी त्यागलाई नै यिनी मुक्तिको साधन ठान्छन्। भित्री त्यागको स्वरूप यिनलाई थाहा छैन। हुनत बाहिरी त्याग पनि चानचुन होइन। यत्रो राज्य त्याग्ने आँट हुनु ठूलो कुरा हो। यो वैराग्यको कारण यिनले गरेको तीर्थ, व्रत, दान इत्यादि सत्कर्म नै हो। अब यिनको कषायको परिपाक नहुन्जेल 'मौनं सर्वार्थसाधनम्' कै पक्ष लिन्छु।

रानी मस्तसँग निदाइसक्दा पनि राजालाई निद्रा लागेन। अनि उनको एक मनले भन्यो, अब के गरे म सुखी हुँला. हुनत सारा दुनियाँ मलाई सुखी ठान्छन्, तर साँच्चिको सुखसमुद्रमा कुशको टुप्पा चोप्दा कति थोपा आउला? त्यति सुख पनि मैले पाउन सकेको छैन।

यस्तो चक्रवर्ती राजा भएर के गर्नु ? कैले आफ्नो राष्ट्रको चिन्ता गऱ्यो । कैले अरू राष्ट्रको विषयमा सोच्यो । यसरी चिन्तै चिन्तामा डुबेपछि कसरी शान्ति हुने ? के दरबारमा बस्दा, के बाहिर जाँदा, के खाँदा, के पिउँदा सँधै षड्यन्त्रमा परूँला कि भन्ने त्रास छ । भित्र डाह भए-पछि बाहिर मीठो खाएर राम्रो लाएर के हुने ? घरमा ज्ञान हुने भए वानप्रस्थ र संन्यासको किन आवश्यकता पर्थ्यो । यसैले रानी निदा-एको मौकामा अैले नै जङ्गलतिर जान्छु ।

उठेर जान लाग्दा राजाको अर्को मनले भन्यो, 'कहाँ जाने' ? म गएपछि यी रानीको के हाल होला । म गएको थाहा पाएर यदि यो देशमा दुश्मनले आक्रमण गरे भने ··· ··· अथवा अरू नै गोलमाल मच्चियो भने दुनियाले मलाई सराप्ने छ । लौ भैगो । यहाँ शान्ति नै होला रे । तर वनमा म टिक्न सकिनँ भने फेरि यहाँ फर्केर वमन गरेको कुरा कसरी खाने ?

अन्त्यमा राजाले अठोट गरे, यस्तो भुलभुलयामा लाग्नु ठीक हुँदैन । सवको प्रारब्ध छँदैछ । त्यही बमोजिम भइहाल्छ । मेरो पुरुषार्थ त हो अखण्ड सुखको अनुभव गर्नु । त्यसका लागि जे पनि छोड्नुपर्छ । 'आत्मार्थे पृथिवीं त्यजेत्' को भनाइ यही न हो ।

पाँच घडी रात बाँकीमा ब्यूँझँदा रानीले राजालाई पलङ्मा देखिनन् । तर्क वितर्क गरेपछि अन्त्यमा उनले निश्चय गरिन्, राजा पक्का नै वनमा गए । के लाग्छ ? प्रारब्धले घचेटे पछि कहाँको मानिस कहाँ पुग्छ ? तर अरूहरूले यो कुरा थाहा पाए भने यहाँ गडवड मच्चिन बेर लाग्दैन । यसैले काममा सवारी भएको छ भनी मन्त्रीहरूलाई भनिदिन्छु ।

मन्दराचलमा पुगेर अठार वर्षसम्म भजन गर्दा पनि राजालाई आत्मसाक्षात्कार भएन, अनि गहभरी भएर हातजोरी उनले ईश्वरसँग पुकारा गरे, हे प्रभु ? भक्तवत्सल र करुणासागर हजूरकै नाम

होइन ? फेरि म के हजूरको छोरो होइनँ ? यदि हैन भने 'अमृतस्य पुत्राः' भन्ने वचनमा हरिताल लगाइदिबक्स्योस् । कपूतै भएपनि शरणको मरण गर्नु त हजूरको कर्तव्य होइन। गजेन्द्रलाई बचाउन हजूरलाई कत्रो हतपत परेको थियो, मलाई दर्शन दिन चाहिं किन यस्तो विलंब ? ... ... ...

राजाको खोजमा हिंडेकी रानी घुंदै घुंदै त्यही आश्रममा आइपुगिन्। उनले अलि परबाट पर्णशालाको ढोकैमा बसेर माला गाँस्न लागेका एउटा तपस्वीलाई देखिन्। हाडछाला मात्र बाँकी भए पनि उनको चेहडा चंकिलो थियो। जटाले शिरपेचको झलक देखाएको थियो। बोक्राको लुगाले पीतांबर संझाएको थियो। निहालेर हेर्दा यिनै राजा हुन् भन्ने उनलाई निश्चय भयो। उनले मनमनै भनिन्, खानी नभएको ठाउँमा खानी छ भनी खन्ने व्यक्तिहरूले झैं यी राजाले पनि साह्रै दुःख पाए। जतिसुकै बुद्धिमान् भए पनि भूल गरेपछि यस्तो हालत हुँदोरहेछ तर यो रातदिनको भजनले यिनको पाप त खत्तम भयो होला। अब संझाएँ भने जरुरै यिनले ग्रहण गर्नेछन्। किन्तु पत्नीले दिएको उपदेश कुनचाहिं पतिले ग्रहण गर्ला ? यसैले ब्राह्मणको भेस लिएर जान्छु।

एक्कासि कुटीनेर आइपुगेका ब्राह्मणकुमारलाई देखेर प्रसन्नताका साथ राजाले उनको सत्कार गरे, अनि कुराकानी हुँदा राजाले आफ्नो सारा परिचय दिए। यी ब्राह्मणकुमार नारदमुनिका छोरा कुंभ हुन् भन्ने राज लाई थाहा भयो, कताकता कुंभको स्वर पहिले सुने जस्तो लाग्यो, तर उनले ठम्याउन सकेनन्। एकछिन वाल्ल परेर कुंभको मुख हेरिरहे।

राजाले मलाई चिने कि भन्ने शंकामा परेकी रानीले स्वर अलि बदलेर भनिन्, सूर्य उदाएको हेर्न पूर्वतिर जानुपर्नेमा तपाईं त पश्चिम-तर्फ पो लाग्नु भएको रहेछ। जन्म र मृत्युको चक्करबाट छुट्न खोज्नेले

पनि फेरि त्यही चक्र घुमाइरहनु भएको रहेछ । कर्मबाट अदृष्ट अनि अदृष्टबाट शरीर र शरीरबाट कर्म भइरहेपछि संसार कसरी छुट्ला ? तपाईं आफैं विचार गर्नोस् । म को हुँ ?, यो संसार कसरी पैदा भयो ? बन्धन के हो ? मोक्ष के हो ? इत्यादि जान्नुपर्ने कुरा पनि तपाईंलाई थाहा रहेनछ ।

राजा— हो, यथार्थसँग यी सब कुरा मलाई थाहा छैन । यसैले उपदेश दिनोस् । सत्संग त मोक्षको ढोका हो । मेरा सारा पाप पखालिएछन् क्या र ? नत्र तपाईंको दर्शन र यस्तो अमृत पिउन कसरी पाउँथें ?

नारी— ऐलेसम्म पनि तपाईंले काँचै काँच बटुलिरहनु भएको रहेछ । अब कर्तृत्वरूपी काँच फालेर चिन्तामणिरूपी सर्वत्याग लिनुहोस् ।

राजा— यहाँभन्दा कति त्याग गरूँ ? राज्य त्यागें, रानी त्यागें, छोरा त्यागें. देश त्यागें । अब मैले त्याग गर्न के बाँकी छ र ?

रानी — मैले चिन्तामणि समातिराखेको छु भन्ने तपाईंको भ्रम मात्र हो । स्फटिकको टुक्रा पनि तपाईंले पाउनुभएको हैन । कुरा बुझ्नु भो ? राज्य, रानी इत्यादि तपाईंको केही पनि होइन । जुन तपाईंको चीज हो त्यसको त्यागै गर्नु भएको छैन ।

राजा – राज्य त्यागे पनि वनको त्याग गरेको छैनस् भन्नु भएको होला । भैगो आश्रम नै त्यागिदिन्छु ।

रानी— आश्रम तपाईंको छैन महाराज ?

राजा— ए ? उसोभए यो मृगचर्म, यो कमण्डलु, यो अक्षमाला, यो कन्था इत्यादि सारा वस्तु त्याग भन्नुभएको ? लौ, ऐले आगो बालेर सारा डढाइदिन्छु दिगंबर भएर बस्छु ।

रानी— मुख्य कुरा बाँकी नै छ । खै ? सर्वत्याग गर्नुभएको ?

राजा — ए ? मेरो यो शरीर बाँकी नै छ भन्नुभएको ? लौ शरीर पनि भीरबाट खसेर खत्तम पारिदिन्छु ।

रानी— तपाईं त सारै निर्बुद्धि हुनुहुँदो रहेछ यो त आत्महत्या हो । आफूलाई मारेर पनि कहीं सर्वत्याग होला ? जन्म र कर्मको बीउलाई त्याग्नुहोस् ।

राजा — त्यो बीउ कुनचाहिं हो मुनि ?

रानी — त्यो बीउ हो चित्त । जहाँसम्म चित्तलाई त्याग्नुहुन्न । तहाँ-सम्म सर्वत्याग कसरी हुने ? म त्याग्ने भनी अहंकारलाई समाति राखेपछि कहीं त्यागेको ठहरिन्छ ?

राजा— चित्तको स्वरूप के हो ? अनि त्यसको त्याग कसरी गर्ने ?

रानी— वासना नै चित्तको स्वरूप हो । अर्थात् फुराउनु नै चित्त हो अहंकारको उदय नै चित्तरूपी रूखको बीज हो । पहिले व्यष्टि अहंकारलाई त्याग्नोस् अनि समष्टिलाई पनि । बुझ्नुभो 'म' र 'मेरो' नै बन्धन हो । नकली 'म' लाई छोड्नुहोस् । सकली 'म' लाई अँगाल्नुहोस् । तपाईं अन्तः करणमा परेको छाया होइन, किन्तु उसको प्रकाशक शुद्ध चैतन्य हुनु हो । विचार गर्नोस् ।

राजा— शरीर, इन्द्रिय, मन, बुद्धि, अहंकार इत्यादि म होइन इत्यादि विचार त म गरिरहन्छु । तैपनि अहंकार जाँदै जाँदैन । के गर्ने ?

रानी— तपाईं हाँगाबिंगा मात्र काट्नु हुन्छ, जरो उखेल्नुहुन्न, अख-ण्डाकार वृत्ति नभई जरो उखेलिन्न । यहाँ वृत्ति भनेको परिणाम होइन, किन्तु वर्तमानता हो । यसैले चित्त अखण्ड बनाउनु होस् अर्थात् वृत्ति व्याप्तिद्वारा चित्त चैतन्यरूप तुल्याउनु होस् ।

आँखा चिम्लिएर राजा शान्त भएपछि पनि रानीले भनिन्, सारा प्रयत्न हो अनात्मपरिहारका लागि, आत्मदर्शनका लागि कुनै प्रयत्न चाहिंदैन । अर्को कुरा के हो भने अहंकारको कारण हो दृश्यको उन्मुखत्व । वास्तवमा जुन कार्यको कारण छैन त्यो असत हो । डोरीमा सर्प देखिनुमा कुनै कारण हैन । खालि भ्रम मात्र हो । यसैले कर्तृत्व भोक्तृत्व भ्रम मात्र हो ।

एक घडीपछि आँखा उघारेर राजाले भने, 'धन्य मुनि ? तपाईंको अनुग्रहले आज आत्मसाक्षात्कार गर्न सकें । तपाईं नै मेरो साँचिको गुरु हुनुभयो ! तपाईंलाई कोटि कोटि नमस्कार छ ।

आफ्नो पाउमा ढोग्न आएको देखी अलिपर सरेर रानीले भनिन्, 'भैगो महाराज ? पर्दैन । अव तपाईं आफ्नै देशमा जानुहोस् । राजकाज गर्नोस्, किनभने केही काल अझ राज्यगर्ने तपाईंको प्रारब्ध छ । यसैले यो खवर दिएर तपाईंकी रानीलाई यहाँ लिन पठाइदिन्छु ।

अपराह्नमा एकासि आइपुगेकी रानीले पाउमा परी राजालाई भनिन्, 'सर्वत्यागको रहस्य हजूरले बुझिवक्स्यो ?

मुसुक्क हाँसेर राजाले भने, मैले सव कुरा बुझें महारानी । लौ हिंड, अव आफ्नै देशमा जाऔं जनता जनार्दनको सेवा गरौं ।

---

**सच्चरित्रता, देशभक्ति र राजभक्तिमा दृढ आस्था पैदा गराउनु शास्त्रानुसन्धान परिषद्को मूल उद्देश्य हो ।**

# महीनाको उत्पत्ति र उपपत्ति

— तोयनाथ पाण्डेय

वैदिक तथा लौकिक धर्मसँग संवन्धराख्ने हुनाले मनुष्यको निमित्त सिद्धान्तमा मुख्य ४ प्रकारका मास गणनाको विधान छ। १ सौर, २ सावन, ३ चान्द्र, ४ नाक्षत्र। मनुष्य व्यवहारी हुनाले व्यवहार चलाउन यिनै ४ प्रकारका मानको अवलम्बन गर्दछ, त्यसैले यी ४ प्रकारका मानको संमिश्रणलाई मनुष्यमान भन्ने नामकरण गरिएको छ। "ज्ञेयं विमिश्रं तु मनुष्यमानं मानैश्चतुर्भिर्व्यवहारवृत्तेः"—सिद्धान्त शिरोमणिमा भास्कर।

यी मध्ये सावन र नाक्षत्रमान विशेषतः वैदिक कार्यमा कृच्छ्र-चान्द्रायणादि प्रायश्चित्त, जन्ममरणाशौच, औषधोपचार वार र घडी पला आदिको विचारमा उपयोग गरिन्छन्। सौर एवं चान्द्रमास लोकमा प्रचलित छ। यसमा पनि सौरमास गणनामा सुगम र क्षय-वृद्धि रहित छ। सौर र चान्द्रमासको सामञ्जस्यको निमित्त बिच बिचमा अधिकमास र क्षयमासको उत्पत्ति मानिएको छ। यसरी मनुष्यमानमा छ प्रकारका मासहरू आउँछन्। महीनाको नाम आकाशीय नक्षत्र अनुसार रहेको छ। आकाशमा २७ नक्षत्र छन्। ती सूर्यको कक्षा क्रान्ति-वृत्तामा चौगडीमा मोति उनिएझैं टम्म मिली पूरा वृत्त ओगटेका छन्। त्यसैले यस वृत्तालाई भवृत्त पनि भन्दछन्। यी २७ नक्षत्रका १०८ पाउ हुन्छन्। एक पाउले भवृत्त (क्रान्तिवृत्त) मा ३ अंश २० कला आका-शीयप्रदेश ढाकेको हुन्छ। १ नक्षत्रले १३ अंश २० कला तुल्य आका-शीयप्रदेश ढाकेको हुन्छ। त्यस्तै १ राशिले ३० अंश ढाकेको हुन्छ। ९ पाउको १ राशिको हिसाबले मेषादि १२ राशिले क्रान्तिवृत्ताको सबै भाग ढाकेका हुन्छन। यिनै १२ राशिमा सूर्य जानाले सौरमास हुन्छ।

यद्यपि सूर्य पूर्वमा उदाएर पश्चिममार्ग लिंदै भोलिपल्ट पूर्वमै उदाउन आइपुग्छन्। यस्तो देख्दा १ दिनमै सूर्यले क्रान्तिवृत्त सबै हिंडिसके जस्तो भान हुन्छ तापनि ग्रहको पश्चिमतिर गति छैन र ग्रहवसेको स्थान नै पश्चिमतिर घुम्ने भएकोले सूर्य पश्चिमतिर घुमेकोजस्तो देखिएको मात्र हो, वास्तवमा सूर्यको आफ्नो गति पूर्वतिर मात्र छ। यो गतिले सूर्यलाई १ राशि अर्थात् ३० अंश आकाशप्रदेश हिड्नलाई १ महीना लाग्छ। यसैलाई सौरमास भन्दछन। पृथिवीमा पनि यी महीना ( १२ राशि ) का रेखाहरू निश्चित गरिएका छन, ती हुन् क्रान्ति। विषुवत्‌रेखादेखि उत्तरतिर २४ अंशा र दक्षिणतिर २४ अंशा मानिएको छ। विषुवत्‌रेखादेखि उत्तरतिर १२ अंशासम्म मेष, २० अंशासम्म वृष र २४ अंशासम्म मिथुन हुन्छ। यसरी २४ अंशा उत्तरक्रान्ति कर्करेखासम्म सूर्य जान्छ र त्यहाँबाट विषुवत्‌रेखातिर फर्कन्छ। फर्कंदा २० अंशासम्म कर्कट, १२ अंशासम्म सिंह, विषुवत् रेखासम्म कन्याराशि हुन्छ। त्यसपछि विषुवत्‌रेखादेखि दक्षिणतिर १२ अंशासम्म तुला, २० अंशासम्म वृश्चिक, २४ अंशासम्म धनु यो २४ अंशा मकररेखा हुन्छ। सूर्य दक्षिणतिर मकररेखासम्म गएर पुनः विषुवत्‌रेखातिर फर्कन्छ। फर्कंदा २० अंशासम्म मकर, १२ अंशासम्म कुंभ र विषुवत्‌रेखासम्म मीन हुन्छ।

कर्करेखा र मकररेखा अयनका सीमारेखा हुन्। मकररेखाबाट सूर्य उत्तर लागेपछि ( मकरसंक्रान्तिवाट ) उत्तरायण सुरू हुन्छ। कर्करेखाबाट दक्षिण लागेपछि ( कर्कटसंक्रान्तिवाट ) दक्षिणायन सुरू हुन्छ। उपर्युक्त क्रान्तिहरू मध्ये प्रत्येक राशिभा पर्न आउने क्रान्ति धेरै र थोरै छन। जस्तै मेषराशिमा पर्न आउने क्रान्ति १२ अंशाको छ र मिथुनमा पर्न आउने क्रान्ति ४ अंशाको छ। यसरी १।१ राशिको भागमा पर्न आउने क्रान्त्यंशहरूमा वैषम्य भएतापनि सूर्यलाई प्रत्येक राशिको क्रान्त्यंश हिंड्न १ महीना मात्र लाग्छ। १ राशिको क्रान्त्यंश समाप्त गरेपछि १ महीना समाप्त हुन्छ। दोस्रो

राशिको आरंभमा सूर्य पुगेपछि द्वितीय मासारम्भ हुन्छ । एक राशिमा पर्न आउने क्रान्त्यंश समाप्त गरेर दोस्रो राशिको क्रान्ति सुरू गरेपछि संक्रान्ति हुन्छ । त्यसैकारणले यही क्रान्तिशब्दबाट सौरमासारम्भलाई संक्रान्ति भन्ने संज्ञा दिइएको छ । यसरी सौरमास बन्दछ ।

जस्तै सौरमासको सम्बन्ध सूर्यसँग रहन्छ त्यस्तै चान्द्रमासको सम्बन्ध चन्द्रमासँग रहन्छ । जुन पक्षमा चन्द्रमाको प्रकाश घट्तै जान्छ त्यो कृष्णपक्ष र जुनपक्षमा चन्द्रमाको प्रकाश बढ्दै जान्छ त्यो शुक्ल-पक्ष हो । यी दुवै पक्ष मिलाएर १ चान्द्रमास हुन्छ अर्थात् एक अमावास्यादेखि अर्को अमावास्यासम्म १ महीना हुन्छ । जुन नक्षत्रमा चन्द्रमा पूर्ण हुन्छन् अर्थात् पूर्णिमाको दिन जुन नक्षत्र पर्दछ,१ महीनासम्म जुन नक्षत्र सायंकालदेखि प्रातःकालसम्म आकाशमा देखिन्छ त्यही नक्षत्रको नामबाट त्यो महीनाको नाम बन्दछ । जस्तै चित्रानक्षत्रबाट चैत्र, विशाखानक्षत्रबाट वैशाख, ज्येष्ठा नक्षत्रबाट ज्येष्ठ महीना इत्यादि बन्दछ । यसरी नक्षत्रको नामबाट नै महीनाको नाम रहेको हो तापनि पूर्णिमामा पूर्वोक्त नक्षत्रहरू मात्र नपरी ती नक्षत्रका अगाडि पछाडिका २ अथवा ३ मध्येबाट पर्न सक्छ । जस्तै- विशाखा र अनुराधाबाट वैशाख, ज्येष्ठा र मूलबाट जेठ, पूर्वाषाढा र उत्तराषाढाबाट आषाढ, श्रवण र धनिष्ठाबाट श्रावण, शतभिषा पूर्वभाद्र उत्तर-भाद्रबाट भाद्र, रेवती अश्विनी र भरणीबाट आश्विन, कृत्तिका र रोहिणीबाट कार्तिक, मृगशिरा र आर्द्राबाट मार्ग, पुनर्वसु र पुष्यबाट पौष, अश्लेषा र मघाबाट माघ, पूर्वफाल्गुनी उत्तर-फाल्गुनी हस्तबाट फाल्गुन, चित्रा र स्वातीबाट चैत्र हुन्छ । यी नक्षत्रहरू निरयन मानबाट ल्याइएका हुन् ।

नक्षत्रनम्ना मासास्तु ज्ञेयाः पर्वान्तयोगतः
कार्तिक्यादिषु संयोगे कृत्तिकादि द्वयं द्वयम् ॥
अन्त्योपान्त्यौ पञ्चमश्च त्रिधा मासत्रयं स्मृतम् ।-सूर्यसिद्धान्त

एक उदयदेखि दोस्रो उदयसम्मको काललाई सावनदिन

# अज्ञान

— श्री गिरिधारी भट्टराई

सबै दर्शनमा शिरोमणि अद्वैत-दर्शनमा अज्ञान भन्ने शब्द अधिक रूपमा पाइन्छ। त्यो अज्ञान भनेको के हो ? यस विषयलाई लिएर एक निबन्ध तपाईंहरूको दृष्टिगोचर गराइन्छ।

अज्ञानलाई नैयायिकहरू ज्ञानको अभावस्वरूप मान्दछन्। स्वतन्त्र भिन्न पदार्थ मान्दैनन्। जस्तै-अन्धकारलाई प्रकाशको अभाव स्वरूप मान्दछन्, स्वतन्त्र भिन्न वस्तु मान्दैनन्।

अद्वैतवेदान्तको सिद्धान्तमा तमाल (कांचोपात) जस्तो कालो वर्ण भएको अन्धकार छ. यस्तो अबाध्य प्रतीति भएकाले अन्धकार अभावरूप होइन. त्यस्तै अज्ञान पनि अभावरूप होइन। किन्तु स्वतन्त्र भावभूत पदार्थ हो। स्वतन्त्र भावभूत पदार्थ भए तापनि त्यो अज्ञान "एकमेवाद्वितीयं ब्रह्म" एक अद्वितीय ब्रह्म नै छ इत्यादि प्रबलश्रुतिको विरोध भएकाले सत् हुनसक्दैन। आकाश आदि पञ्चमहाभूतको प्रकृति (उपादान कारण) भएको हुनाले अज्ञान असत् पनि हुन सक्दैन। असत् पदार्थ कुनै वस्तुको उपादान कारण हुनसक्दैन। अन्धकार र प्रकाश झैं सत्व र असत्व एक अधिकरणमा नरहने हुनाले अज्ञान सत् र असत् उभयस्वरूप पनि हुन सम्भव छैन।

अज्ञान अवयव-सहित पनि छैन, अज्ञानलाई सावयव मान्ने हो भने अज्ञान सादि हुन्छ, संसारमा जो जो सावयव हुन्छ, त्यो त्यो सादि नै हुन्छ, जस्तै घट आदि, एवंप्रकारले अज्ञान सादि भएमा त्यस अज्ञानको प्रकृति अर्को मान्नु पर्दछ। त्यो पनि सादि भएको हुनाले त्यसको पनि उपादान आर्को अज्ञान मान्नु पर्दछ, र अनवस्था दोष

आउँछ ।

किञ्च अज्ञान सादि भएमा सादि अज्ञानमा परेको प्रतिबिम्ब ईश्वर पनि सादि हुन आउँछ र ईश्वरमा अनादित्व आउन सक्दैन । त्यो अज्ञान निरवयव पनि हुन सक्दैन, निरवयव वस्तु आकाशादि प्रपञ्चको उपादान कारण बन्न सक्दैन । जस्तै घट आदिको उपादान कारण सावयव मृत्तिका नै हुन्छ, त्यस्तै आकाश आदि प्रपञ्चको उपादान कारण पनि सावयव वस्तु नै हुनु पर्दछ । सावयवत्व र निरवयवत्वको परस्पर विरोध भएको हुनाले अज्ञान सावयव र निरवयव उभयस्वरूप पनि हुन सक्दैन । त्यसकारण अद्वैतवेदान्तको सिद्धान्तमा अज्ञान अनिर्वचनीय मानिएको छ ।

जस्तै डोरीले घेरिएको चैतन्यको अज्ञान डोरीले घेरिएको चैतन्यलाई नै विषय गर्दछ र डोरीले घेरिएको चैतन्यमा नै रहन्छ । त्यस्तै मूल अज्ञान पनि शुद्धचैतन्यलाई नै विषय गरेर शुद्धचैतन्यमा नै आश्रित हुन्छ । अहङ्कार उत्पन्न हुनु भन्दा पहिले नै अज्ञान विद्यमान छ । त्यसकारण अहङ्कार भन्दा पहिले नै सिद्धभएको अज्ञानको विषय र आश्रय अज्ञान भन्दा पछि भएको अहङ्कार र अहङ्कारले अवच्छिन्न ( सहित ) चैतन्य हुन सक्दैन ।

'नेह नानास्ति किञ्चन' ब्रह्ममा नाना केही छैन इत्यादि प्रबल श्रुतिप्रमाणबाट ब्रह्मभिन्न सर्वपदार्थ मिथ्या भएको हुनाले त्यो अज्ञान ब्रह्मचैतन्यदेखि वस्तुतः भिन्न छैन । त्यो अज्ञान जड भएको हुनाले चेतनब्रह्मका साथ एकता पनि प्राप्तगर्न सक्दैन । जड र चेतनको एकता सर्वथा असम्भव छ । त्यो अज्ञान ब्रह्मचैतन्यदेखि भिन्न र अभिन्न उभयरूप पनि हुन सक्दैन । विरोध भएको हुनाले भिन्नत्व र अभिन्नत्व एक अधिकरणमा हुनै सक्दैन । त्यसकारण अज्ञान अनिर्वचनीय नै छ ।

अज्ञानको आश्रय र विषय ब्रह्मचैतन्य मान्ने हो भने 'असङ्गो

ह्ययं पुरुषः' यो आत्मा सङ्गरहित छ इत्यादि श्रुतिबोधित असङ्गत्व आत्मामा कसरी रहन सक्दछ, इत्यादि शङ्काको निवारण यसप्रकार छ—अज्ञानका साथ आत्माको सम्बन्ध पनि अज्ञान झैं कल्पित नै हो। त्यसकारण जस्तै ब्रह्ममा कल्पित सारा संसार आत्माको वास्तविक असङ्गत्वलाई हटाउन सक्दैन, त्यस्तै अज्ञानको कल्पित सम्बन्ध ब्रह्मको असङ्गत्वलाई व्याघात गर्न सक्दैन। जस्तै आकाशमा कल्पित मालिन्य वास्तवमा होइन, त्यस्तै आत्मामा कल्पित अविद्याको सम्बन्ध पनि वस्तुतः होइन। मिथ्या पदार्थको र पारमार्थिक पदार्थको विरोध हुँदैन। जस्तै पारमार्थिक शुक्तित्व भएको शुक्तिमा मिथ्याभूत रजतत्वको केही विरोध छैन। अर्थात् पारमार्थिक शुक्तित्व भएको शुक्तिमा मिथ्या रजतत्व बस्न सक्दछ।

अज्ञानमा एक नञ् पद र आर्को ज्ञान पद मिलेर अज्ञान शब्द बन्दछ। नञ्को अर्थ अभाव मान्ने हो भने अविद्या अनिर्वचनीय हुन सक्दैन। जस्तै वेद्य ( घट पट आदि विषय ) को अभाव अनिर्वचनीय हुँदैन, त्यस्तै ज्ञानको अभाव पनि अनिर्वचनीय हुन सक्दैन। यदि नञ्को अर्थ अभाव नमानेर नञ्को विरोधी अर्थ मान्ने हो भने ज्ञानको विरोधी आर्को ज्ञान अथवा इच्छा आदि भावरूप प्रसिद्ध भएकोले अज्ञान अनिर्वचनीय हुन सक्दैन। नञ्को अर्थ भिन्न मान्ने हो भने ज्ञानदेखि भिन्न घट पट आदि सबै अज्ञान हुने भए। त्यस कारण अनिर्वचनीय अज्ञान बन्नै सक्दैन।

अज्ञानको लक्षण पनि बन्न सक्दैन। बिना लक्षण वस्तुको सिद्धि हुनसक्दैन। 'ज्ञानले जुन वस्तु हट्दछ त्यस वस्तुलाई अज्ञान भन्नू' यस्तो लक्षण गर्ने हो भने पछिल्लो ज्ञानले पूर्वज्ञान हट्दछ, त्यसकारण पूर्वज्ञान पनि अज्ञान हुने भयो, अर्थात् अज्ञानको लक्षण पूर्वज्ञानमा जाने भयो र अतिव्याप्तिदोष आउने भयो। त्यसकारण पूर्वोक्त अज्ञानको लक्षण हुनसक्दैन। 'ज्ञानले जुन वस्तु हट्दछ र अनादि छ भने त्यो वस्तु अज्ञान हुन्छ' यस्तो लक्षण गरेर पूर्वज्ञान पछिल्लो ज्ञानले

हट्दछ तापनि अनादि नभएको हुनाले अज्ञानको लक्षण पूर्वज्ञानमा जाँदैन यस्तै भने पनि ज्ञानप्रागभाव पनि अनादि भएर ज्ञानले हट्ने भएको हुनाले ज्ञानप्रागभावमा अज्ञानको लक्षण गएर अतिव्याप्ति हुन्छ। ज्ञानप्रागभाव पनि अज्ञान हुन सक्दैन। ज्ञानप्रागभावको निर्वचन गर्न सकिने हुनाले ज्ञानप्रागभावलाई अनिर्वचनीय अज्ञान भन्न सकिँदैन। 'अनादि र भावभूत भएर ज्ञानले हटिने वस्तुलाई अज्ञान भन्नू" यस्तो लक्षण गरेमा ज्ञानप्रागभाव अनादि भएता पनि भावभूत नभएकोले ज्ञानप्रागभावमा अज्ञानको लक्षण जाँदैन यस्तो भने पनि अनादि भावभूत पदार्थ नित्य हुन आउँछ र त्यस्तो अज्ञान ज्ञानले हट्ने सक्दैन। त्यसकारण अज्ञानको लक्षण बन्न सक्दैन।

अज्ञानमा प्रमाणहरू पनि छैनन्। 'म अज्ञानी छु' यस्तो अनुभव भएकोले अज्ञानमा अनुभव नै प्रमाण छ, यस्तो भनेर अज्ञान सिद्ध हुन सक्दैन। किनभने 'म अज्ञानी छु' यस्तो अनुभवको विषय ज्ञानाभाव नै हो, अनिर्वचनीय अज्ञान 'म अज्ञानी छु' यस्तो अनुभवको विषय होइन।

सुतेर उठेपछि 'म सुखपूर्वक सुतें केही पनि जान्दिन' यस्तो स्मरण हुन्छ। अनुभव नभई स्मरण हुनै सक्दैन। त्यसकारण सुषुप्ति अवस्थामा अज्ञान सिद्धहुन्छ। यस्तो प्रमाणले पनि अज्ञानको सिद्धि हुन सक्दैन। किनभने वेदान्तीको मतमा साक्षी चैतन्यले नै सुषुप्ति अवस्थामा ज्ञानाभावको अनुभव गर्दछ र त्यसै अनुभवको जाग्रत् अवस्थामा स्मरण हुन्छ। नैयायिकहरूको मतमा जाग्रत् अवस्थामा नै सुषुप्ति अवस्थामा भएको ज्ञानाभावको अनुमान हुन्छ। त्यसकारण अनिर्वचनीय अज्ञानको अस्तित्वमा केही प्रमाण छैन।

अनादि र भावरूप भएर जुन वस्तु अज्ञानले हट्दछ त्यही नै अज्ञानको अक्षण हो। अनादि भावभूत आत्मामा अज्ञानको लक्षण गएर अतिव्याप्ति हुँदैन। किनभने आत्मा अनादि भावभूत छ तापनि

ज्ञानले हट्दैन। आत्मादेखि अरू कुनै अनादि भावभूत परमाणु र परमाणुमा भएको रूप आदि पदार्थ अद्वैतवेदान्तको मतमा स्वरूपतः छैनन्। स्वरूपतः नभएको वस्तुमा अतिव्याप्ति दिने शङ्का नै उठ्न सक्दैन। भाव र अभावदेखि विलक्षण अज्ञानमा अभावको विलक्षणत्वमात्र भएको हुनाले भावत्वको उपचार मात्र छ। आत्मामा भैं अज्ञानमा वास्तविक भावत्व छैन। अज्ञानमा वास्तविक भावत्व नभएको हुनाले अनादि भावभूत आत्मा भैं अनादि भावभूत अज्ञान पनि ज्ञानले हट्न सक्दैन यस्तो अनुमानको अवसर आउन सक्दैन। यसप्रकार अज्ञानको लक्षणमा केही पनि दोष छैन। केही दोष नभएको हुनाले अज्ञानको लक्षण निर्दुष्ट छ।

'मैले केही पनि जानिन, सुखले सुतें' इत्यादि स्मरणले सिद्ध भएको सुषुप्तिकालको अनुभव नै अज्ञान छ भन्ने विषयमा प्रमाण छ। सुषुप्ति अवस्थामा साक्षी चैतन्यले अनुभव गरिएको ज्ञानाभावको नै जाग्रत् अवस्थामा स्मरण हुन्छ। त्यही ज्ञानाभावको विषय गर्ने मैले केही पनि जानिन भन्ने स्मरण हो। ज्ञानाभावदेखि भिन्न आर्को अनिवर्चनीय अज्ञानको विषय गर्ने 'मैले केही पनि जानिन' यस्तो स्मरण होइन। यस्तो साहस गर्नु उचित छैन। किनकि, अभावकोज्ञान प्रतियोगीरूप धर्मीको ज्ञान नभई हुनै सक्दैन। जस्तै कसैले छैन भन्यो भने के छैन भनेर प्रतियोगीको आकाङ्क्षा हुन्छ र धन छैन, जन छैन, अन्न छैन, वस्त्र छैन भनेर धन, जन, अन्न, वस्त्र आदि प्रतियोगीको ज्ञान आवश्यक छ। प्रतियोगी नभई अभावको अनुभव हुनै सक्दैन। त्यस कारण सुषुप्ति अवस्थामा प्रतियोगी नभएको हुनाले साक्षी चैतन्यले ज्ञानाभावको अनुभव गर्नै सक्दैन। सुषुप्ति अवस्थामा अनुभव नभए पछि जाग्रत् अवस्थामा 'मैले केही पनि जानिन' यस्तो स्मरण पनि हुन सक्दैन।

'मैले केही पनि जानिन' यस्तो स्मरण सुषुप्ति अवस्थामा भएको अनुभवदेखि भएको होइन, किन्तु जाग्रत् अवस्थामा नै मैले केही पनि

जानिन भन्ने अनुमान भएको हो, यस्तो नैयायिकको साहस पनि ठीक छैन । कारण हेतु नभई अनुमान हुन सक्दैन । सुषुप्ति अवस्थामा ज्ञानाभावलाई सिद्धगर्ने कुनै हेतु छैन । सुषुप्ति अवस्थामा केही सामग्री नभएकोले सामग्रीको अभाव रूप हेतुले ज्ञानाभाव सिद्धगर्ने हो भने सामग्रीको अभावरूप हेतु नै सुषुप्ति अवस्थामा सिद्ध छैन । ज्ञानाभावरूप हेतुले सामग्रीको अभावरूप हेतु सिद्धगर्ने हो भने ज्ञानाभाव नै सिद्ध भएको छैन । सामग्रीको अभावरूप हेतुले ज्ञानाभाव सिद्ध हुने ज्ञानाभावरूप हेतुले सामग्रीको अभाव सिद्ध हुने यस प्रकार अन्योऽन्याश्रय दोष भएको हुनाले सुषुप्ति अवस्थामा ज्ञानाभाव र सामग्रीको अभाव दुइटै सिद्ध हुँदैन ।

'तम आसीत्' अज्ञान थियो 'मायां तु प्रकृतिं विद्यात्' प्रकृति भनेको माया ( अज्ञान ) हो इत्यादि श्रुति पनि अज्ञानलाई सिद्ध गर्दछन् । श्रुतिमा तमः शब्दको अर्थ ज्ञानाभाव हो, अनिर्वचनीय अज्ञान होइन, यस्तो शङ्का पनि गर्न सकिन्न । 'नासदासीत्' असत् ( अभाव ) थिएन भनेर अभावको निषेध गरी तम ( अज्ञान ) थियो भनी श्रुतिले भनेको हुनाले उक्त शङ्काको अवसर छैन । "भूयश्चान्ते विश्वमायानिवृत्तिः" फेरि आखिरमा सकल माया हट्दछ इत्यादि श्रुतिप्रमाणबाट माया ज्ञानले हट्ने भएको हुनाले माया ( अज्ञान ) पदार्थ परमेश्वरको ज्ञानशक्ति पनि होइन । त्यसकारण अद्वैत वेदान्त दर्शनमा श्रुति युक्ति प्रमाणबाट अज्ञान अनिर्वचनीय, अनादि, भाव र अभावदेखि विलक्षण, सत् र असत्देखि विजातीय सावयव र निरवयवदेखि भिन्न मानिएको छ ।'

यस अज्ञानलाई माया, अविद्या, अजा, तमः, शक्ति, प्रधान, अव्यक्त र प्रकृति भनेर श्रुति, स्मृति, पुराण आदिमा प्रतिपादित गरिएको छ । यही अज्ञान भ्रमको उपादान कारण हो । त्यसै भ्रमलाई अध्यास, आरोप, अध्यारोप, अवभास भनेर अद्वैतवेदान्तीहरू भन्दछन् । भ्रमविषयलाई लिएर निबन्धात्मकलेख आकों अङ्कमा प्रस्तुतगर्ने छु ।

# नाट्यको प्रेक्षक

— प्रा. डा. श्री जयमन्त मिश्र

सबै आफ्नो आफ्नो घरको विद्यालाई सबभन्दा असल ठान्छन् भन्ने कविकुलगुरु महाकवि कालिदासको भनाइ ज्यादै संगत छ, तर नाट्यकार आफ्नो नाट्यविद्याको जो यत्तिको अभिमान गर्छन् त्यो झूटो होइन; किनभने मुनिहरूको भनाइ छ कि यो नाट्य ता देवताहरूको आँखालाई सुहाउने यज्ञ हो। स्वयं अर्धनारीश्वर भगवान् शंकरले आफ्ना अङ्गलाई दुइ भागमा विभक्तपारी ताण्डव र लास्य रूपद्वारा दुइ भाग गरिदिएका छन्। त्यसमा सत्व, रज र तम तीनै गुण पनि देखिन्छन्। यसैले भिन्न भिन्न रुचि भएका मानिसहरूका लागि प्रायः नाट्य नै एक यस्तो महोत्सव हो जसमा सबैलाई एकै किसिमको आनन्द हुन्छ[1]।

श्रुति र स्मृतिहरूको अधिकारी या अनधिकारी सबैलाई समानरूपले आनन्द देला भनी भरतमुनिले पञ्चम नाट्यवेदको निर्माण गरे[2]। यसरी पामरसम्म पनि सबै व्यक्ति नाट्यको अधिकारी हुन्छन्। असाधारणविद्वान्‌देखि लिएर साधारण व्यक्तिसम्म यसलाई हेर्छन् र आफ्नो वासना र संस्कारको अनुसार आल्हादित हुन्छन्।

---

१ देवानामिदमामनन्ति मुनयः शान्तं क्रतुं चाक्षुषं
रुद्रेणेदमुमाकृतव्यतिकरे स्वाङ्गे विभक्तं द्विधा।
त्रैगुण्योद्भवमत्रलोकचरितं नानारसं दृश्यते
नाट्यं भिन्नरुचेर्जनस्य बहुधाप्येकं समाराधनम्॥

मालविकाग्निमित्र, प्रस्तावना १४।

२ द्रष्टव्यः – "नाट्यशास्त्र" को प्रथम अध्याय।

तर नाट्यको, जसमा धीरोदात्त आदि नायकहरूको विभिन्न अवस्थाका आङ्गिक, वाचिक, सात्विक र आहार्य ( वेशभूषादिकृत ) यी चार किसिमको अभिनयद्वारा हूवहू ( जस्ताको तस्तो ) अनुकरण हुन्छ, सबै प्रेक्षक हुँदैनन् । जस्तो स्वयं भरतमुनिले पछिबाट नाट्यशास्त्रमा बताएका छन । यसको कारण पनि स्पष्ट छ । नाट्यशास्त्रले विलकुल ठीक कुरा बताएको छ कि 'न हि रसादृते कश्चिदर्थः प्रवर्तते '[१] अर्थात् रस विना विभाव आदि जुनसुकै अर्थ निष्प्रयोजन हुने हुनाले नाट्यमा न प्रकृष्टरूपले रहन सक्छ न ता अगाडि बढ्न सक्छ । रस नै नाट्यको चरम प्रयोजन हुन्छ । यसैहुँदा आचार्य अभिनवगुप्तले "नाट्यमेव रसः"[२] भनेर नाट्य र रसमा सर्वथा अभेद बताएका छन्, वास्तवमा जुन कुरा सर्वथा मान्य छ । यसैले यो स्पष्ट हुन्छ कि जुन व्यक्तिमा रसास्वादगर्ने क्षमता छ त्यो नै वस्तुतः नाट्यको प्रेक्षक हुन्छ । यसैले प्रेक्षकको स्वरूप बताउने भरतमुनिले भनेका छन् कि जो व्यक्ति आनन्दात्मक अभिनयबाट आनन्दलाई, शोकात्मक अभिनयबाट शोकलाई र दैन्यात्मकबाट दीनतालाई प्राप्त गर्छन ती नै नाट्यका प्रेक्षक हुन्[३] । यो स्थिति प्राप्तगर्नाको लागि उनले कतिपय आवश्यक गुण बताएका छन्, जुन हुनाले नै कुनै व्यक्ति नाट्यको प्रेक्षक हुनसक्छ । जो चरित्रसंपन्न, अभिजनयुक्त, शान्त, शास्त्रज्ञ, यश धर्म आदिमा निरत, मध्यस्थ, नाट्याङ्गमा कुशल, प्रबुद्ध, पवित्र, वाद्यमा निपुण, नेपथ्यको ज्ञान भएको, देशभाषाको ज्ञाता, कला र शिल्पमा निष्णात, चार किसिमको अभिनय बुझ्ने, रस र भावको रहस्य थाहा पाउने, शब्द र

१ नाट्यशास्त्र; अ. ६, पृ. ७१, काशीसंस्करण ।

२ अभिनवभारती; पृ. २९०, गायकवाडसंस्करण ।

३ यस्तुष्टौ तुष्टिमायाति शोके शोकमुपैति च ।
दैन्ये दीनत्वमभ्येति स नाट्ये प्रेक्षकः स्मृतः ॥
—ना शा. २७, ५५ ॥

छन्दको विधान जान्ने तथा नानाशास्त्रमा निपुण हुन्छ। त्यो नै नाट्यको प्रेक्षक हुन्छ[१]।

उनले यो पनि भनेका छन् कि 'जो जितेन्द्रिय छ, ऊहापोह गर्नामा निपुण छ फेरि दोषरहित र अनुरागयुक्त छ त्यसैलाई नाट्यको प्रेक्षक भन्छन्[२]।' उनले यो पनि स्वीकार गरेका छन् कि यी सब गुण एक प्रेक्षकमा पाइन असंभव छ[३]। यसैले ज्ञानको आधिक्य र आयुको अल्पत्वको कारण सबै प्रेक्षक एकनासका हुन सक्दैनन्। यसैले उत्तम र अधमकोटिका दर्शकसमाजमा उत्तम चरित्रलाई अधमकोटिकाले जान्न सक्दैनन्। उत्तम, मध्यम र अधमहरूमा तथा वृद्ध, बालक र स्त्रीहरूमा जुन शिल्प, नेपथ्य, कर्म, वाणी, चेष्टा आदि जसको अनुकूल हुन्छन् त्यो तिनैबाट आनन्दित हुन्छ। यसैले तरुण काममा, अर्थलोलुप अर्थमा, विरागी मोक्षमा, शूरपुरुष बीभत्स रौद्र र सँग्राममा, वृद्धपुरुष धर्म पुराण आदिको आख्यानमा तथा बालक मूर्ख र स्त्रीहरू हास्य र वेशभूषमा सन्तुष्ट हुन्छन्।[४]

माथिको भनाइको सारांश यो हो कि सबै अभिनयहरूबाट सबै प्रसन्न हुँदैनन्। जुन व्यक्तिमा जस्तो वासना हुन्छ र जसमा जस्तो संस्कार या 'कल्-चर्' हुन्छ त्यो त्यही किसिमको अभिनयबाट आनन्दित हुन्छ।

---

१ ना. शा. २७, ४९–५३।

२ अव्यग्रैरिन्द्रियैः शुद्धः ऊहापोहविशारदः।
त्यक्त-दोषोऽनुरागी च स नाट्ये प्रेक्षकः स्मृतः॥
ना. शा. २७, ५६॥

३ न च एते गुणाः सर्वे एकस्मिन् प्रेक्षके स्मृताः॥
ना. शा. २७,५६॥

४ ना. शा. २७, ५६–६३।

यसैलाई आचार्य अभिनवगुप्तले भनेका छन् कि त्यही व्यक्ति काव्य या नाट्यमा रसको आस्वाद पाउँछ जो सहृदय हुन्छ। सहृदयको स्वरूप बताउँदै उनले भनेका छन् कि काव्यानुशीलनको अभ्यासबाट जसको सफा मनरूपीऐनामा वर्ण्यमान पदार्थको जस्ताको तस्तो प्रतिबिम्ब ग्रहणगर्ने योग्यता हुन्छ तो नै हृदयसंवादशाली अर्थात् रसास्वाद गर्ने व्यक्ति सहृदय कहलाउँछन्।[1]

हृदयसंवादको आस्वादको अर्थ उनले स्वयं 'अभिनवभारती'-मा गरेका छन्[2]। त्यही सहृदय या सचेता नाट्यको प्रेक्षक हो जो अनादिकालीन वासनाले वासित छ र जसको काव्यानुशीलनबाट स्वच्छ मनरूपी ऐनाले वर्णित पदार्थलाई यथावत् प्रतिबिंबित गर्छ। यिनै सहृदयको बारेमा भनेको छ कि वासनालेयुक्त सभ्य सहृदयलाई नै यसको आस्वादन हुन्छ। जो वासनाशून्य छ त्यो त रङ्गमञ्चमा रहेको काठ भित्ता र ढुंगा बराबर नै हो[3]।

भरतमुनिको प्रेक्षकलाई र अभिनवको सहृदयलाई भोजराजले रसिक भनेका छन्। जससा रस छ अर्थात् रसास्वाद गर्ने क्षमता छ त्यो नै साधारणतः रसिक कहलाउँछ। किन्तु रसिक शब्दको अर्थ अरू पनि छ जस्तो डा. राघवनले आफ्नो गवेषणात्मक निबन्ध 'शृङ्गारप्रकाश' मा संकेत गरेका छन्:—"काव्य या नाट्यको रसको आस्वादयिता मात्र रसिक कहलाउँदैन, जसमा वस्तुतः मानवता छ त्यो नै रसिक हो। रसिकत्वले मनुष्यको व्यक्तित्वको त्यो अपूर्वगुणलाई संकेत गर्छजुन व्यक्तिको त्यो वैशिष्ट्यको निर्माण गर्छ। जसबाट उसका चरित्र

---

१ येषां काव्यानुशीलनाभ्यासवशात् विशदीभूते मनोमुकुरे वर्णनीयतन्मयीभवनयोग्यता ते हृदय-संवादभाजः सहृदयाः।—ध्वन्यालोकलोचन, प्र. प.

२ हृदय-संवादः आस्वादः।—अभिनवभारती, पृ. ३२३।

३ सवासनानां सभ्यानां रसस्यास्वादनं भवेत्।
निर्वासनास्तु रङ्गान्तः काष्ठकुड्याश्मसन्निभाः॥

समाजमा नीरसव्यक्तिको चरित्रभन्दा भिन्न संभिन्छन् "[१]

सांख्यदर्शनको आधारमा रसिक शब्दको अर्थ बताउँदै भोजराजले भनेका छन् कि अहंकारी पुरुषको आत्मस्थित त्यो विशेषगुणलाई शृङ्गार या रस भन्छन्। जो तृतीयपुरुषार्थ कामको जीवन हो र त्यही आत्मस्थित अहंकार-शृङ्गार-रसको आस्वादनबाट व्यक्तिमा रसिक शब्दको व्यवहार हुन्छ[२]। सत्वगुणको उद्रेकबाट स्वच्छ हृदयमा पूर्वजन्मानुभवजन्य संस्कारबाट उत्पन्न निखिल आत्म सुखोत्पत्तिको एक कारण अभिमानमयविकार जब मनमा जागरुक हुन्छ तब त्यो रसिक कहलाउँछ[३]। यही रसिक आचार्य अभिनवगुप्तको मतमा सहृदय र भरतमुनिको मतमा प्रेक्षक हो। यस्तै प्रेक्षक नै वस्तुतः नाट्यको प्रेक्षक हुन्छ।

---

१ द्रष्टव्यः —भोजराजको शृङ्गारप्रकाश, पृ. ४७८।

२ आत्मस्थितं गुणविशेषमहंकृतस्य
शृङ्गारमाहुरिह जीवितमात्मयोनेः।
तस्यात्मशक्ति रसनीयतया रसत्वं
युक्तस्य येन रसिकोऽयमिति प्रवादः ॥—शृ. प्र. प्रथमभाग।

३ सत्त्वात्मनाममलजन्मविशेषजन्मा
जन्मान्तरानुभवनिर्मितवासनोत्थः।
सर्वात्मसंपदुदयातिशयैकहेतुः-
र्जागर्ति कोऽपि हृदि मानमयो विकारः ॥—त्यहीं नै।

# लक्ष्य-प्राप्ति

— प्रा. मुकुन्दनाथ भट्टराई

संस्कृत वाङ्मयमा एकलाख श्लोक भएको महाभारत नामक ग्रन्थ ज्यादै महत्वपूर्ण मानिएको छ। यसमा महाभारत युद्धको वर्णन; कौरव, पाण्डव तथा द्रौपदी आदिको चरित्रचित्रण र महाभारत युद्धको अवसरमा योगेश्वर भगवान् श्रीकृष्णले अर्जुनलाई उपदेश दिनुभएको श्रीमद्भगवद्गीताको उपदेश आदि विशेष उल्लेखनीय छन्। हामी सवै हिन्दूहरू यस ग्रन्थलाई प्रामाणिक रूपमा मान्दछौं। यदि यसलाई प्रामाणिक स्वीकार गरेनौ भने माथि वर्णन गरिएका कुनै कुरालाई पनि स्वीकार गर्न सक्तैनौं। म त भन्छु हामी हिन्दूहरू मात्र होइन अन्य अहिन्दूहरूले पनि–जसले महाभारतको घटनालाई वा श्रीमद्भगवद्-गीतालाई प्रामाणिक रूपमा स्वीकार गरेको छ वा गर्दछ त्यसले महाभारतलाई प्रमाण मानेको छ वा मान्दछ भन्ने कुरा स्वतःसिद्ध हुन आउँछ। यस्तो मानवमात्रको निमित्त आदर्श र प्रमाणरूपमा रहेको महाभारतग्रन्थको एउटा घटना यहाँ प्रस्तुत गरिन्छ :—

कुरुराज धृतराष्ट्रका दुर्योधन दुःशासन आदि १०० छोराहरू र उनका भाइ पाण्डुका युधिष्ठिर, भीम, अर्जुन आदि ५ छोराहरू थिये। ती सवैलाई क्षत्रियोचित विद्याहरू पढाउन गुरु श्रीद्रोणाचार्यको आश्रममा राखिएको थियो। गुरु द्रोणाचार्य वेद, वेदाङ्ग र अन्य शास्त्रहरूमा पारङ्गत हुनुहुन्थ्यो र शस्त्र–अस्त्र सम्बन्धी सवै विद्यामा ठूला विद्वान् र अनुभवी समेत हुनुहुन्थ्यो। यसरी धृतराष्ट्रका छोराहरू ( कौरव ) र पाण्डुका छोराहरू ( पाण्डव ) ले गुरु द्रोणाचार्य संग विद्याध्ययन गर्न लागेको सुनेर अरू राजारजौटाहरूले पनि आफ्ना आफ्ना छोराहरू-लाई द्रोणाचार्य सँग विद्या पढ्न पठाए। वर्षौं परिश्रम गरेर द्रोणा-

चार्यले आफ्ना यी सबै शिष्यहरूलाई शस्त्र-अस्त्र विद्या पढाउनु भयो र साथै अभ्यास पनि गराउनु भयो। अध्ययन गर्ने छात्रहरूमा एकले अर्कालाई उछिन्ने र योग्यता र श्रेणीमा ईर्ष्याराखेर एकाग्रता र लगन साथ अध्ययनगर्दै अघिबढ्ने प्रवृत्तिहुनु एउटा ठूलो गुण हो। त्यस्तो प्रवृत्ति न भएको र ज्ञान सम्बन्धी अपमान भएपनि सहेर अघिबढ्न कोशिस न गर्ने अल्छी छात्र आफ्नो जीवनमा कहिल्यै सफल हुनसक्तैन। 'विष न भएको सर्प र ईख न भएको छोरा काम लाग्दैन' भन्ने उखान प्रसिद्ध छ।

गुरु द्रोणाचार्यका छात्रहरूमध्ये कौरवहरूमा दुर्योधन र पाण्डवहरूमा भीमसेन तथा अर्जुन प्रसिद्ध थिए। गुरु द्रोणाचार्यका छोरा अश्वत्थामा पनि अर्जुन भन्दा कुनै कुरामा कम थिएनन्। ती सबै छात्रहरूको परस्परमा निकै स्पर्धा र मनमनमा ईर्ष्या पनि थियो। तर गुरु द्रोणाचार्यले सबैलाई समानरूपले सिकाउनु पढाउनु हुन्थ्यो। गुरुले जत्तिसुकै पढाएपनि छात्रले आफ्नो संस्कार एवं मनले जतिसक्छ उत्ति नै धारणगर्न र ज्ञानप्राप्तगर्न सक्तछ, गुरुले पढाएर मात्र हुँदैन। जस्तै पोखरी या धारामा जति पानी भएपनि जजसको जत्रो भांडो छ उत्तिनै पानी ल्याउन सक्तछ, धेरै ल्याउँ भन्ने मन मात्र गर्दैमा धेरै ल्याउन सक्तैन; त्यस्तै मन एवं संस्कारलाई बढी धारणाशील र ग्रहणशील बनाउन पनि एकाग्रतापूर्वक अभ्यासगर्नु र अभ्यासलाई उत्तरोत्तर बढाउँदै लगेर मात्र संभव हुन्छ। अनुपेक्षात्मक ( उपेक्षा न गरिएको ) अभ्यासले नै दृढतर संस्कारको आविर्भाव हुनसक्तछ। एकै अक्षर मात्र भएको सूत्रलाई पनि घण्टौंसम्म घोक्ने अभ्यासलाई नै उपेक्षात्मक अभ्यास भनिन्छ।

गुरु द्रोणाचार्य राजनीतिज्ञ पनि हुनुहुन्थ्यो। त्यसैले छात्रहरूमा उत्कृष्ट देखिएका अर्जुनसँग आफ्नो छोरा अश्वत्थामालाई प्रतियोगितामा अगाडि सार्नुहुन्थ्यो। पाण्डव र कौरवहरूमा भने बराबर स्पर्धात्मक व्यवहार हुन्थ्यो। कौरवपक्षको बल संख्यासुरको थियो,

किनकि उनीहरूमा हामी १०० दाजुभाई छौं भन्ने घमण्ड थियो। त्यसैले उनीहरू उद्धत पनि थिए तर पाण्डवहरू विनयी, गुरुभक्त र सौम्य थिए र संख्यामा पनि ५ मात्र थिए। ती सबै छात्रहरूको अध्ययन र अभ्यास समाप्त भयो र परीक्षालिने समय भयो। परीक्षा प्रयोगात्मक थियो। गुरु द्रोणाचार्यले परीक्षालिने तिथिको घोषणा गर्नु भयो र सबै छात्रहरू परीक्षाको निमित्त तंतयार भये। परीक्षालिने तैयारी हुन थाल्यो। गुरु द्रोणाचार्यले प्रवीण कलाकारलाई बोलाई कृत्रिम गिद्ध तयार गराएर यसलाई परीक्षास्थानको एउटा रूखको टुप्पामा राख्न लगाउनुभयो। तर यो सबै कुरा गोप्य राखियो। कुनै छात्रले पनि पत्तो पाउन सकेन।

परीक्षा हुने दिन सो गिद्धराखिएको रूखको नजिक चौरमा सबै छात्रहरूलाई भेला गराइयो। सबै छात्रहरू जम्मा भएपछि गुरु द्रोणाचार्यले भन्नुभयो, 'बाबु हो! हेर अगाडि देखिएको रूखमा गिद्ध छ, त्यो गिद्ध नै तिमीहरूको लक्ष्य हो; बाणले त्यसको टाउको काटेर खसाल्नुपर्छ। तिमीहरू तयार भएर बस। म एक एक गरेर पालैसँग बोलाउने छु। मैले आज्ञा दिने वित्तिकै गिद्धको टाउको काटेर खसाल्नू'। गुरु द्रोणाचार्यको यस्तो आज्ञा सुन्नेबित्तिकै सबै छात्रहरू तंतयार भए।

गुरु द्रोणले छात्रहरूमा सबैभन्दा जेठा युधिष्ठिरलाई पहिले आज्ञा दिनुभयो। उनी धनुषमा बाँण हाली तानेर उभिए। २ मुहूर्तसम्म लक्ष्यतिर ताकेर उभिएपछि युधिष्ठिरसंग द्रोणाचार्यले भन्नुभयो—'युधिष्ठिर! के तिमीले अहिले गिद्धलाई देखिरहेका छौ।' युधिष्ठिरले उत्तर दिये–'हो हजूर देखिरहेको छु'। फेरि १ छिन पछि द्रोणले सोध्नुभयो–'अब नि केवल गिद्धलाई देखदछौ कि त्यो वृक्षलाई, मलाई र यहाँ उभिइरहेका भाइहरूलाई पनि देखिरहेका छौ?'। युधिष्ठिरले जवाफ दिए 'हो हजूर अहिले गिद्ध बसेको रूख र गिद्ध मात्रै होइन हजूरलाई र यहाँ उभिइरहेका भाइहरूलाई पनि देखिरहेको छु'। युधिष्ठिरको

यस्तो उत्तर सुन्नेबित्तिकै लक्ष्य भएको गिद्धतिर मात्र एकाग्रदृष्टि नरहेको देखेर गुरु द्रोण मनमनैमा खिन्न हुनुभयो र झोक्किए झैं भएर द्रोणले भन्नुभयो—'ए ... ... त्यसोभए भैगयो यहाँबाट गइहाल. तिमीबाट गिद्धको टाउकोकाट्ने काम पार लाग्दैन'।

युधिष्ठिरको पालो सकिएपछि गुरु द्रोणले दुर्योधन, भीमसेन र अरू कौरव पाण्डवहरूलाई पनि एक एक गरेर बोलाई उभ्याई सोध्नु भयो। आखिर उनीहरूले पनि युधिष्ठिरले जवाफ दिएझैं 'म रूख, गिद्ध र अरू उभिएका सबैलाई पनि देख्दछु' भन्ने जवाफ दिए र तिनीहरूलाई पनि झोक्किएर त्यस ठाउँबाट हटाइदिनुभयो। त्यसपछि अरू देश देशका राजकुमारहरू अघिसरेर आए तर तिनीहरूको पनि त्यै दुर्दशा भयो।

सबै निराशभयेर खिन्नचित्त गरी उभिइरहेका थिए, आफ्नो बुद्धिलाई र अभ्यासलाई धिक्काररिरहेका थिए र गुरुको अप्रसन्न अनुहार देखेर दिक्कमानी लाजले शिर निहुराइरहेका थिए।

गुरु द्रोणाचार्य हताश हुनुभएको थिएन। आजको जस्तो संख्यासुखवाद थिएन, धेरै संख्यामा छात्र पास भएनन् भने छात्रको जुलुस निस्कला, हडताल होला, संस्थाको बदनाम होला, विदेशीको अगाडि बेइज्जत होला, विदेशीभिक्षाबाट संस्था वञ्चित होला, जागिरैबाट वञ्चित हुनुपर्ला, मालिकबाट रिसानी होला कि भन्ने इत्यादि डर, त्रास अथवा परवाह थिएन, किन्तु एउटै भएपनि योग्य र आफ्नो ज्ञानको उत्तराधिकारी निस्कोस् भन्ने धारणा गुरु द्रोणाचार्यमा थियो। आफूमाथि, अतुलनीय श्रद्धा र विश्वासगर्ने, मनलाई एकाग्रराख्नसक्ने, बल र उत्साहसम्पन्न, विशिष्टप्रतिभाले युक्तभएको आफ्नो प्यारो छात्र अर्जुनलाई संझी-संझी हेर्दा भने अप्रसन्न–अनुहार भएतापनि गुरु द्रोणाचार्य आश्वस्त भैरहेको देखिनुहुन्थ्यो।

त्यसपछि अर्जुनलाई संबोधनगर्दै द्रोणाचार्यले भन्नुभयो-'बाबु!

अर्जुन ? अब तिमीले लक्ष्यवेध गर्नुछ। तिमी लक्ष्य भएको गिद्धलाई राम्रोसंग हेर। मेरो आज्ञा पाउने वित्तिकै वाण चलाउनुपर्छ। धनुषमा बाण खैंचेर १ मुहूर्त्तसम्म मेरो आज्ञाको प्रतीक्षा गर'। यस्तो आज्ञा सुन्ने वित्तिकै अर्जुनले तदनुसार बाण हालेर धनुषलाई यसरी ताने कि धनुष् त एकदमै गोलाकार देखिन थाल्यो र उनको आँखा मन र ध्यान गिद्ध मैं केन्द्रित भयो। एक छिनपछि द्रोणचार्यले अर्जुनलाई सोध्नुभयो, अर्जुन ! के तिमी अहिले त्यस रूखलाई र गिद्धलाई एवं मलाई र यहाँ उभिइरहेका दाजुभाईहरूलाई पनि देखिरहेका छौ'। अर्जुनले तुरुन्तै उत्तर दिए 'गुरुवर! अहिले त म न हजुरलाई न त दाजुभाईहरूलाई न त रूखलाई नै देख्दछु। मेरो आँखा, मन, ध्यान केवल गिद्धमाथि छ, गिद्ध मात्रै देखिरहेको छु'। अर्जुनको यस्तो उत्तर सुन्ने बित्तिकै गुरु द्रोणाचार्यको मुखमा प्रसन्नताको चिह्न प्रकट भै हाल्यो। एक छिनपछि द्रोणाचार्यले अर्जुनसँग फेरि सोध्नुभयो—'अर्जुन! अहिले तिमी गिद्धलाई मात्र देखिरहेकाछौ भने त्यो गिद्धको शरीर कुन रङ्गको कस्तो छ भन त'। गुरुको प्रश्न टुङ्गिन नपाउँदै अर्जुनले झट्ट उत्तर दिए। 'गुरुवर! गिद्धको सम्पूर्ण शरीर होइन किन्तु अहिले त केवल गिद्धको गर्धन र टाउको मात्रै देखिरहेको छु'। अर्जुनको यस्तो उत्तर सुन्ने बित्तिकै हर्षले द्रोणाचार्यको शरीरमा रोमाञ्चभएर आयो। अत्यन्त प्रसन्नभएर गुरुले आज्ञा दिनुभयो। 'अर्जुन! अब बाण हानिहाल'।

गुरु द्रोणाचार्यबाट आज्ञा पाउनासाथ यतार्थति विचारै नगरिकन अर्जुनले बाण चलाए। गिद्धको गर्धन मात्र लक्ष्य गरेर चलाएको बाणले गिद्धको गर्धनलाई टुक्रा पारेर टाउको भुँमा खसालिदियो। गुरु द्रोणाचार्य अर्जुनको सफलता देखेर ज्यादै खुशी हुनुभयो र अर्जुनलाई अङ्कमाल गरेर आशिर्वाद दिनुभयो। अर्जुनका सहोदर दाजुभाइहरूले स्नेहपूर्वक अङ्कमालगरे अन्य सुहृद् सहाध्यायीहरूले पनि अर्जुनको भूरि भूरि प्रशंसा गरे।

प्रस्तुतघटना यहीं समाप्त हुन्छ तर यस घटनाले लक्ष्य प्राप्तिको

लागि मानिसले कसरी आफ्नो लक्ष्यमा मात्र सीमित रहेर एकाग्रहुनु पर्ने रहेछ भन्ने शिक्षा दिन्छ।

आजकाल पनि छात्रहरूमा लक्ष्य प्राप्तिको साधारण आकांङ्क्षा नरहेको होइन तर यौटा ठूलो परिवारको नून, तेल इत्यादि व्यवहारको जञ्जालमा फँसेको गृहस्थीपुरुष जसरी दिनरात अस्तव्यस्त भइरहेको हुन्छ, शायद् त्यो भन्दा पनि अझै बढी अस्तव्यस्तता अधिकांश छात्रहरूमा पाइन्छ। कुनै विषयको एउटा परीक्षा पास गर्नु छ भने त्यसमा प्रथमश्रेणी ल्याउने साधारण इच्छा त रहन्छ तर परीक्षा पाठ्यग्रन्थको ठेली, अध्ययनहोरा ( पिरियड् ) को मिचामिच, उपेक्षात्मक अध्ययन, पूर्वाधीत विषयको अपक्वज्ञान र अनभ्यास, त्यसैले विस्मृति, स्मरणशक्तिको निर्बलता, मनोरञ्जनको आकर्षण, वक्तृत्व, नृत्य, गायन, चमेना ( पार्टी ), गुप्तदल अभिनिवेश वा सभा संगठनको असामयिक नेतृत्वको लोभले त्यसतर्फ लंकने तीव्र आकांङ्क्षा, अध्ययनको उपेक्षागर्नु परेपनि अर्थोपार्जनको निमित्त उत्कट आसक्ति, यी सबै संग्रहले गर्दा अधिकांश छात्र व्यस्त रहेका पाइन्छन्। तिनमध्ये केही पूर्वोक्त दुर्गुणहरूबाट मुक्त, प्रतिभासम्पन्न र पूर्वार्जित सुसंस्कारले युक्त हुन्छन्। तिनीहरूबाटै निर्द्धारित विषयमा एकाग्रता पाउन सकिन्छ र त्यस्तै छात्रहरूमध्ये बाटै विद्याको उत्तराधिकारी निस्कनसक्ने आशा गर्नसकिन्छ। एउटा डाक्टरबाट ठूला ठूला इञ्जिनका कलपूर्जाहरू सम्बन्धी जानकारीको अपेक्षा राख्नु भन्दा शरीरको कुनै एक भागको मात्रै भएपनि विशेषज्ञान प्राप्तगर्ने व्यक्तिको राष्ट्र र समाजद्वारा अपेक्षागरिने र सम्मानगरिने हुन्छ। दांत-डाक्टर, आँखा-डाक्टर, कान-डाक्टर, इत्यादिको उत्पत्ति यसैको उदाहरण मान्न सकिन्छ।

आज हामीसबै नेपालीले सर्वतोभावेन स्वीकार गरी अपनायेको पञ्चायती प्रजातन्त्रको यस युगमा हाम्रो राष्ट्रमा पनि तथाकथित बहुज्ञ धेरै नेपालीको भन्दा एक एकै विषयमा भएपनि

निष्णात विशेषज्ञता प्राप्त गरेका व्यक्तिहरूको ज्यादै खाँचो छ जस्तो मलाई लाग्दछ। अतः त्यस्तो लक्ष्यप्राप्तिको निमित्त अर्जुनको आदर्श अगाडि संभेर आफ्नो लक्ष्यमा एकाग्रतापूर्ण दृष्टि राखी अनुपेक्षात्मक अध्ययन र मनन गर्ने बेला आएको छ।

---

शास्त्रप्रतिपादित कल्याणकारी मार्ग प्रदर्शन गर्ने उद्देश्यले खडा भएको शास्त्रानुसन्धानपरिषद्को मुखपत्र "मर्यादा" पत्रिकाको समयमा नै ग्राहक बनी अमूल्य लाभ उठाउन न चुक्नु होस्।

# सदाचार

— प्राध्यापक रामचन्द्र पौडेल

सदाचार भनेको सत्कर्म अर्थात् असल आचार हो। पहिले ब्रह्मावर्तदेशमा[1] शिष्टहरू रहेकाले त्यस देशमा रहेका ब्राह्मणादिवर्णहरूको परम्पराबाट आएको आचारलाई सदाचार भनेर मनुले लक्षण गर्नु भएको छ र धर्मको लक्षणभित्र[2] पनि सदाचारलाई राख्नु भएको छ। त्यो आचार के हो भन्ने प्रश्नमा आर्यधर्मावलम्बी हामीहरूले हाम्रा पूर्वज प्राचीन ऋृषिमुनिहरूले प्रशस्त व्याख्या गरी बताएका नियमहरूलाई नै मान्नु पर्दछ। हाम्रा मनुस्मृति आदि धर्मग्रन्थहरूमा मानिसले बेहान उठेदेखि नसुतुन्जेलसम्म गर्नुपर्ने शौच, स्नान, जप, पाठ, पूजा, हवन, भोजन र अरू व्यावहारिक कार्यको नियम बताएको छ। ती सबैलाई नियमपूर्वक पालनगर्नु नै सदाचार भनिन्छ। आदर्शमय जीवनमा उक्लन सिंढीभएको सदाचारले आफ्नो व्यक्तित्वको विकास गर्न मद्दत गर्दछ। यो मानवजीवनलाई सफलपार्ने र नैतिकपतनबाट जोगाउने कुरा हो। सदाचारले मानवलाई अपूर्वशक्ति प्रदान गर्दछ; सदाचारले आत्मबल बढाउँछ। सदाचारी कहिल्यै पनि खराब काममा लाग्दैन, धैर्यवान् हुन्छ, आपत् परेमा पनि कत्ति विचलित

---

१ सरस्वतीदृष द्वत्यो र्देवनद्यो र्यदन्तरम्।
तं देवनिर्मितं देशं ब्रह्मावर्तं प्रचक्षते ॥ मनुस्मृतिः २।१७
तस्मिन्देशे य आचारः पारम्पर्यक्रमागतः ॥
वर्णानां सान्तरालानां स सदाचार उच्यते ॥ " २।१८

२ वेदः स्मृतिः सदाचारः स्वस्य च प्रियमात्मनः।
एतच्चतुर्विधंप्राहुः साक्षाद् धर्मस्य लक्षणम् ॥ मनु–२।१२

नभई आफूले शुरूगरेको कार्यलाई बीचमा छोड्दैन। यसबाट सुशील, अनुशासित, आज्ञाकारी, विनयी र स्वावलम्बी हुन्छ। सदाचारी कर्तव्यपथबाट कहिल्यै च्युत हुँदैन अर्काको भलो नै आफ्नो भलो संझन्छ। सदाचार मानवमात्रको अमूल्य गहना हो र यसमा सबैलाई आकर्षणगर्ने शक्ति छ। यसको अभावमा मानव दानव बन्दछ। यो सरासरी बजारमा गएर जतितिरेर पनि पाइने वस्तु होइन, जति महापुरुष भए ती सबै सदाचारले नै भएका हुन्। सदाचारको महत्व पहिले थियो अहिले पनि छ पछि पनि अवश्य रहने छ। मानवमात्रलाई कल्याणकारीमार्ग अपनाउन यो नभई नहुने चीज हो। सदाचारबाट यस लोकमा आरोग्य बल, वीर्य र प्रतिभा आदिको वृद्धिभई आनन्दमय सुखीजीवन हुन्छ। परलोकमा पनि यसजन्मको संस्कार अनुसार सुख दुःखको प्राप्ति हुने भई असल आचरणबाट निर्मल चित्त हुनाले कल्याण प्राप्ति नै हुन्छ।

अधिकारीले कार्यालयमा काम गर्दा नातावाद, कृपावाद, भ्रष्टाचार र ढीलासुस्ती आदि दुराचारलाई पन्छाई समय समयमा प्रकाशभएका रूलनियम बमोजिम कसैलाई पक्षपात नगरी जस्ताकोतस्तो काम गरिदिनु, सैनिकहरूले फौजीअडरको राम्रोतरहले पालनागर्नु, पाठशाला, महाविद्यालयमा अध्यापक, प्राध्यापकहरूले छात्रहरूलाई छोरा भन्दा फरक नगरी स्नेहपूर्वक पढाउनु, खेलाडीले मैदानमा छलकपट नगरी नियम बमोजिम खेलखेल्नु, व्यापारीले परलमोलमा थोरै मात्र नाफालिई मानवसेवा संझी व्यापारगर्नु, यी सबै सदाचारका हाँगा हुन्।

सदाचारी भन्न जति सजिलो छ, बन्न त्यति सजिलो छैन। आचारहीनहुन त कोही पनि रूचाउँदैनन् होला तर पहिलेदेखि संयमशील जीवन नभएकाले सदाचार अपनाउन कठिनभई छोड्दै गएका छन्। आजकाल वैज्ञानिक-युग हुनाले मानिसलाई सदाचारी बन्न सामाजिक आर्थिक कठिनाइले गाह्रो पर्दछ। भोगविलासको लालचाले

पनि यसलाई छोडिदिएका छन् । चाहेको कुरा खान इच्छालागे जति बोल्न मनलागे जति सुत्न पिउन नपाइने यी नियमहरू आजका समाजलाई काँढा बनेकाछन् । जताततै होटेलहरूमा बाहिरबाट बास्नाले नै घ्राणेन्द्रियलाई आकर्षण गर्ने नाम सुन्दै जिब्रो रसाउने घरमा बनाउन नसकिने कस्ता कस्ता मीठा वस्तुहरू तयारी छन् ।

अप्सराजस्ता सुन्दरी युवतीहरू अथवा सुन्दर युवाहरूसित बल डान्स गर्नपाइने क्लबहरूले मनलाई तानिरहेका छन् । मधुर मनोहर स्वरद्वारा टाढैबाट गीतले नै जाउँ जाउँ भनि हृदयलाई चञ्चल गराइदिने सिनेमा हलहरूले जताततै युवक युवतीहरूलाई सत्कार गरिरहेका छन् र सुख र दुःख सबै एकभई तँ र मँ भन्ने भेदभाव हटाई ब्रह्मानन्दभन्दा पनि उच्चकक्षाको सर्वोच्चानन्द दिलाउने सोमरसका पसलहरू तँ छाड मँ छाड गरी सबैतर्फ बढिरहेका छन् । थोरै समयमा नै लखपति हुने चानस भएका खेलबहाडको लहर चलिरहेको छ : "यावज्जीवं सुखं जीवेत्" जस्तो सरल र सुन्दर सिद्धान्तको मुकाबला मनुले बताएको कडा विधिनिषेधको नियम रसवरी लालमोहन बर्फी चमचम छाडेर तीतो टर्रो नीम चिराइतो असुरो बिँही आदिको सेवन जस्तो छ ।

वर्तमान मानवले यस्तो सम्झेको छ कि धर्मले मनुष्यको सबै प्रकारको स्वातन्त्र्यलाई अपहरण गरेको छ र मानिसलाई कैदी बनाएको छ, सबै प्रकारको स्वेच्छाचारमा धर्म अङ्कुश भइरहेछ खानु पिउनु सुत्नु उठ्नु बस्नु हिड्नु सबैमा धर्म अदृष्टरूपले पछिलागि रहेको छ स्वतन्त्र युगको यो विपरीत छ इत्यादि ।

अब विचारगरौं खडाखडै पशुको जस्तो पिसाब गर्न शास्त्रले निषेध गरेको छ तर आजकाल सभ्य कहलाइएका मानिसहरूको त्यसैमा प्रवृत्ति छ, त्यसो गर्दा पिसाबका छिटाले जुत्ता कपडा फोहोर भएर घिन लाग्ने भएको आफ्नो आँखाले देखेर निश्चय भए पनि त्यो कुलतलाई मानिसले छोड्दैन । भगवान्ले हामी सबैलाई सबै वस्तुमा

रहेको रूप रस गन्ध स्पर्श आदिको ठीक ठीक थाहा पाउन इन्द्रियद्वार दिनुभएको छ। जस्तै चलाख धूर्तले शङ्खलाई देखाएर पहेलो र नुनलाई गुलियो भनेर जति तर्क पेस गरे पनि कुनै मानिसले पनि विश्वास गर्दैन, इन्द्रियले अनुभवगरेका कुरालाई नै सत्य सम्झन्छ। त्यस्तै असल आचार र खराब आचार मनुष्य आँफै जान्न सक्तछ, तर विलासमय संसारमा फसी कर्तव्य र अकर्तव्य छुट्याउन नसक्ने भयो। वास्तवमा "इच्छा कहिल्यै पनि विषयहरूको उपभोग गरेर तृप्त हुँदैन घ्यू हाल्दा आगो बढे जस्तै बढि नै रहन्छ[1]" तृष्णा बढेमा मानिसलाई कुनै कुराले पनि पुग्दैन। ती वस्तुहरू धेरै धेरै बढ्दै गए पनि अरू बढि बढि जम्मा गर्ने इच्छा हुन्छ; सन्तोषमय जीवन र उच्चविचार अपनाउनु पर्दछ भन्ने मनुको मन्त्रलाई मानवले छोडिसकेको छ, त्यस्तो ज्ञान बढाउने शिक्षा पनि छैन। ब्रह्माण्डका प्राकृतिकवस्तु प्रकृतिबाट नै मर्यादित छन् चन्द्र सूर्य अग्नि हावा आकाश पृथिवी जल यी सबै अनादिकालदेखि आफ्नो मर्यादामा नियमित रूपले रहिरहेका छन्। यिनीहरू मर्यादामा रहनाले नै संसार अडेको छ मानवमा पनि मर्यादाको महत्व छ। हरेक क्षणलाई अमूल्य सम्झेर कुनै क्षणलाई पनि खेर नजाने गरी प्राचीन ऋषि महर्षिहरूले नियमितरूपले गर्नुपर्ने दैनिक कार्यक्रमको नियम बताएको छ जसमा प्रातः कालमा ब्युँझेदेखि राती न निदाएसम्म गर्नुपर्ने सबै क्रियाकलाप समाविष्ट छन्। वहाँहरूको दिव्यदृष्टि र लामो अवधिसम्मको अनुभवबाट तयार गरिएका ती नियमहरू नियमित रूपले विश्वासपूर्वक पालनगर्नाले दीर्घायु नीरोगी बलवान् तेजिलो बन्न सक्तछ, यसमा पनि वैज्ञानिक तथ्य छ। धर्मनिमित्तक भनि धर्मलाई प्रधानता दिएको मात्र हो। यसमा यही फरक छ कि पाश्चात्यका नियमहरू खाली विचारसित संबद्ध छन् आचारसित छैनन्, त्यसैले उनीहरू यी नियमलाई खालि फाइदा हुने मात्र सम्झन्छन्, अर्थात

---

१ न जातु कामः कामानामुपभोगेन शाम्यति।
हविषा कृष्णवर्त्मेव भूय एवाभिवर्द्धते॥ मनु–२.९४

साधारण मानेका छन् अनिवार्य छैनन्। उनीहरूको समाजमा यी नियम उल्लङ्घन गर्ने पनि योग्य नै ठहरिन्छ स्वेच्छाचरण पनि समाजको अङ्ग नै ठहर्छ : तर सनातनधर्ममा स्वेच्छाचरणलाई छूट छैन ठूला साना सबै आचारहरू धर्मसित संबद्ध छन्। "आचारः परमो धर्मः[१]" अर्थात् आचार नै मुख्य धर्म हो भनी मानेकोले आचारहीन पुरुष समाजको हेय हुन्छ।

कुनै पनि काम विधिपूर्वक र स्वेच्छाचारमा यति फरक छ कि कुनै मानिसले स्वेच्छाचारमा विषपान गऱ्यो भने मर्दछ अथवा तत्कालै औषधोपचारबाट बच्यो भने पनि समाजमा निन्दित हुन्छ। शास्त्र मर्यादाबाट आत्महत्या गर्न तत्परभए बापत प्रायश्चित्त भागीहुन्छ; लोकमर्यादाबाट अपराधीसंझी राजदण्ड पाउँदछ। अर्कोले त्यस विषयमा मद्दत गरेको रहेछ भने त्यो पनि अपराधी ठर्दछ। त्यही विष कविराज डाक्टरहरूले कुनै रोगमा औषधी भनी खुवाउँछन् इन्जेक्सन पनि दिन्छन् तर त्यो खाने खिलाउने अपराधी ठहरिन्न। अरू खुवाउने वैद्यले त चाँडो रोगनिकोपारे बापत रोगी धनीभए बकस पनि पाउँदछ। पहिलाले स्वेच्छाचारले मर्नलाई नै विषखाएको र अरू व्यक्ति त्यसमा सहायक हुनाले दुवै अपराधी भए दोस्राले बाँचनाका निमित्त खाएको र विषको मर्म जान्नेद्वारा विधिपूर्वक विषखानाले विष मरणको साधन नबनेर "विषस्य विषमौषधम्" अनुसार शरीरमा रहेको विष नाश गरी अमृतको काम गरेकोले प्रशंसा गरिने भयो। त्यस्तै प्राणायाम गर्दा शास्त्रले यति पटक ओम् जप्ने समयसम्म पूरक ( वायु तान्ने ) यतिसम्म कुम्भक ( वायु रोक्ने ) यतिसम्म रेचक (वायु छोडने) भनी समयको नियम गरेको छ; त्यसमा पूरकको समय भन्दा कुम्भकको चौबर र रेचकको दोब्बर मानेको छ, त्यसो गर्दा धेरै शुद्धवायु प्राण-

---

१ आचारः परमोधर्मः श्रुत्युक्तः स्मार्त एव च।

तस्मादस्मिन् सदा युक्तो नित्यं स्यादात्मवान् द्विजः॥ मनु- २।१०८

वायुमा सञ्चार भइ स्वास्थ्यलाभ हुने हुनाले वैज्ञानिक आधार छ, शुद्ध हावामा लामो स्वासलिंदा असल हुन्छ भन्ने विचारले समयको ख्याल नगरि स्वेच्छाचारबाट खाली वायु तान्नेर छोड्ने मात्र गरेमा त्यति स्वास्थ्यलाभ निश्चय हुन सक्तैन।

संसारको विषयरूपी विषलाई वैद्य जस्तो शास्त्रको नियम अनुसार सेवन गरेमा सुख शान्ति मिल्दछ। विषयरूपी विषलाई मनमाना ढङ्गले सेवन गरेमा यसलोकमा इन्द्रियहरूलाई वशमा राख्न नसक्नाले अनेक प्रकारका आपत्तिहरू आइलाग्दछन्, चित्त प्रसन्न हुँदैन र सत् असत्को विचार गर्न सक्ने बुद्धि हुँदैन। जीवनको अन्त्य अवस्थामा पनि सत्कार्यमा चित्त लाग्दैन; आफूले बडा कठिनले खाइ नखाइ कमाएको धन संपत्ति घर स्वास्नी छोरा छोरीलाई छोडेर एक्लै जान पर्‍यो भन्ने पीरले विह्वल हुन्छ। "जुन जुन भावलाई संझदै देह त्याग गर्दछ त्यही भावमा प्राप्त हुन्छ[१]" भन्ने भगवद्गीताको वचन अनुसार वासनाबद्ध भएर पुनर्जन्मको फाँसीमा परी संसाररूपी समुद्रमा सँधै डुबिरहने हुन्छ।

सदाचारको एउटा सानो उदाहरण यहाँ प्रस्तुत गरिन्छ "ब्राह्मे मुहूर्ते बुध्येत[२]" शास्त्रले भनेकोले प्रातःकालमा उठ्नु शास्त्रविहित छ। हामीहरू दिनभरि परिश्रम गरेर थाकी लस्तपरी सारा शरीर गली ओज सकिई रातमा निद्रा आमाको काखमा पसिरहेका हुन्छौं। प्रातः कालको प्राकृतिक वातावरणको सुन्दरता आल्हादकता मनोहरता

---

१ यं यं वाऽपि स्मरन्भावं त्यजत्यन्ते कलेवरम्।
तं तमेवैति कौन्तेय सदा तद्भाव-भावितः॥ भगवद्गीता ८·६

२ ब्राह्मे मुहूर्ते बुध्येत धर्मार्थं चानुचिन्तयेत्।
रात्रेः पश्चिमयामस्य मुहूर्तो यस्तृतीयकः।
स ब्राह्म इति विज्ञेयो विहितः स प्रबोधने॥

विलक्षण हुन्छ । सुगन्धयुक्त सुन्दरफूलहरू फुलिरहेका हुन्छन् , भ्रमरा माउरी आदि मन्द मन्द मनोहरशब्द गर्न लागेका हुन्छन् । विस्तारै विस्तारै वहन लागेको मनलाई ज्यादै प्रसन्न गराउने शीतल हावाले दशै दिशालाई सुगन्धित पारेको हुन्छ । त्यसैले यसलाई ब्राह्म मुहूर्त नाम दिइएको छ । अरूको त के कुरा प्राणीमा तुच्छ विष्टा खाने कुखुरा पनि आफू ब्युँझी सबैलाई उठाउन प्रयास गरिरहेको हुन्छ, ठीक पनि छ त्यो समय प्राणीहरूका शरीर मन बुद्धि आदिका खर्च भएका शक्तिहरूलाई पूरा गर्ने समय हो । अहिले प्रकृतिले मुक्तहस्त भएर समस्त प्राणीहरूका निमित्त सत्र खोलेर स्वास्थ्य बुद्धि मेधा प्रतिभा प्रसन्नता आदि अमूल्य रत्नहरूको विशाल राशिलाई लुटाइराखेकी छिन् । प्रातः कालमा वहने वायुको हरेक कणमा प्राणीमात्रका निमित्त सञ्जीवनी औषधीको अपूर्व मिश्रण छ । त्यो वायुले रातमा चन्द्रमाले पृथिवीमा वर्षाएका अमृतका थोपाहरू साथै लिएर वहिरहेको हुन्छ र यसको सेवनले स्वास्थ्य सौन्दर्य आयुष्यको वृद्धि हुन्छ; मन प्रसन्न भई आत्मामा नयाँ उमङ्गको अनुभव हुन्छ ।

प्राणीमात्रको जीवनका निमित्त अन्न जल वायु यी ३ वस्तु अत्यावश्यक छन् । यी मध्ये अन्न दिनको एकपटक खाए पनि ज्यान बच्तछ; पानी ४।५ पटक पाए यथेष्ट हुन्छ, वायु त सासफेर्न प्रतिक्षण आवश्यक छ । यस समयको वायुको ज्यादै महत्व छ । प्रातः कालमा खुला मैदानमा गएर वस्ने मानिसले यसको महत्व स्वतः अनुभव गर्दछ ।

प्रातः कालमा शौच स्नानादि समाप्त गरी खुला जग्गामा पूर्वाभिमुख भएर प्राणायाम सन्ध्या आदि गर्दा त्यस समयको शुद्ध वायु हाम्रा प्राणवायुमा सञ्चार हुनाले कुनै रोगले पनि आक्रमण गर्न सक्तैन । त्यस समयमा प्रमादवश अथवा आलस्य मानेर हामी सुति रह्यौं भने दिनभरि नै शरीरमा उत्साह र मनमा उमङ्ग आउँदैन कस्तो कस्तो लागेर नै दिन वित्दछ यो सबैले अनुभव गरेकै छ ।

सन्तानहरुलाई सदाचारी बनाउन यो विचार गर्नु पर्दछ कि बालक आलो मुछेको काँचो माँटो अथवा मइन जस्तो हुन्छ। अर्थात् तिनीहरुबाट जे चीज बनाए पनि सहजै बने जस्तै बालक पनि जुन साँचामा ढाले पनि ढल्न सक्तछ, सानो बालकलाई असल चालचलन भएको बनाउन आमा बाबु दाज्यू दिदी आदि मान्यजनको मुख्य हात हुन्छ। मान्यजनहरुले पनि नियममा रही बालकलाई त्यसको महत्व बुझाउँदै ठूलो गराउनु पर्दछ।

बालख आफू सानो छँदा आफू भन्दा माथिका मान्य मानिस-हरूले गरेका कामहरू सिक्न जान्न गर्न हेर्न ज्यादै उत्सुक हुन्छ र साथै जान्न सिक्न प्रयास पनि गर्दछ। यो पारिवारिक जीवनमा रहने सबैले अनुभव गरेकै कुरा हो। सन्तान सदाचारी हुन आफ्नो परिवार सदाचारी हुन पर्दछ, आफू स्वेच्छाचारी हुने मदिरा आदि सेवन गर्ने सन्तानलाई ती सेवन गर्न योग्य छैनन् भनेर त्यसबाट हटाउन सकिदैन; चुरोट तमाखु खाने बाबुका छोराहरू पनि त्यो अम्बलमा फसेकै देखि-न्छन् त्यसैले "आफू उदाहरण बन्नु पर्दछ" भन्ने राष्ट्रनायकको वाणीलाई सबैले सर्वात्मना पालन गर्नु पर्दछ।

छात्रका निमित्त समाज तथा परिवार पनि पाठशाला भने हुन्छ, मानिस जस्तो समाज तथा परिवारमा जन्म्यो बढ्यो हुर्क्यो त्यही समाज र परिवारको छाप उसको अन्तस्करणमा संस्कार रूपले रहिरहेको हुन्छ, सभ्य समाज र असभ्य समाजमा हुर्केकाको आकाश जमीनको फरक पर्दछ।

प्राचीन शिक्षा प्रणालीमा को धनी को गरीब सबैले गुरुको सेवागरी नियममा रहेर मात्र विद्याप्राप्त गर्न सकिन्थ्यो जसमा राज-पुत्रहरूले पनि त्यही नियममा रही समिधा कुश आदि काटेर बोकेर ल्याउन पर्दथ्यो। गुरुकुलमा बसेर अध्ययन गर्दा विद्या अध्ययनको साथ साथै अरू नियम पनि पालना गर्न अत्यावश्यक हुनाले नियमित

रूपले आहार विहार आदि भई शरीरको स्वास्थ्य पूरापूर हुन्थ्यो। परिश्रम गर्ने बानि बस्तथ्यो, रूखो सुखो पीठो मीठो जे भए पनि खाएर रहनसक्ने क्षमता हुन्थ्यो, कुशासनमा सुत्ने अभ्यास भएकोले जहाँ जसरी सुते पनि मस्तसँग निद्रापर्ने भई शरीर साधिइरहेको हुन्थ्यो। पहिलेका उच्चपदाधिकारीहरूमा परिश्रम दुःख आपत्ति सहनसक्ने क्षमता थियो भन्ने उदाहरण त हामी राजाका छोरा रामचन्द्र र गौतम बुद्धलाई नै दिन सक्छौं। जुन दुवै आफ्नो त्याग तपस्याबाट देवतामा गनिए। पढिसके पछि जे पनि गर्न सक्ने, नियममा रहने, सदाचारी, मातृभक्त, पितृभक्त, देशभक्त र राजभक्त भएका हुन्थे। विस्तारै गुरुकुलको परम्परा तोडियो। क्रमशः शिक्षाले अर्कै रूप लियो, विशाल मैदान वा ठूलो जङ्गलमा परेका यात्रीहरू बाटो अलमलिए जस्तै मानिसहरू आफ्नो कर्तव्यपथमा अलमलिए। सदाचारको नाम मात्र रह्यो।

शास्त्रको नियमको बाँध यस्तो गजबको छ कि त्यो केही किसिमबाट भत्क्यो फुट्यो भने–पानीको बाँध फुटेमा पछि त्यो भन्दा बलियो गरी बाँध बाध्न सकेजस्तो यसलाई नियमित गराउन सकिंदैन। त्यसैले शास्त्रका नियमहरूलाई अनिवार्यरूपले जस्तै परेका बखतमा पनि पालना गर्नपर्ने नियम छ। एकपटक त्यसबाट च्युत भएपछि मानिसको त्यो नियम पालन गर्ने प्रवृत्ति स्वतः हटेर जान्छ। यसैले सदाचारलाई ज्यादै महत्व दिएको छ।

वर्तमान समयमा त राष्ट्र राष्ट्रले पनि परस्परमा सदाचारको पाठ सिक्नु परेको छ। जसबाट एक राष्ट्रले अर्को राष्ट्रलाई प्रेम दृष्टिले हेरोस्, उन्नत भएकोमा हृदयदेखि नै प्रसन्न होस्, उसको उन्नतिमा भागलेओस् "वसुधैव कुटुम्वकम्" लाई साकार गराओस्।

मानिसमा रहने काम क्रोध लोभ मोह मद मात्सर्यलाई पूर्वाचार्यहरूले अन्तः शत्रु अर्थात् शरीरभित्ररहने शत्रु मानेका छन्, जस्तै

राजाको शत्रु आफ्नो दरबार भित्रै अदृश्यरूपले रह्यो भने त्यो राजालाई आफ्नो सत्ता कायम गरिराख्न कत्रो प्रयास पर्दछ। त्यस्तै हाम्रा काम क्रोध आदि गरिएका छ ओटा शत्रु हाम्रो साथसाथै मित्र जस्तो बनी गुप्तरूपले रहेका छन्। तिनीहरूलाई परास्तगर्न हामीलाई ज्यादै कठिन पर्दछ। ती हाम्रा भित्री शत्रुहरूलाई नहटाइ हामी आनन्द साथ हाम्रो घर भएको शरीरमा बस्न पाउँदैनौं। हामीहरूलाई तिनीहरूदेखि रातोदिन कुनवेला आक्रमण गरेर आफूलाई बश पार्ने हो भनी डर नै भइरहन्छ। त्यसैले ती छ ओटा शत्रुहरूलाई हामीले नजिति हुँदै हुँदैन। आँखाले नदेखिने ती शत्रुहरूलाई जित्न सदाचरी हुनुपर्दछ। बीच बीचमा इन्द्रियहरूले विषयवासनामा आसक्त भएको मौकापारी मीठा मीठा चीजहरू खान, सुन्दर सुन्दर साधन जुटेका महलमा बस्न, राम्रा राम्रा वस्तुहरू देख्न, सुगन्धित वस्तुहरूको सेवन गर्न, मनोहर मनोहर शब्द सुन्न र हामीलाई आफ्नो गच्छेभन्दा बढि तृष्णा बढाउने तर्फ धकेल्न लागेमा पनि सदाचारी छौं भने तत्काले ती दुर्भावनाहरूलाई हटाउन सक्तछौं दुराचारी पुरुषलोकमा निन्दित, दुःखी, रोगी र अल्पायु हुन्छ[1]। सदाचारी बनी शरीर इन्द्रिय र मनलाई वसमा राख्नाले कायिक (शरीरले गरिने), चौर्य हिंसा व्यभिचार आदि वाचिक (वचनले गरिने), क्रूर बचन असत्यभाषण पैशुन्य आदि मानसिक (मनले गरिने) नास्तिकता अनिष्टचिन्तन असत्सङ्कल्प आदि दुराचार हटाइ "तन्मे मनः शिवसङ्कल्पमस्तु" वेदमा प्रार्थना गरेको सत्सङ्कल्प भएको मन बनाउनु पर्दछ। असल कुरा मात्र चिताउनाले यसलोक परलोक दुवैमा कल्याण हुन्छ, यसबाट जे कुरा पनि सिद्धगर्न सकिन्छ, मन प्रसन्न हुन्छ, मन खुसि भएपछि सबै दुःख नाशहुन्छन्। आजकाल प्राणीहरूले सत्सङ्कल्पलाई छोडिदिएकाले उनीहरूको जीवन सुखमय छैन। इन्द्रियलाई वशगर्न नसकेकाले शुद्ध खानपान राष्ट्रिय वेशभूषा रहनसहन

---

१ दुराचारो हि पुरुषो लोके भवति निन्दितः।
दुःखभागी च सततं व्याधितोऽल्पायुरेव च॥ मनु–४/१५७

सदाचार लुप्तहुँदै गएको छ। मदिराको सेवन के ब्राह्मण के क्षत्रिय सवैमा वढिरहेको छ। अभक्ष्यभक्षण अगम्यागमन मद्यपान हिंसा आदि दानवकर्म गर्नाले मानवको अधःपतन भएको छ। आचार विचार खानपान रहनसहन शास्त्रको नियम अनुसार राख्नाले नै मानव खास खास मानव वन्दछ। खाएका वस्तुको प्रभाव मनमा परी त्यही किसिमको वुद्धि हुने हुनाले शास्त्रविहित आहारको सेवन नगरि कुनै पनि पुरुष सदाचारी वन्न सक्तैन, यो ध्रुवसत्य छ।

# जुमला–एक परिचय

— रत्नाकर देवकोटा

जुमला नेपालको सुदूर पश्चिमोत्तर हिमाली प्रदेशको पहाडी टाकुरामा छ । वि. सं. १३०० सालतिर जुमलाको सिंजा ( सेञ्जा ) दरा लामाथाडामा सिंजापति पृथ्वीमल्ल, जक्तिसिं, शोबनसाई, जोरासिंसाई प्रभृति राजाहरू रहन्थे । डोटी, बैतडी, अछाम, बभाङ, बाजुरा, स्याङ्जा, पाल्पा, पोखरा, कैलाली र कञ्चनपुरका पश्चिमी टाकुरे राजाहरूको मालपोत र अन्य रैकम यिनै सिंजापति राजाहरूले लिने गरेका थिए ।

त्यसैवेला पृथ्वीमल्लले जुमलालाई जुमला र हुमला दुई भागमा विभाजन गरेका हुन् । जुमला दक्षिण र हुमला उत्तरतिरको भेगमा पर्दछ । सामान्य नाम उच्चारणको लागि तत तत स्थानको विशेषताको आधारमा जुमला र हुमलालाई १८ दरा २२ पाखा जुमला भनेर उच्चारण गरिने गरिएको छ ।

वि. सं. १८४४ मा वहादुरसाहले सेनापति काजी शिवनारायण खत्री र सरदार प्रवलरानालाई खटाई जाजर्कोट, सल्यान र दैलेख जुमलाका सिंजापति कल्यालवंशी राजालाई जिताएका थिए।

त्यहाँदेखि जुमलामा राजधानीबाट नै प्रशासक ( बडाहकिम ) खटिएर जानलागे । यसरी गएका प्रशासकले नै सिंजा लामाथाडाको राजधानीमा प्रशासन चलाउन केही अफ्ठ्यारो लागेकोले र जुमला अशीदरा छिनासिममा श्रीस्वामी चन्दननाथको आश्रयमा रही कामगर्न सजीलो पर्ने भएको हुँदा उसै समयदेखि अशीदरा छिनासिममा सदरमुकाम गराएका हुन् ।

## जुमला शब्दको परिभाषा :–

छिनासिमकै नगीचै उत्तरतिर गराल र चौल भन्ने दुई डाँड़ा छन्। ती दुई डाँड़ाको आकार-प्रकार ऊचाई र लमाई एउटै भएकोले (अनुमानित) ती दुई डाँड़ाको आधारमा डाँड़ा-जुमला भन्ने नाम रहन गएको हो। छिनासिम चौरको बीचमा शिव ( दत्तात्रेय ) को मन्दीर छ। ती दुई पहाड पहिले सर्प रहेछन्, शिवजीको आश्रयमा रही शोभित भइरहेका र पछि शिवजीकै गलामा पहिरिन जाँदा शिवजीको जादूले पत्थरिन गएकाहुन् भन्ने जनश्रुति छ।

"डाँड़ा जुमला" भन्ने चलन गाउँघरका बूढापाकाहरूमा अद्यापि छँदैछ। छिनासिम १८ दराको सदरमुकाम भएका र जतात-तैका मानिस भेलाभई एउटै सरसल्लाहगर्ने ठाउँ हुनाले खलङ्गा हुन गएको हो। पछि केही विकाश भएको र व्यापारको केन्द्र समेत बन्न गएकोले जुमला छिनासिम खलङ्गा बजार बस्न गएको हो।

जुमलाप्रदेश प्राकृतिक हराभरा भूमि, कर्णाली नदी, झर्ना, कन्दरा, डाँफे, गुराँस, वूकी, घनाजङ्गल, जडीबूटी र डाँड़ा-काँड़ाले परिपूर्णछ।

सुन्दर रारादह, गिडीदह, गारुडदह, स्वामीकार्त्तिकदह, ऋण-मोक्षदह प्रभृतिले यसलाई अझै सुन्दर तुल्याएको छ। यहाँको स्वच्छ र पवित्र हिन्दूसंस्कृति यहाँको मुख्य विशेषता हो। यहाँ वर्षेनी पौष-माघमा हिमप्रपात हुन्छ। हिमप्रपात भएमा यहाँको प्राकृतिक सौन्दर्य धेरै नै अवर्णनीय हुन्छ र त्यतिवेला यसलाई विश्वको एक रमणीय बगैंचा भनेपनि हुन्छ। यहाँ पर्यटनकेन्द्र खोलिएमा जिल्लाको साथै राष्ट्रको राम्रो उन्नति, गौरव र साथै आय समेत हुनेकुरामा दुईमत हुन-सक्तैन।

यसवखत वनका डाँफे, चांचड, कालीज, च्याखुरा आदि

चराहरू कतै आश्रय नपाएर घर घर र गोठ गोठमा आश्रयलिन आउँछन् । हिमालयको हिउँ पग्लेर समानरूपले बगिरहने स्वच्छ चीसो पानी, कुनै माली बिना फुलेका ती पहाडी बगैंचाका डोईली, हजारी, सूर्यमुखी, सयपत्री फूलहरू, गाउँघरको स्वच्छ हावापानी, घनाजङ्गलमा चराचुरुङ्गीको मधुर आवाज र चौंरीगाई, भेडा, बाख्रा, गाई, भैंसी र घोडी घोडाहरूले चौरमा खाँडो र चौरास लगाएर चरि-रहेको रमणीय दृश्य ज्यादै नै मनमोहक देखिन्छ । घर घरमा मौरी पालन, आफ्नै परिश्रमले तयार गरिएको घरेलु बोखु, गलैंचा, स्वीटर, गलेबन्द, कम्बल, राडी-पाखी आदिको भारी बोकी हातले ताखु कात्दै परदेशतिर हिंडीरहेका ती परिश्रमी हटारू जुमलीहरूको ताँती देख्ता शहरिया जीवनभन्दा त्यो जीवन धेरै उच्च र सुन्दर देखिन्छ । हुन-सक्छ त्यो जिल्ला ( वर्तमान अञ्चल ) राजधानीबाट सुदूर भएकोले शिक्षामा पछिपरेको होला तर अरू उद्योगधन्दा र व्यवसायहरूमा पछिपरेको छैन ।

तिप्रकोटको भोटे आरू, जुमलाको ओखर, मुगु ( रारा ) को स्याउ र हुमलाको कातूरी, कपास, चौंरीगाई, ल्यू , गलैंचा, ठेटुवा, डाँफे आदि प्रसिद्धछन् । यी वस्तुहरूको सुरक्षा उत्पादन र बिक्रीगरेमा राष्ट्रको निमित्त निकै लाभहुनेछ र हुमला र तिप्रकोटमा जडीबूटीहरूको फर्म खोलिएमा एउटा ठूलो उद्योगको स्थापना हुनेछ ।

### चाडपर्वहरू :—

जुमलाका सबै निवासीहरू हिन्दुधर्मावलम्वी भएकाले उनीहरू नेपालका अरू निवासीहरू सरह अरू राष्ट्रिय चाडपर्वहरू पनि मान्दछन् तापनि उनीहरूले मान्ने केही महत्त्वपूर्ण चाडपर्वहरूको यहाँ संक्षिप्त परिचय दिइन्छ —

### तागी संक्रान्ति ( वैशाख-संक्रान्ति ):—

नववर्षारम्भको दिनमा यहाँका ब्राह्मण, क्षत्री र ठकुरी आदि

तागाधारी जातका सधवा आईमाईहरू गाउँका मुखिया वा नायक (नाईके) को घरमा गई उनीहरूको पूजागरी आफ्ना पतिदेवको दीर्घायुको कामना र नाम उच्चारण गरी तागा (धागो) लगाउछन्। यो तागा कोही घाँटीमा र कोही हातमा लगाउँछन्। कार्त्तिक ६ गते गङ्गाजीमा गएर पूजा अर्चनादि गरी प्रत्येक आईमाईहरूले त्यो तागा नदीमा बत्ती बालेर सेलाउंछन्।

## राँके संक्रान्ति (साउने संक्रान्ति):-

यो दिनमा दिउँसो फाँट, चौर, मैदान, सानो पहाढका टाकुरा, खोला, खोल्सामा गाउँका ठिटीहरू जम्माभई गीतगाउने र हात समाती वरिपरि खेल्ने गर्दछन्। राती घर घर, धर्मशाला, गोठ छाना, थारा आदि मानिस बसेको ठाउँमा देवताको स्थानमा आगो-बाली लूतोफाल्ने गरी एक गाउँलेले अर्को गाउँलेलाई ठट्टाको रूपमा गालीगरी लूतोफाली मीठोखाना खाने गर्दछन्। विशेषगरी खीर (तस्मै) खाने चलन छ। यो दिनमा छोरीबेटीहरूलाई माईत बोलाउने गर्दछन्।

## मालिकाचतुर्दशी (श्रावणशुक्लचतुर्दशी):-

यो दिनमा जुमलाका टाकुरा कन्दराका देवीदेवताहरूको मन्दीरमा तीर्थयात्रीहरू भेला हुन्छन।

मुक्तिक्षेत्र, बडीमालिका (जुमला र अछामको बीचको तीर्थ) चीमारा मालिका, ऋृणमोक्ष, छायानाथ, स्वामीकार्त्तिक आदि तीर्थस्थलमा यात्रीहरू (युवक, युवती, वृद्ध र बालक) जम्मा भई राती पूजापाठ गरी मांगल भन्ने गर्दछन्। प्रायः यो दिनमा पहाडका धाम-धाम (टाकुरा) मा मेला लाग्ने भएकोले पहाडका टाकुरा जतैततैबाट देखिएर बडो रमाइलो हुन्छ।

## पुस पन्ध्र :-

यो दिनको राती गाउँ-घरका बूढापाका र अरु जोसुकैले पनि

रमाईलो कथा, गाउँखाने कथा ( साईतर ) भनेर रमाईलो गरी घर, गोठ, धर्मशाला, पाटी र पौवामा आगो बाली रात बिताउछन् ।

## माघीसंक्रान्ति

यो दिनको अगिल्लो राती गफगरी रात बिताएर विहान नदीमा या घरैमा प्रत्येक परिवारले नुहाई नुहाउन लगाई ( उज्यालो नहुँदै ) गाउँघरकी छोरीबेटीलाई दक्षिणा र यथाशक्य भोजन गराई आफूले खाने गर्दछन् । यो दिनमा विशेष गरी खिचडी खाने चलन छ ।

## श्रीपञ्चमी :—

यो दिनमा बालक बालिकाहरूको कानमा प्वालपारी सुन चाँदी या कुनै धातुको मुन्द्रा लगाइदिने चलन छ। आगामी वर्षको कृषिको लागि आफ्नो घरको हलीको निर्धारणगरी त्यो हलीद्वारा गोरुको काँधमा तेल लगाई त्यसै दिनदेखि अलि अलि खेत जोत्न प्रारंभ गर्दछन ।

## खेतीको लागि विशेष नियम :—

चैत्र १२, १६, २० गते क्रमशः धानको बीउ बोरामा राखी कुलामा तलाउमा या सानो खाल्टोमा भिजाउने, झिक्ने र खेतमा उमार्नलाई छर्ने गर्दछन् ।

# वेदमा राजाको महत्व र वर्तमान श्री ५ महेन्द्र

— आ. श्रीगोविन्दप्रसाद भट्टराई

ऋग्वेदकालमा प्रत्येक जातिको आधिपत्य राजाको हातमा थियो। वैदिक अनुशीलन गर्दा राजाको प्रादुर्भाव युद्धको संबन्धबाट भएको हो भन्ने बुझिन्छ। ऐतरेय ब्राह्मण १।१४ को अनुसार असुरहरू-सँग हारेर आजीत भएका देवताहरूले आफ्नो राजा न हुनाले हारेको हो भन्ने ठानेर एक बलिष्ठ तेजस्वी इन्द्रलाई आफ्नो राजा बनाए। अथर्ववेद ७।८७-८८। तथा ऋग्वेद १०।१७३ मा पूरासूक्त नै राजाको निर्वाचनका निमित्त प्रयुक्त छन्। यस प्रमाणबाट उपस्थित सबै प्रजाको समिति एकमत भएर राजाको उत्तमपदका निमित्त चुनाव गर्दथे र उनीहरू विश्वास गर्दथे कि ती राजा आफ्नो उत्तमपदबाट कहिल्यै पनि भ्रष्ट हुन नपाउन्। अर्को राजपद निर्माणका निमित्तको धारणाको मन्त्र स्पष्ट शब्दमा घोषित छ। जस्तै—

"ध्रुवोऽच्युतः प्रणीहि शत्रून् शत्रूयतोऽधरान् पादयस्व। सर्वा दिशः संमनसः सध्रीचीः ध्रुवायते समितिः कल्पतामिह॥" हाम्रो समितिले निर्वाचन गरिएको राजा अचल र अभ्रष्ट भएर संपूर्ण शत्रुहरूलाई जित्नमा समर्थ होऊन्, सबै शत्रुलाई पैताला मुनि राख्न सकून्। हाम्रा राजा संपूर्ण दिशाका जनसमुदायलाई प्रसन्नराखेर सुमार्गबाट हिडाउन समर्थ होऊन् भन्नाका निमित्त हाम्रो यस समितिले महाराजको कल्पना गर्दछ। समितिले यसरी निर्वाचन गरिएका राजा पथभ्रष्ट भएमा आफ्नो पद र देशबाट च्यूत गरिन्थे र आफ्नो दोष स्वीकार गरेर फेरि सुशासन चलाउने कबुल गरेमा फेरि आफ्नो पदमा थामिन्थे।

यसरी फेरि स्थापना र प्रजाद्वारा राजालाई फेरि संवरण गरेको उल्लेख अर्थववेदका दुइ सूक्तमा (३।३,३।४, छ। त्यसमध्ये एक उदाहरण—"त्वां विशो वृणतां राज्याय त्वामिमा प्रदिशः पञ्चदेवीः। वर्ष्मन् राष्ट्रस्य ककुदि श्रयस्व ततो न उग्रो विभजावसूनि"। हेराजा तिमीलाई प्रजाहरूले राज्यसञ्चालन गर्नका निमित्त संवरण (चुनाव) गरेकाछन् र उत्तम पञ्चायतका भलाद्मी र चारैदिशा र आकाश समेत पाचै दिशाले पनि तिमीलाई संवरण गरेकाछन्। तसर्थ अब उप्रान्त यो मुलुकको माथिल्लो उत्तम तहमा रहेका तिमीले आफ्नो देशको इजत बढाऊ। राजा बनेपछि उच्छृङ्खल भई प्रजाहरूका निमित्त भयङ्कर न भई सबैमा समान व्यवहार गरेर धनको विभाजन गर। देशभरको जनप्रतिनिधि संमिलित भएर राज्यप्रवन्धका निमित्त सल्लाह गरिने संस्थालाई समिति भन्दथे। राजाले समितिमा जानु अनिवार्य थियो भन्नेकुरा "राजानः सत्यः समिति रियानः (ऋ. ६।६२।६) यस मन्त्रबाट पनि थाहा हुन्छ। समिति खाली राजसभा मात्र न भई एक साहित्य सभा पनि थियो। श्वेतकेतु, प्रवाहण गौतमहरू पञ्चालको समितिमा गएको बेलामा राजा जैवलिसँग अध्यात्मविषयका पांच प्रश्न सोधिएको थियो (छान्दोग्य ५।३)। यसबाट राजा कतिसम्म आध्यात्मिक विचारधाराका हुन्थे भन्ने कुरा थाहा हुन्छ। अर्को राजनैतिक संगठनलाई 'सभा' भन्दथे। सभा च सा समितिश्चावतां प्रजापतेर्दुहितरौ संविदाने (अथर्ववेद ७।१२।१)। सभालाई नरिष्टा पनि भन्दथे। नरिष्टा वा सभाको निर्णय अलङ्घनीय थियो। शुक्लयजुर्वेदमा "सभेयो युवा" यो राष्ट्रिय प्रार्थना छ (२२।२१)। यसमा युवाशक्ति सभायोग्य होओस् भनी प्रार्थना गरिएको छ। समितिमा जनसाधारणले स्थान पाउदथे, तर सभामा राष्ट्रका वृद्धलाई मात्र स्थान मिल्दथ्यो ("न सा सभा सन्ति न यत्र वृद्धाः, न सा सभा यत्र न संति संतो") जातक आदि वाक्यको निष्कर्ष यही थियो कि–सभा राष्ट्रका विशिष्ट शिष्ट वृद्धहरूको संस्था थियो। यसको कार्य अपराधीहरूको अपराधको निर्णय र तदनुसार दण्ड-

विधान थियो । यसबाट बुझिन्छ कि सभा उच्चन्यायालयको कार्यसंपादन गर्दथ्यो, यसैको सहायताबाट राजा आफ्नो दण्डविधान-कार्यको संपादनगर्दथे । राजाको कर्तव्य शान्ति अवस्थामा प्रजाको पालन र युद्धकालमा शत्रुहरूको आक्रमणबाट आफ्ना प्रजाको रक्षा-गर्नु थियो । राजा स्वयं लडाईंमा भिड्न जान्थे र उनीहरूका साथमा सेनापति र पुरोहित पनि जान्थे । पुरोहितको काम युद्धस्थलमा देवता-हरूको प्रार्थना गरेर राजालाई विजयी बनाउन सहायता गर्नु हुन्थ्यो । दासराज सँगको युद्धको समयमा सुदासका साथ उनका पुरोहित वशिष्ठ रहेका र विजयका निमित्त देवताको प्रार्थना गरेको स्पष्ट उल्लेख ऋग्वेद मा छ ७।७३।४ । यसबाट पुरोहितको महत्व कति ठूलो थियो भन्ने कुरा थाहा हुन्छ । ब्राह्मणकालमा राजाको पद अति नै प्रतिष्ठित थियो । उनको अभिषेकका निमित्त उपादेय यागहरू मध्ये राजसूयको ठूलो महत्व मानिन्थ्यो । यसले राजाको प्रभुशक्तिको गौरव बुझाउँदथ्यो । राजा हुनलाई राजसूययज्ञको विधान नियत गरिएको हुथ्यो । पछि सम्राट् ( चक्रवर्ती ) पदका निमित्त अश्वमेधयज्ञको अनुष्ठान आवश्यक बताइयो । शतपथब्राह्मणमा ११ अधिकारीलाई रत्नी भन्दथे । अभिषेकलिनु भन्दा पहिले रत्नीसँग जानु राजाको अनिवार्य काम हुन्थ्यो । ती ११ अधिकारी यी हुन्— १ सेनानी २ पुरोहित ३ अभि-षेकगरिने राजा ४ महिषी ( पट्टरानी ) ५ सूत ६ ग्रामणी ( ग्रामको वा पञ्चायतको अधिकारी ) ७ क्षत्तृ ८ संगृहीतृ ( कोशाध्यक्ष ) ९ भागदुह ( जनतावाट कर असूल गर्ने अधिकारी) १० अक्षवाप ( रुपियां-पैसाको हिसाव राख्ने अफिसर ११ गोविकर्तृ ( जङ्गलको अधिकारी ) वेदमा उल्लिखित राजकृतको नै यी ब्राह्मणयुगीय प्रतिनिधि हुन्थ्ये ।

राजा भएपछि उनले जो प्रतिज्ञा गर्दथे, त्यो कुरा शतपथ ५।३। ५.२ मा र तैत्तिरीयब्राह्मण १।७।१०।१ मा संक्षेपमा उल्लेख छ । परन्तु यसको पूरा वर्णन ऐतरेयब्राह्मणमा ऐन्द्राभिषेकको अवसरमा गरिएको छ । देवताहरूमा इन्द्र अतिबलिष्ठ, ओजस्वी तथा सहिष्णु थिए, यिनै

गुणले मुग्ध भएर देवताहरूले इनलाई आफ्नो राजा बनाए र महाभिषेक संस्कार संपन्न गराए। क्षत्रिय राजाहरूको महाभिषेक पनि यसै पद्धति अनुसार गरिन्छ। अभिषेकको मौकामा राजाले आफ्ना प्रजाको साम्ने यौटा ठूलो प्रतिज्ञा गर्नुपर्दथ्यो, जसको राजनैतिक महत्व अतिगम्भीर र अति ठूलो छ। राजा बनेपछि उनले महात्वपूर्ण शपथ गर्नुपर्दथ्यो भन्ने कुरा "यां च रात्रिमजायेऽहं यां च प्रेतास्मि तदुभयमन्तरेण इष्टापूर्तं मे लोकं सुकृतमायुः प्रजां वृञ्जीथा यदि ते द्रुह्येयमिति"। ( ऐतरेय ब्रा. ८।३।१५ ) बाट थाहा हुन्छ। यसको अर्थ—यदि मैले तिमी प्रजाहरूको द्रोहगरें तथा तिमीहरूलाई पीडा हुने कुनै काम गरें भने म जुन रातमा जन्में र जुन रातमा मर्नेछु यी दुइ समय भित्र मैले जति यज्ञसंबन्धी अनुष्ठान गरें र गर्नेछु त्यसको फलबाट तथा स्वर्गलोक, मेरो जीवन र मेरा सन्तानबाट पनि म वञ्चित होऊँ। यस्तो प्रतिज्ञा राज्यप्राप्तिको समयमा राजाले अवश्य गर्नुपर्ने थियो। यो शपथ गरेपछि रत्नी प्रभृतिले राजालाई सिंहासनमा राखेर राज्याभिषेक दिन्थे, जुन अभिषेकको मन्त्र यसप्रकारको छ—"सोमस्यत्वा द्युम्नेनाभिषिञ्चाम्यग्नेर्भ्राजसा सूर्यस्य वर्चसेन्द्रस्येन्द्रियेण। क्षत्राणां क्षत्र पतिरेध्यति दिद्यून्पाहि" १०।१७॥ "सविता त्वा सवानां सुवतामग्निर्गृहपतीनां सोमो वनस्पतीनाम्। बृहस्पतिर्वाच इन्द्रो ज्यैष्ठाय रुद्रः पशुभ्यो मित्रः सत्यो वरुणो धर्मपतीनाम्"॥ इमं देवा असपत्नं सुवध्वं महते क्षत्राय महते ज्यैष्ठ्याय महते जानराज्यायेन्द्रस्येन्द्रियाय। इममुमुष्य पुत्रममुष्यै पुत्रमस्यै विश एष वोऽमी राजा सोमोऽस्माकं ब्राह्मणनां राजा" ( शु.य. ९-३९,४० ) हे यजमान! राजा! चन्द्रमाको कान्ति, अग्निको तेज, सूर्यको प्रताप, इन्द्रको पराक्रम यो अभिषेकको जलमा प्रवेश गराएर तिमीलाई अभिषेक गर्दछु, यस अभिषेकको प्रभावले तिमी संपूर्ण क्षत्रियहरूको क्षत्रिय ( ईश्वर )(संपूर्ण राजाहरूको मालिक) भएर रहू। हे सोम आदि देवताहरू हो! शत्रुले प्रयोगगरेका संपूर्ण वाणहरू र शत्रुप्रयुक्त दुर्नीतिहरूबाट यी यजमान राजालाई रक्षा-

गर । अर्थात् चन्द्रमा जस्तो सबैलाई आनन्द दिने अग्निको जस्तो तेज, सूर्यको जस्तो प्रताप, इन्द्रको जस्तो पराक्रम भई संपूर्ण जनताको स्वामी भएर रहू भन्नाका निमित्त तिमीलाई अभिषेक गर्दछु । यस अभिषेकका प्रभावले संपूर्ण शत्रुहरूलाई जित्ने भएर रहू, हे चन्द्र अग्नि सूर्य इन्द्र देवताहरू हो ! यी यजमान राजालाई तिमीहरू सर्वभावले रक्षगर ।

हे यजमान राजा ! सूर्यले तिमीलाई संपूर्ण प्रजाहरूमा हुकुमगर्ने शक्ति दिऊन् , अग्निले तिमीलाई संपूर्ण गृहस्थीको स्वामी बनाऊन् । सोम ( चन्द्रमा ) ले तिमीलाई संपूर्ण वृक्षजातिको स्वामी बनाऊन् । यस देशको संपूर्ण वन तिम्रो अधीनमा रहोस् र वृक्षजातिले फल आदि दिएर तिम्रो सेवा गरून् । बृहस्पतिले तिमीलाई खुबै विद्वान् बनाऊन् , इद्रले संसारमा सबैभन्दा ठूलो पुरुषार्थी गराऊन् , रुद्रले संपूर्ण पशुजातिको अधिपति बनाऊन् , मित्र देवताले तिमीलाई सत्यवाक्य बोल्ने प्रेरणा दिऊन् , वरुणले तिमीलाई धर्मको स्वामी ( धर्मात्मा बनाऊन् । यसरी अभिषेक दिएर आशीर्वाद दिइएका राजा इन्द्रादिदेवता जस्तै हुन्छन्, त्यसैले इन्द्रादिका साथमा अभेद गरेर मनुस्मृतिमा पनि भनिएको छ—सोऽग्निर्भवति वायुश्च सोऽर्कः सोमः स धर्मराट् । स कुवेरः स वरुणः स महेन्द्रः प्रभावतः ॥ अर्थात् ती राजा नै प्रभुशक्तिका प्रभावले गर्दा अग्नि, वायु, सूर्य, सोमः धर्मराज, कुवेर, वरुण र महेन्द्र ( इन्द्र हुन् )। हे देवताहरू हो ! हाम्रा यी यजमानरूप राजालाई ठूलो क्षत्रियको पद पाउन, सर्वोत्तम महापुरुष हुन, संपूर्ण जनताको आधिपत्यगर्न र जान राज्य—जनताको अनुकूल भएर राज्यगर्न वा प्रजातन्त्र राज्यगर्न इन्द्रको जस्तो पौरख गर्न र आत्मज्ञान समेत गर्नका निमित्त कुनै पनि वाहिरी दुष्ट राजा आदि शत्रु र भित्री काम क्रोध आदि शत्रु नभएका गराओ । हे देशवासी प्रजाहरू हो ! आजदेखि अमुक राजाका छोरा अमुकी रानीका छोरा अमुक जातिका अमुक नाम गरेका व्यक्ति तिमी संपूर्ण प्रजाहरूका राजा भएका छन् , तसर्थ आजदेखि तिमीहरू सबैले यिनीको संमान गर, तर हामी ब्राह्मणहरूको चाही सोम चन्द्रमा वा

सोमलता नै मात्र राजा छन्, किनभने–सर्वं स्वं ब्राह्मणस्येदं स्वंभुङ्क्ते स्वंददातिच" भन्ने स्मृतिवाक्य अनुसार यो सबै पृथिवीको चीज ब्राह्मणको नै हो, उसले आफ्नै खाइरहेको छ र आफ्नै चीज दिइरहेको छ, तसर्थ कसैको कुनै निगाहाको जरुरत छैन वा ब्राह्मणहरू स्वयं आत्मज्ञानी हुनाले उनीहरू आत्मचन्द्रको साक्षात्कार गरेर बस्तछन् र उसैलाई राजा संझन्छन् वा सोमयाग गर्दा सोमलतालाई राजाको स्थान दिएर रथमा राखी ठूलो महोत्सवपूर्वक यात्रा गराएरल्याई त्यसद्वाई सोमयाग गरिने हुनाले त्यसैलाई उनीहरूले राजा संझेका हुन्छन्। महीधरले यसको व्याख्या यसरी गरेका छन्–हे देवताहरू हो! दशरथका र कौशल्याका छोरा क्षत्रिय जातिका कोशल देशमा जन्मेका कोशल देशका प्रजाको रक्षा गर्न तत्पर भएका यी रामनाम गरेका राजालाई शत्रुरहित गराएर ठूलो क्षत्रियको पद आदि पाउन योग्यगरा ओ। उव्वटले चाही इमं र एषमा कौरव वा कुरुवंशी राजा भन्ने नाम राखेकाले जुन राजाको राज्याभिषेक गरिन्छ त्यसै राजाको बाबु आमा देश जाति र नाम समेत उल्लेख गरेर यस मन्त्रले अभिषेक गर्नु उचित छ। त्यस्तै यस प्रसङ्गमा देवस्यत्वा २०।३०: कोऽसि कतमोऽसि, २०।४ शिरोमे २०।५ आदि आशीर्वादात्मक मन्त्रको पनि पाठ हुन्छ। यस प्रसङ्गमा प्रयोग गरिने शतपथब्राह्मणको ५।२।१।२५ को वाक्य पनि बडो महत्वपूर्ण र घतलाग्दो छ, जस्तै –"इमं ते राट् ... ... यन्ताऽसि यमनो ध्रुवोऽसि धरुणः, कृष्यै त्वा क्षेमाय त्वा रय्यै त्वा पोषाय त्वा।" हे राजा तिमीलाई यो राज्य दिइएको छ, तिमीले यो राज्यलाई आफ्नो अधीनमा नियमपूर्वक राख, तिमी मजबूतका होऊ, आफ्नो राज्य र उत्तरदायित्वलाई राम्रोसँग वहन गर्न सक्ने होऊ। जनताको कृषिकर्मको निमित्त कल्याणका निमित्त समृद्धिका निमित्त र पुष्टिका निमित्त तिमीलाई यो राज्य दिइएको छ। अर्थात् राजाले आफ्नो उत्तरदायित्वलाई पूर्णतया पालनगरी देशलाई धनधान्य संम्पन्न, प्रजालाई समृद्ध हृष्ट पुष्ट र सधैं सन्तुष्ट गराउनु पर्दछ, यो नै

राजाको राजधर्म हो भन्ने कुरा यी उपरोक्त मन्त्रहरूबाट थाहा हुन्छ। यी वाक्यहरूको अनुशीलनबाट वैदिककालको राज्यप्रणाली कस्तो हुन्थ्यो भन्ने कुरा मोटा मोटी थाहा पाइन्छ। राजालाई जुन राज्य प्राप्ति हुन्छ त्यो कुनै दैवीशक्तिबाट मात्र प्राप्त भएको नभई खास मानव समाजको तर्जुमाबाट नै प्राप्त भएको हो। राज्य दान होइन, यो संरक्षणीय चीज हो, जसको रक्षागर्नु राजाको परमलक्ष्य हो। राज्य भोगगरिने चीज होइन। राज्य पाएपछि राजाको प्रधान कर्तव्य यो हो कि सर्वतोभावेन कृषि गोरक्ष वाणिज्य प्रभृति उपायद्वारा देशलाई समृद्धिशाली बनाएर प्रजाहरूलाई सुखशान्ति र कल्याण दिंदै आफ्नो देशलाई उत्तरोत्तर सर्वसंपन्न गराउनु।

राज्याभिषेकको मन्त्रहरूबाट र शपथको मन्त्रहरूबाट थाहा पाइन्छ कि राजा मुलुकको सेवागर्न स्थापना गरिएका हुन्छन्। राजा देशको सर्वोच्चपदाधिकारी हुन्, उनको मुख्य कर्तव्य सबैतिरबाट प्रजाको कल्याण गर्नु हो। यसरी अतिप्राचीन कालदेखि नै सनातन आर्य हिन्दूराजाले कहिल्यै पनि स्वेच्छाचारी हुन पाएको छैन। प्रजातान्त्रिक ढङ्गले सभा र समितिको सहायताले राष्ट्रको मङ्गलमय सुशासन साधनागर्नु नै वैदिककालका राजाहरूको चरमलक्ष्य हुन्थ्यो। राजा यहाँसम्म जनप्रिय हुन्थे कि सबै जनता आफू आफूलाई राजाको पियारो संझन्थे। उनी हजारौं नदीहरूमा समुद्रको जस्तो सबै जनतामा समान व्यवहार गर्ने हुन्थे। राजा सधैं विनीत हुन्थे। विनीत हुनु सबैको भूषण हो, त्यसमा पनि राजाको ता अति उत्तम भूषण हो। राजा अविनीत भएमा वेन, नहुष, सुदा, पैजवन, सुमुख, निमि आदि जस्तो भई पतन हुन्थे भन्ने कुरा विशेष उल्लेखनीय छ। राम कृष्ण पृथु मनु कुबेर विश्वामित्रहरू विनयले गर्दा धेरै माथिल्लो तहका मानिएका छन्। इन्द्र, वायु, धर्म, यम, सूर्य, अग्नि, वरुण, चन्द्र कुबेरहरूको अंशद्वारा संपूर्णलोकको रक्षा गर्न राजाको रचना गरिएको हुनाले विनीत राजालाई सबै देवताको अंशको भावना गरेर राजालाई सबैले

मान्नु पर्दछ। राजाले प्रजाहरूलाई पुत्रलाई भैं स्नेहको दृष्टिले हेर्ने र राजालाई प्रजाहरूले पितालाई भैं आदरको दृष्टिले हेर्नुपर्दछ। राजालाई उदार बनाउनमा वृद्धजनहरूको विशेष हात हुन्छ तसर्थ राजाले विशेष गरेर सज्जन वृद्धहरूको सङ्गत गर्नुपर्दछ। त्यसमा पनि वेद र शास्त्र जान्ने विद्वान्हरूको सङ्गत गरेर उनीहरूको उपदेश बमोजिम राजाले शासन गर्नू। विशेष गरेर विद्यावयोज्ञानवृद्ध जनहरूलाई सधैं साथमा राखेर उनीहरूको उपदेश बमोजिम चल्ने राजालाई कहिल्यै पनि कुनै दोष उत्पन्न हुदैन, दोष उत्पन्न भएमा पनि चांडै नै समाधान भइ नै हाल्दछ। तसर्थ विनीत राजा पनि अरू बढी विनीत हुन ती विद्यावृद्ध ज्ञानवृद्ध भइकन वयोवृद्ध भएका सज्जनहरूको सङ्गत गर्न सधैं तत्पर बनोस्। विनयको शिक्षा लिदै गरोस्। विनीत राजामा सधैं सबैको मित्रदृष्टि हुन्छ, मित्रदृष्टिले सधैं सबैको कल्याण मात्र गर्दछ। तसर्थ राजा र प्रजामा परस्पर मित्रदृष्टि रहिरह्यो भने त्यो संबन्ध अति मधुर (मीठो) हुन्छ जसको आस्वाद मुखले बताउनै सक्तिन्न, त्यसैले वेदमा भनिएको छ-मित्रस्य मा चक्षुषा सर्वाणि भूतानि समीक्षन्ताम्। मित्रस्याहं चक्षुषा सर्वाणि भूतानि समीक्षे। मित्रस्य चक्षुषा समीक्षामहे। यो भयो आदि वैदिककालको राज्यसञ्चालन-पद्धति। यसका अतिरिक्त अरू पनि शासनपद्धति वेदमा पाइन्छ।

वेद भन्नाले संहिता ब्राह्मण आरण्यक र उपनिषद् समेतको बोध हुन्छ! ऐतरेयब्राह्मण ऋग्वेदको ब्राह्मण हो। यसमा वैदिकधर्मीहरूको शासन विषयको एक घोषणा छ, जुन यस किसिमको छ—

स्वस्ति। साम्राज्यं भौज्यं वैराज्यं पारमेष्ठ्यं राज्यं महाराज्यं आधिपत्यमयं समन्तपर्यायी स्यात् सार्वभौमः सार्वायुधः आन्तात् आ पराध्यीत पृथिव्यै समुद्रपर्यन्तायाः एकराट इति। यसमा वैदिककालको राज्यशासनको गणना छ, जुन ब्राह्मणकालमा आएर विभिन्न रूपमा देखापरे। १ साम्राज्य २ भौज्य ३ स्वाराज्य ४ वैराज्य ५ पारमेष्ठ्य ६ महाराज्य ७ आधिपत्यमय ८ समन्तपर्यामी, आठ किसिमको

राज्यशासनको गणना यस मंन्त्रमा छ । शु. य. को ६।४६ मा ६ जान-राज्यपद आएको, ऋग् ८ ।१३।४,८।१।१२।१०, ६।४।४३।१, १०।५३। ४,५। शु.य. २५।२३। अथर्व ११।८.११ मा र ब्राह्मणहरूमा समेत १० पञ्च जनराज्यको उल्लेख आएको र अन्यत्र ११ गणराज्यको समेत उल्लेख भएकोबाट स्पष्टतया ११ किसिमको शासनप्रणाली वेदमा पाइन्छ। भारतवर्षको कुन कुन भागमा र बाहिर समेत कुन कुन दिशामा कुन कुन किसिमको शासन थियो भन्ने स्पष्ट उल्लेख ब्राह्मणग्रन्थमा छ। अर्थात् यो सच्चा ऐतिहासिक घटना हो, खाली कविकल्पित मात्र होइन ।

अब "पृथिव्यै समुद्रपर्यन्ताया एकराट्" यस उक्तिमा विचार गरौं—समुद्रपर्यन्तको जती सबै पृथिवी छ त्यस भूभागमा एउटै आर्य राजा होउन्, संपूर्ण पृथिवी एउटै वैदिक शासनद्वारा शाशित हो-ओस्, पृथिवीभरमा एउटै आर्यराज्य होओस्, तथा सबै पृथिवीमा एउटै आर्यपरिवार "वसुधैव कुटुम्बकम्" होओस्। "कृण्वन्तो विश्व-मार्यम्" यो ऋग्वेदको उक्तिको यही नै स्पष्ट अर्थ हो। ऋषिहरू यो महान् ध्येयलाई सत्य गराउन सधैं प्रयत्नशील थिए, त्यसैले उस समय-सम्म यो उक्तिलाई सफल पनि गराएका थिए, जबसम्म भारतवर्षमा विधर्मीको प्राबल्य भएको थिएन। वर्तमान समयमा आर्य-हिन्दूहरूको दिनपरदिन संकोच हुँदै गैरहेको छ, अझ कतिसम्म हुने हो केही भन्न सकिन्न।

ऋषिहरूको घोषणा ता समस्त समुद्रवलयाङ्कित पृथिवीमा एउटै आर्यसम्राट् बनाउने र सबै भूभागमा वैदिकशासन चलाउने थियो। आज हाम्रो यो संकोचलाई देखेर स्वर्गमा रहेका ती ऋषिहरू अन्तस्क-रणमा कति खिन्न हुंदाहुन्, कुन् कुरा हुनुपर्ने थियो-कुन कुरा हुन गयो । अस्तु। पूर्वोक्त उक्तिमा जुन राज्यहरू बताइए त्यसको ध्येय र स्वरूपको विषयमा विचार गरौं ।

(१) साम्राज्य— सबै राजारजौटाहरूलाई आफ्नो अधीनमा पारी राजसूय यज्ञगर्ने वाह्र थरी राजाको मालिक राजालाई सम्राट् भन्दछन्। त्यस्ता राजाले उपभोग गरिएको राज्यको नाम साम्राज्य हो। यो साम्राज्य उत्तम र अधम दुवै किसिमको इतिहासमा पाइन्छ। वेन, नहुष, सुदास, वैजवन, सुमुख, निमि, रावण, हिरण्यकसिपु प्रभृतिको सामाज्य अधम कोटीको थियो; त्यसैले यिनीहरूको साम्राज्यका साथै यिनीहरूको पतन भएको इतिहास प्रसिद्धछ। राम, जनक, शिखिध्वज, मान्धाता, पृथु, मनु, कुवेर आदिको साम्राज्य उत्तम कोटीको थियो, त्यसैले उनीहरूको साम्राज्यको सुकीर्ति अझसम्म पनि विश्वमा गुँजीरहेको छ। रामराज्यको जस्तो सुख सुविस्ताको कल्पना नेपाल र भारतका जनता सपना र जपनामा पनि गरिरहेका छन्। रामले रावणको साम्राज्यको नाश गरेतापनि त्यहाँ आफ्नो आर्यविधान दिएर त्यो राज्य विभीषणको अधीन गराई स्वतन्त्ररूपले नै राखे। आज हामी स्वतन्त्र छौं तापनि हाम्रो आर्यविधान छैन र विधानद्वारा पराधीनताको अनुभव गरिरहेका छौं। आर्यको चिन्ह शिखासूत्रसंम पनि हामीमा बहुसंख्यक जनताले छोडीसक्यौं यसको कुनै बन्देज छैन। आज हाम्रो पतित आत्मालाई देखेर स्वगमा रहेका हाम्रा आर्य ऋृषिमुनिहरूको आत्मा कति रुँद हो।

(२) भौज्य – यो दोस्रो राज्यशासन हो। यसको दुई किसिमको अर्थ छ। पहिलो अर्थ—भुज पृथिवीको नैसर्गिक मर्यादाले परिवेष्टित राज्य। जस्तो यस देशको राजाले यति नै भू-भागमा राज्यगर्नु, वाहिरका अरू देशमा आक्रमण नगर्नु भनेर स्थिति बांधिएको राज्य। जस्तो नेपाल, भारत, इङ्गलैण्ड आदि। दोस्रो अर्थ—भुजपालनाभ्यवहारयोः—

प्रजाको रक्षाको र भोजन आदिको सुप्रवन्ध गरेर राज्य गर्नु। राजाले जति मात्रामा प्रजाका निमित्त रक्षा र भोजनादिको सुप्रवन्ध गर्दछ त्यति नै मात्रामा चिरस्थायी भएर प्रजा उपर राज्यगर्न सक्तछ।

(३) स्वाराज्य– स्वाराज्य (स्वराज्य) पनि वैदिक समयको उत्तम राज्यशासन हो। आज पनि हामी "स्वराज" शब्दको व्यवहार गर्दछौं, तर त्यस समयको र आजको स्वराजमा आकाशजमीनको फरक छ। वैदिक स्वराजमा "स्व" को शुद्धिमा विशेष ध्यान दिइन्थ्यो। स्व (आत्मा) राज्यशासनगर्ने व्यक्तिमा यमनियमको पालन, अहिंसा–सत्य–अस्तेय–ब्रह्मचर्य–अपरिग्रह आदिको शिक्षा विद्यार्थीजीवनदेखि नै दिइन्थ्यो। गुरुगृहमा रहेर नै मानिस यमनियम आदिले संपन्नहुन्थे र तिनै मानिसहरू स्वाराज्यशासनमा आउंथे। तर आजको स्वाराज्य राज्यशासनको अधिकार येन केन प्रकारेण आफ्नो अधीनमा राख्नुमा नै विशेष ध्यान दिइन्छ। स्वको शुद्धता पवित्रता र निर्दोषता पट्टि विचारै हुँदैन।

(४) वैराज्य— जसमा राजा कोही पनि हुँदैन र जनता आफैं आफ परस्परमा मिलिजुली आफ्नो शासन आफैं गर्दछन्, त्यसलाई वैराज्य भन्दछन्। यस्तो किसिमको राज्य ठूलो, ठूलो भूभागमा चल्न सक्तैन। यसमा कुनै राजा, शासक, नियामक अध्यक्ष वा प्रधान कोही पनि हुँदैन। संपूर्ण जाति एउटै ठाउँमा जंमा हुन्छन्। अथर्व वेदमा भनेको छ– विराट् वा इदमग्र आसीत् (८।१०।१) प्रारम्भमा यो संसार विराट् शासक भएको वा राजाहीन थियो। प्रारम्भिक अवस्थामा यस्तो हुनु स्वाभाविक पनि हो।

(५) महाराज्य– अनेक साना साना राज्यहरू परस्परमा मिलिजुली आफ्ना इच्छाले एउटै विधानको अन्तर्गत र एउटै रूप-

अएर रहन्छन् भने त्यो महाराज्य हुन्छ। यसमा कसैमाथि जवरजस्ति गरेर होइन कि परस्परमा मिलेर नै एकता हुन आउँछ र कसैमा आघात नपरी सवैमा एकनासको लाभ हुन्छ। मत्स्यन्यायले ठूलोले सानोलाई खाइदिने हुनाले सवै साना राज्य मिलेर एक ठूलो राज्य बनेमा कसैले सितिमिति आंक्न सक्तैन। त्यसैले यसरी महाराज्य वन्नु युक्तिसङ्गत छ। यसरी वढ्दै वढ्दै एक विशाल महाराज्य वन्न जानसक्तछ. यसमा स्वार्थ नवढेमा जनतामा अत्यन्त सुखसुविस्ता पनि हुन सक्तछ।

(६) आधिपत्यमय— पति र अधिपति यी दुईशव्द राज्यको अधिकारीको नाम हो। यिनीहरूको संमतिवाट जुन राज्य संचालन हुन्छ त्यो आधिपत्यमय राज्यशासन हुन्छ। यी राज्यका अधिकारी शुद्ध, संयमी, लायक र निस्वार्थी हुनगएमा यसमा पनि विशेप सुख–सुविस्तासँग जनताले जीवन विताउन पाउँदछन्।

(७) सामन्तपर्यायी— यसमा राज्यशासन सामन्तको अधीनमा रहन्छ। 'सामन्त' यो शव्द माण्डलिक ( एक देशको राजा ) को नाम हो। आर्यविधान अनुसारको सामन्तले गरेको राज्य त्यतिसम्म निन्दनीय हुँदैन। राम भरत आदिको अधीनमा कैय्यौं सामन्त थिए तापनि रामराज्य भरतराज्य आदि नामले प्रसिद्धि थियो। अहिलेसम्म पनि त्यसको प्रशंसा गरिरहिएको छ। परन्तु वर्तमान समयमा सामन्तीराज्य पनि घृणित अर्थले गर्दा दूषित वन्न गएको छ।

(८) पारमेष्ठ्य राज्य— यो सवै राज्य परमेष्ठी ( परमेश्वर ) को हो भन्ने ठानेर दैवीशक्ति अनुकूलको राज्यशासन चलाउनु पारमेष्ठ्यराज्य हुन्छ। परमेष्ठी यो नाम प्रजापतिको अर्थबोधक शव्द हो। सवैभन्दा माथिल्लो तहमा जो रहन्छन्

तिनीलाई परमेश्वर भन्दछन् , उनीको इच्छा अनुकूल राज्य-संचालन गर्नु पारमेष्ठ्यराज्य हुन्छ । त्यो राज्य कस्तो हुनुपर्दछ भन्ने कुरा वेदमा स्पष्टशब्दमा उल्लिखित छ । आधिपत्यमय वा सामन्तपर्यायी राज्य पनि यदि पारमेष्ठ्य-राज्यलाई सर्वोपरि मानेर आफ्नो राज्यशासन चलाउन लागे भने त्यो शासन सर्वथा निर्दोष पनि हुनसक्तछ । वैदिक समयमा यस्तो नै हुन्थ्यो. सबै आर्य एक वेदानुशासनको अधीनमा रहेर पारमेष्ठ्यराज्यलाई सर्वोपरि मानी आफ्नो कर्तव्य निष्कामभावले गर्दथे र मानवी स्वार्थको कारणले जुन दोष उत्पन्नहुने संभावना हुन्थ्यो, त्यो दोष त्यस शासनमा हुँदैनथ्यो र त्यो शासन उत्तम मानिन्थ्यो ।

(९) जानराज्य— पूर्वोक्त आठ किसिमको राज्यको अतिरिक्त "इमन्देवा" ( शु. य. ३९।४० ) मन्त्रमा जानराज्य पद पनि आएको छ । यसमा पनि "स्व"मा जस्तै "जन"पदमा विशेष जोड छ । "स्व" मा जस्तै "जन" पदमा पनि नियम आदि आत्मशुद्धियुक्त जनता भएमा नै त्यो राज्य विशुद्ध र पवित्र मानिन्थ्यो । त्यसैले जनराज्य पनि उच्चकोटीको राज्यमा परिगणित हुन्थ्यो । आजको जनतन्त्रराज्य र उस बखतको जानराज्यमा पनि त्यसैले आकाश-जमीनको फरक छ । अहिलेको जनराज्यमा 'राज्य' पदमा विशेष जोड छ र जनतालाई दबाउनुमा नै अधिकारीवर्ग आफ्नो महत्व संभन्छन् । त्यसैले जनतन्त्रराज्य पनि आज दूषित हुन गएको छ । आजको जनतन्त्रराज्य पनि यही नै हो ।

(१०) पञ्चजनराज्य वा पञ्चराज्य— यो राज्यको यद्यपि पहिले नै गणना गर्नुपर्ने थियो, किन्तु उपरोक्त मन्त्रमा ब्राह्मणकालका शासनपद्धतिको मात्र वर्णन गरिएकोले यो शासन ब्राह्मण-

काल भन्दा अघि नै देखि चलिआएको तर ऐतरेय ब्राह्मण-कालमा चाहीं पारमेष्ठ्यमै अन्तर्भाव गरेर बेग्लै गणना नगरिएको होला जस्तो मलाई लाग्दछ। संहिताकालमा र अरू ब्राह्मणहरूमा समेत यसको संक्षेपले उल्लेख गरेको पाइन्छ। यसमा पनि 'पञ्च'पदमा विशेष जोड छ। पञ्चहरूमा निश्छलता पवित्रता आदिका साथसाथै यमनियम आदिको शिक्षा गुरुदेखि नै दिइएको हुन्थ्यो, जुन पञ्चहरू बूढा अनुभवी पापदेखि डराउने उपकारशील र निस्वार्थी हुन्थे। ती नै मानिसहरूबाट छानिएर राष्ट्रियपञ्चायतमा आए भैं गरेर समितिमा आउँदथे र समितिबाट पनि विशेष छान-विन गरेर विद्यावृद्ध ज्ञानवृद्ध र वयोवृद्ध समेत भएको एक-दमै खारिइसकेको व्यक्तिलाई सभामा लगिन्थ्यो, जुन सभालाई कौटिल्यको अर्थशास्त्रको शब्दमा मन्त्रिपरिषद् भनिएको छ। त्यसैले त्यो पञ्चमा आउने व्यक्ति कस्तो छ, त्यसमा कतिसम्म शुद्धता पवित्रता र निर्दोषता छ भनेर पञ्चको शुद्धिमा विशेष ध्यान दिइन्थ्यो, त्यसैले पञ्चायतका व्यक्तिहरू पाञ्चायन देवता जस्तै पवित्र हुन्थ्ये। पापदेखि डराएर धर्ममा पूरापूर आस्था राख्नका लागि यी वैदिक-शासनपद्धति सार्है नै उपयुक्त छन्। वैदिक आर्ष हिन्दू धर्मावलम्बी नेपालीहरूले चाहीं यो पञ्चायतपद्धति वैदिक समयदेखि आजसम्म नै कुनै न कुनै रूपले मान्दै आएका छन्[१]।

(११) गणराज्य -- यो शासनप्रणाली पनि वेदकालमा थियो, यसलाई "शुद्धप्रजातन्त्र" भनेर पनि कतिपय विद्वान्‌हरूले मानेका छन्। वेदमा गणशब्द र गणपतिशब्द प्रशस्त आए-

---

१ हेर्नोस्–पञ्चायत व्यवस्था ( पृष्ठभूमि र आधार )

कोले त्यस बखतमा गणराज्य थियो भन्ने अनुमान छ। आज चलेको गणराज्य र यो वैदिक गणराज्य भिन्नै नै थियो। यसमा प्रजाहरूको इच्छा अनुसार राज्यसञ्चालन हुन्थ्यो। यसका अतिरिक्त अरू पनि कयौं किसिमका शासनपद्धति वैदिककालदेखि आजसम्मको अनन्तकाल भित्र भए होलान् त्यसमध्येमा साम्राज्य, स्वाराज्य, आधिपत्यमय, जनराज्य र पञ्चराज्य यी विशेष उल्लेखनीय छन्। त्यसमा पनि पञ्चराज्य (पञ्चायतराज्य) चाहीं सुरूदेखि आजसम्म नै कुनै न कुनै रूपले हाम्रो यो नेपालमा छँदैछ। यति फरक होकि कहिले गाउँ र नगरमा मात्र सीमित र कहिले राज्यसञ्चालन समेत यसैले गरेको छ।

हाम्रो नेपाल आदिकालदेखि नै वैदिक धर्ममा अडग भएर रहेको छ। "स्वधर्मे निधनं श्रेयः परधर्मो भयावहः" भन्ने सिद्धान्त अनुसार अविच्छिन्नरूपले आफ्नो वैदिक धर्मलाई सुरूदेखि आजसम्म नै पालना गर्ने देश अब नेपाल मात्र एक बांकि छ। आफ्नो सनातन वैदिक आर्यधर्मलाई संविधानमा समेत स्थान दिएर नेपालले आफ्नो प्राचीन परम्परालाई अक्षुण्ण राखेको छ। यद्यपि नेपाल अरू देशको अपेक्षा सानो छ तर यसको आँत साह्रै नै दरो छ। विशाल भारतले आफूलाई हिन्दूराष्ट्र भनी घोषित गर्न गोडा लुगलुग कमाएर असमर्थ बन्यो, तर नेपालले दृढताका साथ आफ्नो देशलाई स्वतन्त्र-हिन्दूराष्ट्र भनी घोषितगऱ्यो र राजा हुनलाई पनि आर्यसंस्कृतिका अनुयायी र हिन्दूधर्मावलम्वी हुनेपर्ने नियम राखिएको छ। त्यतिमात्र होइन आर्यसंस्कृतिको र हिन्दूधर्मको समेत संरक्षक पनि राजाले हुनेपर्दछ। यसैबाट सिद्धहुन्छ कि नेपालमा वैदिकधर्मले मजबूतसँग जराहालेको छ र विश्वमा अब नेपाल मात्र एउटा प्रसिद्ध सार्वभौमिकतासंपन्न स्वतन्त्र-हिन्दूराष्ट्र छ, तथा भारतवर्षमा रहेका संपूर्ण वैदिकधर्मावलम्बी हिन्दूहरूले पनि हाम्रो पनि स्वतन्त्र-हिन्दूराष्ट्र छ भनी गर्वका साथ

नेपाललाई देखाएर भनिरहेका छन् र आदरको दृष्टिले हेरिरहेका छन्। आज विभिन्न वादले विश्वलाई ढाकेर वादको विषयमा तनातनी भइरहेको छ तापनि त्यसको कुनै झमेलामा नपरी वैदिककालदेखि नै चलिआएको राजाको नेतृत्वमा हुने पञ्चायतीप्रजातन्त्र नेपालले अपनाएको छ। यो व्यवस्थामा आफ्नो पन छ र यो व्यवस्था अनुकूलका हामी छौं। नेपाल पनि बीचको केही समय भित्र अल्मलियो, ढल्मलियो, वादको चक्करमा फस्यो; पऱ्यो पनि। तर पदे पदे ठक्कर खायो चेत्यो, र आखिरमा आएर यही नै आफ्नो बाटो हो भनी आफ्नो बाटो आफैंले पहिल्यायो र निर्दलीय पञ्चायतीप्रजातन्त्रद्वारा उत्तरोत्तर आफ्नो उन्नति गर्दैछ। यसको संपूर्ण श्रेय श्री ५ महाराजाधिराज सरकार महेन्द्र वीर विक्रम शाहदेवलाई छ, जसले जनताको मनोभावनाको कदरगरी स्वयं आफैंले आफ्नो हक जनतामा सुंपिबक्सेको छ। वहाँमा वीरता क्षमता आदि क्षत्रियोचित सबै नै राजगुणहरू भरपूर छन्। यो मौसूफको पचाशौं शुभजन्मोत्सवको दिन हो। यस महोत्सवको शुभपर्वमा पूर्वोक्त वैदिकमन्त्रहरूद्वारा आशीर्वाद टक्र्याएर मौसूफमा 'शतं भूयश्च शरदःशतात्'' अर्थात् शयवर्ष भन्दा पनि धेरै समयसंम आयु आरोग्य कीर्ति प्रीति धनधान्य आदिले संपन्नभैबक्सी नेपालको भाग्य उत्तरोत्तर बढाइबक्सियोस् भन्नका निमित्त मार्कण्डेय आदि अष्टचिरञ्जीवीसँग तथा श्रीपशुपतिनाथ र गुह्येश्वरीमातासँग समेत प्रार्थनागर्दै यो लेख यहाँ नै टुङ्ग्याइन्छ।

# राष्ट्रिय चरित्र-निर्माणमा वैदिक ऋण

—प्रा० जी० सी० शास्त्री

"ऋणं ह वै जायते यो अस्ति। स जायमानः एव देवेभ्यः ऋषिभ्यः पितृभ्यो मनुष्येभ्यः"— (शतपथ ब्राह्मण १।७।२।१)

जन्मबाट मनुष्य ऋण सहित उत्पन्न हुन्छ। त्यो देवता ऋषि पितृ र मनुष्यहरूको ऋणी छ। यस कारण हाम्रो धर्म, संस्कृति र शिक्षा-दीक्षाको मूल उद्देश्य देवऋण, ऋषिऋण, पितृऋण र मनुष्यऋणबाट मुक्तहुनु हो। यस कुराको पुष्टिमा विद्या समाप्त गरेपछि समावर्तन संस्कारमा आचार्य आफ्ना शिष्यलाई अन्तिम उपदेश दिंदै भन्दछन् कि "भूत्यै न प्रमदितव्यं, स्वाध्यायप्रवचनाभ्यां न प्रमदितव्यं, देवपितृ-कार्याभ्यां न प्रमदितव्यम्"। अर्थात् स्नातकलाई प्राणीमात्रको कल्याण (मनुष्य ऋण), स्वाध्याय, प्रवचन (ऋषिऋण) देव र तथा पितृऋणबाट चुक्नु हुँदैन (तै० उपनिषद्)।

कृष्णयजुर्वेदमा पनि लेखिएको छ—'ब्रह्मचर्येण ऋषिभ्यः, यज्ञेन देवेभ्यः, प्रजया पितृभ्यः। एष वै अनृणः यः पुत्री यज्वा ब्रह्मचारी वासी।" अर्थात् ब्रह्मचर्यबाट ऋषिऋण, यज्ञबाट देवऋण, सन्तानबाट पितृऋणदेखि मुक्त हुन्छन्।

## (१) देवऋण :—

हाम्रो शास्त्रमा वेदको विद्वान्, परोपकारी, माता, पिता, गुरु आचार्यादिलाई देवता भनेको छ। यास्क आचार्यको निरुक्त ग्रन्थमा 'देव' शब्दको व्युत्पत्ति यसरी गरिएको छ— "दानात् दीपनात् द्योत-

नाद्वा देवः" अर्थात् देव त्यो कहलाउँछ, जसले त्याग गर्दछ, जो स्वतः प्रकाशित छ र अरूलाई पनि प्रकाश दिन्छ। यसर्थ माता पिता गुरुहरूलाई पनि देवता मानेको छ। यसै कारणले "मातृदेवो भव, पितृदेवो भव, आचार्यदेवो भव," भन्ने शिक्षा दिइएको छ। विद्वान्हरू पनि देवता कहलाउँछन् जस्तै - "विद्वांसो हि देवाः" (श० ब्रा०)। आफ्नो त्याग र तपस्याद्वारा राष्ट्रको उत्थानगर्ने व्यक्तिहरू पनि देवता हुन्। यसकारण हिन्दूहरूद्वारा श्रीराम, श्रीकृष्ण, भगवान्बुद्ध आदि महाव्यक्तिहरू देवताका रूपमा पूजिन्छन् र तिनीहरूको जयन्ती मनाइन्छ। देवता दुई प्रकारका छन् — एउटा अप्रत्यक्ष रूपमा, जस्तो श्रीपशुपतिनाथ, श्रीगुह्येश्वरी आदि; दोस्रो प्रत्यक्ष रूपमा मनुष्यदेवता। जस्तै वेदविद्यामा पारङ्गत र प्राणीमात्रको सेवा गर्ने व्यक्ति। शतपथब्राह्मणमा लेखेको छ — द्वयाः वै देवाः। देवाः अह एव देवाः। अथ ये ब्राह्मणाः शुश्रुवासः अनूचानाः ते मनुष्यदेवाः।" यिनीहरूका प्रति आफ्नो कर्त्तव्यपालन र तिनीहरूको संरक्षण संवर्द्धन गर्नु नै देवऋणबाट मुक्तहुनु हो।

## (२) ऋषिऋण :—

"अथ यदेव अनुब्रवीत्, तेन ऋषिभ्यः ऋणं जायते।" (श० ब्रा०)। अर्थात् जसले वेदादि समस्तविद्या पढ्दछ, त्यो ऋषिऋणबाट मुक्तहुन्छ। यसकारण ब्रह्मचर्य आश्रममा विद्या अध्ययनलाई ठूलो स्थान दिइएको छ। ब्राह्मणलाई ८ वर्षदेखि १६ वर्षसम्म, क्षत्रियलाई ११ वर्षदेखि २४ वर्षसम्म, वैश्य र शूद्रलाई १२ वर्षदेखि २४ वर्षसम्म गुरुकुलमा विद्यापढ्न अनिवार्य हुन्थ्यो। विद्याध्ययन नगरेमा उनीहरू व्रात्य कहलाउँथे र समाजबाट बहिष्कृत हुन्थे। यही नियम छात्राहरूलाई पनि लागू हुन्थ्यो। अथर्ववेदमा स्पष्ट लेखेको छ कि — "ब्रह्मचर्येण कन्या विन्दते युवानं पतिम्"। अर्थात्— ब्रह्मचर्यमा रही विद्या अध्ययन

समाप्त गरेपछि कन्या युवकपति प्राप्तगर्दछिन् । राजकुमारहरूलाई पनि गुरुकुलमा बसेर अरू छात्रहरू सरह विद्याध्ययन अनिवार्य रूपमा गर्नुपर्दथ्यो, जसले उनीहरू पछि राष्ट्रको सम्यक्प्रकारले रक्षागर्न समर्थ हुन्थे । 'ब्रह्मचर्येण राजा राष्ट्रं विरक्षति ।" (अथर्ववेद)

विद्याको पात्र :—

निरुक्तमा एक उपाख्यान छः— विद्याले विद्वान्संग भन्दछिन् कि मलाई कपटी, अजितेन्द्रिय र मूर्खलाई न देउ त्यस मात्र म तिम्रो बलिष्ठ निधि हुनेछु । विद्यार्थीहरूले ब्रह्मचर्यको पालन, सरल सात्विक पवित्र जीवन र नशालु पदार्थबाट टाढा रही आलस्य रहित कर्मठ जीवन बिताउनु पर्दछ । सरस्वतीदेवीको मूर्तिबाट पनि यही कुरा पाउँछौं । तिनी शुक्लवस्त्र धारणगरेकी हंस र कमल अथवा हंसमा आसीन हुनुको अभिप्राय यही हो कि विद्याध्ययन गर्ने विद्यार्थीले शुद्धचरित्र एवं नीर-क्षिरविवेक तथा कमलको समान निर्लेप हुनुपर्छ । यस कारण गुरुलाई पनि आचार्य भन्नुको मतलब यो हो कि ऊ छात्रछात्राहरूको आचार निर्माणगर्दछ । हाम्रो प्राचीन शिक्षा-प्रणालीमा चरित्रनिर्माणमा विशेष ध्यान दिइन्थ्यो, जो वर्तमान शिक्षा-प्रणालीमा छैन । गुरुहरू विशेष आदरका पात्र हुन्थे । "तं आचार्यं मन्ये पितरं मातरं च, तस्मै न द्रुह्येत ।' अर्थात् गुरुलाई माता पिताको समान मान्दथे र उनी प्रति कहिल्यै पनि द्रोह गर्दैनथे ।

(३) पितृऋण :—

विद्या समाप्तगरेपछि गृहस्थ आश्रममा प्रवेश गरेर सन्तान उत्पन्नगरी कुल र राष्ट्रको रक्षा गर्नु नै पितृऋणबाट मुक्तहुनु हो । "न अपुत्रस्य लोकोऽस्ति । स अयं मनुष्यलोकः पुत्रेण एव जय्य ।" (ए० ब्रा०) अर्थात्— पुत्रपुत्रीरहित मनुष्यलाई संसारको सुख प्राप्तहुन

सक्तैन, त्यो सन्ततिबाट नै सम्भव छ। यास्कले पनि पुत्र र पुत्री शब्दको व्युत्पत्ति पु + त्रा बाट गरेको छ। पु- नाम जसले पिता अर्थात् कुलको महान् कार्यहरूलाई पूर्ण गर्दछ र कुल एवं राष्ट्रको रक्षा गर्दछ, ती पुत्र-पुत्री हुन्। राष्ट्रको अस्तित्वको निमित्त जनसंख्याको ठूलो महत्त्व देखिन्छ। फ्रांसले यसको वृद्धिको लागि अविवाहित व्यक्तिहरूमाथि विवाहितलाई भन्दा बढी कर लगाएको छ। हिन्दूधर्ममा गृहस्थाश्रम साह्रै ठूलो मानिएको छ, किनकि त्यो सबै आश्रमको मूलाधार हो। मनुले गृहस्थाश्रममा प्रवेश नगरी भिक्षु-भिक्षुणी अथवा सन्यास ग्रहण-गर्नेलाई कडा दण्ड बताएका छन्। जापानले पनि यसैलाई अपनाएको छ। आद्य शङ्कराचार्यले पनि नेपालमा भिक्षु-भिक्षुणीबाट हुने व्यभिचारलाई हटाउन उनीहरूलाई विवाहगर्न बाध्य गराएर राष्ट्रको रक्षा-गरे। नेपालमा अर्द्धनारीश्वर अर्थात् आधा महादेव आधा पार्वती र आधा लक्ष्मी आधा नारायणका मूर्तिहरू विवादको पवित्रता र नारी-हरू पुरुषका बराबरीका द्योतक छन्।

## (४) मनुष्यऋण अथवा आर्तऋण :—

घरमा आएका अतिथि पाहुनाहरूलाई बास या खाना दिनु या राष्ट्रमाथि कुनै दैवी आपत् परेमा जिउ धन र श्रमद्वारा सहायता गर्नु मनुष्यऋणबाट मुक्तहुनु हो। यो मनुष्यऋण साह्रै महत्त्वको छ। पीडित जनता-जनार्दनको सेवागर्नु नै यसको मुख्य ध्येय हो। यसकारण बानप्रस्थीहरूलाई आफ्नो उन्नतिको साथसाथै राष्ट्रको निःस्वार्थ निःशुल्क सेवागर्नु एक ठूलो कर्तव्य मानेको छ। सन्यासी-लाई त विश्वको सेवनगर्नु नै सबभन्दा ठूलो छ। अतः सन्यासीलाई न जनै न शिखा राख्नु पर्दछ; जनैको ३ धागा— जो ३ ऋण (१) देवऋण (२) ऋषिऋण (३) पितृऋणका द्योतक छन्, उनीबाट मुक्त भैसकेका छन्। उनलाई एक मनुष्यऋण जनता जनार्दनको सेवा

नै बाँकी रहेको छ। तसर्थ सन्यासीले मनुष्यऋणदेखि मुक्तहुनका निमित्त विश्वको सेवागर्नु आवश्यक हुन्छ।

यस प्रकार राष्ट्रको चरित्रनिर्माणमा यी वैदिक ऋणहरूको ठूलो देन रहेको देखिन्छ।





मित्रस्य मा चक्षुषा सर्वाणि भूतानि समीक्षन्ताम्,
मित्रस्याहं चक्षुषा सर्वाणि भूतानि समीक्षे।
मित्रस्य चक्षुषा समीक्षामहे॥

—शु० यजुर्वेद।

(सबैले मलाई मित्रको दृष्टिले हेरून्, म पनि सबैलाई मित्रको दृष्टिले हेर्दछु र हामी सबै मित्रको दृष्टिले हेरौं।)

# "वाशिष्ठ-ज्ञान प्रक्रिया"

—श्री विष्णुप्रसाद न्यौपाने

"ज्ञाता ज्ञानं तथा ज्ञेयं द्रष्टा दर्शन दृश्यभूः ।
कर्ता हेतुः क्रिया यस्मा त्तस्मै ज्ञप्त्यात्मने नमः ॥"

मानिस उच्च आकांक्षा भएको चेतनशील प्राणी हो। सुख सुविधा प्राप्त गर्न हरसंभव प्रयास गर्दै जाने मानवीय स्वभाव अनुसार हरेक मानिस एक न एक काममा लागिरहेको हुन्छ, तैपनि चाहे जति कुरा प्राप्त गर्न सक्तैन। जहिले पनि यौटा न यौटा अभावले मानिस-लाई सताएकै हुन्छ। यसको कारण हो साध्य र साधनमा सामञ्जस्य नहुनु। आफैं अखण्डसुखस्वरूप भएकोले विवेक र विचारपूर्वक सहि मार्गको अवलम्बन गरेको खण्डमा खोजिएको त्यो अपारसुख आफैंबाट प्राप्त हुने थियो तर भ्रमले गर्दा जहाँ सुख छैन त्यस्तो निरस तुच्छ सांसारिक पदार्थबाट मानिसले सुख प्राप्त गर्न खोजेको छ। त्यसो हुनाले मानिसले वास्तविक सुख भन्ने कुरा पाउन नसकेर दुःखमा तडपिरहनु परेको। यो सारा अनर्थको मूल हो भ्रम। भ्रमको निवृत्ति भएमा मानिसले चिरकांक्षितसुख प्राप्तगरेर शान्ति-पूर्वक जीवन व्यतीतगर्न सक्नेथियो। अनर्थकारी भ्रमको निवृत्ति-पूर्वक यथार्थ तत्त्वबोध गराएर मानिसलाई चिरसुखी बनाउने उद्देश्यले हाम्रा पूर्वज ऋषि महर्षिहरूले अध्यात्मशास्त्रको उद्घाटन गरिदिनु भएको छ, जसको श्रद्धापूर्वक परिशीलन गर्नाले मानिस संसारको परितापले रहितभएर परमानन्द प्राप्तगर्न समर्थ हुन्छ। विविध शाखा प्रशाखाले पल्लवित, पुष्पित र फलीभूत हाम्रा यी अध्यात्मशास्त्रहरूमा वेदान्तको सर्वोपरि स्थान छ। वेदान्तमा योगवासिष्ठ एक मूर्धन्य-

शास्त्र मानिएको छ। यही योगवाशिष्ठ ग्रन्थको आधारमा अहिले ज्ञान सम्बन्धी केही कुरा व्यक्तगर्नु सामयिक भएकोले त्यसैको चर्चा गरौं।

योगवासिष्ठ महारामायण उत्तमकोटिको ज्ञानशास्त्र हो। यो ग्रन्थ महर्षि वाल्मीकिद्वारा काव्यशैलीमा लेखिएकोले गम्भीरअर्थको द्योतक र सुरम्य शव्दावलीले सुशोभित हुनुका साथै यसमा रोचकता एवं प्राञ्जलता विद्यमान छ। रामचन्द्र जस्ता उत्तम अधिकारीलाई मुख्य-पात्र बनाएर श्रोत्रिय ब्रह्मनिष्ठ वसिष्ठ ऋषिबाट ज्ञानको उपदेश गरिएकोले जिज्ञासु एवं मुमुक्षु भक्तजनको लागि यो ग्रन्थ ज्यादै महत्त्व-पूर्ण मानिन्छ। पन्द्र वर्षको कलिलो उमेरमा नै रामचन्द्र तीर्थयात्रा-गर्न जानुभएको थियो। विभिन्न तीर्थस्थानमा श्रद्धापूर्वक स्नान, दान, पूजा, पाठ आदि धार्मिक कृत्य यथाविधि संपादन गरेर घरमा फर्केपछि अकस्मात् वहाँमा संसारप्रति दृढ वैराग्य उत्पन्न भयो। राज्यका भावी कर्णधार आफ्ना सुयोग्य उत्तराधिकारी पुत्रमा यसरी असामयिक वैराग्य आएको देखेर दशरथ राजालाई मनमा ठूलो चिन्ता भयो। वहाँले कुलगुरु वसिष्ठलाई बोलाएर रामचन्द्रको यथार्थ हालत बताउनु भयो। वसिष्ठले पनि ज्ञानोपदेशको लागि उत्तम अधिकारी पाएर रामलाई यथार्थ बोधगराउने किसिमबाट ब्रह्मविद्याको उपदेश गर्नुभयो।

उत्तमशिष्य हुनुभएका रामचन्द्रले गुरु वसिष्ठबाट पाएको उपदेशामृत श्रद्धाले पानगर्नुभयो। योग्यपात्र भएकाले यथार्थ आत्मस्वरूपको बोध हुन वहाँलाई कत्ति गाह्रो भएन। पहिले वहाँको चित्त व्यग्र एवं परितप्त थियो उपदेशामृत पाएपछि शान्त एवं शीतल बन्यो। कृत्रिम प्रमाता (जीव) भावविचलित हुनुको साथै परमा-नन्दको लाभ भयो। रामचन्द्र जीवन्मुक्त स्थितिमा पुग्नुभो। त्यसपछि शरीर रहेसम्म प्रारब्धपरिचालित कर्म विधिव्यवहार आदि गर्दै

मर्यादितरूपमा लोकयात्राको निर्वाह गर्नुभयो।

अर्जुनलाई निमित्त बनाएर भगवान् श्रीकृष्णबाट भएको गीतोपदेशमा झैं रामलाई निमित्त तुल्याएर गरिएको यो वासिष्ठ उपदेशमा मानवमात्रको कल्याणको पवित्र लक्ष्य राखिएको छ। वासिष्ठज्ञानामृतले परिपूर्ण भएको यस महारामायणको श्रद्धापूर्वक अवलोकन वा श्रवण गरेमा हृदयमा उज्ज्वल ज्ञानालोकको उदय भएर सारा अनर्थकारी भ्रमजाल हटेर जान्छ र मानिस खोजेको कुरा पाएर कृतार्थ बन्छ। यसमा कुनै शंका छैन।

वसिष्ठको भनाइ अनुसार मानिस हो शुद्ध निराकुल चैतन्यस्वरूप। शुद्ध आकाशमा झैं चैतन्यस्वरूपमा राग द्वेष भय आदि विकार केही पनि छैन। बालकहरूले अज्ञानवशात् शुद्ध आकाशमा तल मलिनतादिको आरोप गरे झैं मानिस अनादि अज्ञानले गर्दा शुद्धचैतन्यस्वरूप आफू अधिष्ठानमा चित्तभाव खडा गरेर आफू पनि आफैंद्वारा प्रकाशित त्यस चित्तमा संमिलित हुन्छ र अकर्ता अभोक्ता शुद्ध आफूलाई कर्ता भोक्ता ठान्दछ। त्यसपछि चित्तको संकल्पद्वारा देह, गेह, स्वर्ग र नरक आदि लोक-लोकान्तरको सृष्टि गर्छ, नाना पदपदार्थको विभाजन गर्छ र ती ती वस्तुहरूका साथ आफू पनि तदाकार बन्छ। यसरी कल्पित पदार्थहरूमा तेरो, मेरो, इष्ट, अनिष्ट आदि भावनालाई दृढ तुल्याएर चित्तरूपी जाँतोमा आफू पनि घुमिरहन्छ। यसरी चित्तभ्रमिमा घुमुन्जेलसम्म मानिसलाई कहिल्यै शान्ति हुँदैन। अज्ञानी मानिस त्रिविध तापबाट मुक्तहुन सक्तैन। उ यौटा न यौटा झंझटले घेरिएको हुन्छ। उसलाई सधैं समस्या छ। अज्ञानी मानिसले कहिल्यै सुखको सास फेर्न पाउँदैन। उसको लागि पुत्र, पत्नी, धन, जन, गेह आदि भए पनि नभए पनि तापै छ। यी ताप, दुःख, झंझट र झमेलाबाट मुक्त भएर आरामपूर्वक रहनको लागि वासिष्ठरामायणमा

धेरै धेरै उपाय युक्ति उपाख्यान आदि ज्यादै रोचक एवं मार्मिक ढंगले बताएको छ।

वसिष्ठको भनाइ अनुसार यो सारा संसार— देह, गेह आदि र तपाईं हामीले शरीर आदिलाई लिएर मानिस भनेको पनि सब चित्तको विकार मात्र हो अथवा संकल्प मात्र हो। अतएव मिथ्या भएकोले यो आस्थायोग्य होइन। यस्तो जानेर चित्तलाई चलायमान हुन नदिए चित्त शान्त हुन्छ अर्थात् चित्तभाव हराउँछ। चित्त हराउनासाथ जगद्भावदेखि अतीत आफूमात्र निर्विकार शान्तरूपले आनन्दस्वरूपमा रमाएर रहिरहन्छ। "चित्तमात्रं नरस्तस्मिन् गते शान्तमिदं जगत्।" उ प्र. ६६।३। जन्मनु, मर्नु, घट्नु, बढ्नु, बाल्य, यौवन आदि सब चित्तको खेल मात्र हो। स्वर्ग, नरक आदि कल्पना पनि चित्तको भ्रम मात्र हो, वास्तवमा भएको कुरा होइन।

"जायते बालतामेति यौवनं बार्धकं ततः।
मृतिं स्वर्गञ्च नरकं भ्रमाच्चेतो हि नृत्यति॥"

उ. प्र ६६।५

यहाँ चित्त र मन शब्दलाई पर्यायवाचीरूपमा मानिएको छ। जस्तै "मनः कर्तृ मनो भोक्तृ मानसं विद्धि मानवम्।" उ. प्र. ११५।२४ कर्ता भोक्ता आदि भाव मनको बिलास मात्र हो। त्यसकारण आफूलाई कर्ता भोक्ता भनी नठान, किनकि आफू परिपूर्ण चिदाकाशस्वरूप भएकोले कर्त्ता भोक्ता बन्न मिल्दैन।

चित्तसंग मिलेपछि मानिस सुखी, दुःखी, जन्मने, मर्ने आदि रूपले विकारी बन्छ र आत्यन्तिक शान्ति मिल्दैन। त्यसकारण मानव-कल्याणको अभिलाषा राखेर ज्ञानी वसिष्ठले मानिसलाई चित्तभाव-देखि माथि उठाएर क्रमशः परमानन्दप्राप्ति गराउन हरसंभव प्रयास

गर्नु भएको छ। वहाँ भन्नुहुन्छ– हे राम, संकल्पद्वारा कल्पना-गरिएको हुनाले मन हो असत् (नभएको) वस्तु। केवल भ्रमले मात्र सत् झैं ठानिएको। त्यसो हुनाले मन ग्रहणगर्न लायक होइन। मनलाई अमन नतुल्याइकन अर्थात् मनको नाश नगरिकन आफ्नो सच्चा ब्रह्म-स्वरूप फेला पर्दैन। असत् मन नाशहुने भयो भनेर शोक गर्नुपर्ने कारण केही छैन।

संकल्प्य कल्पितत्वाच्च मनोरूपमसन्मयम्।
असन्मयविनाशे तु कः शोको वद राघव॥"

स्थिति प्र. ३५।५२

मनलाई निरसनगर्ने क्रममा अर्को ठाउँमा भनिएको छ— मन न भएको हुनाले यस्ता कुराको तिमी कल्पना नै नगर। यदि यो कुरालाई नमानेर नभएको मनलाई कल्पना गर्न तिर नै लाग्दछौ भने त्यो असत् मनले तिमीलाई धेरै दुःख दिन्छ र मारिदिन्छ पनि, जस्तो नभएको भूत वेताल आदिको कल्पनाले बालक (अज्ञ, मूर्खमानिस) तर्सिन्छ र मर्छ पनि।

'मनोनास्ति महाबाहो मामुधोपप्रकल्पय।
अनेन कल्पितेन त्वं वेतालेनेव हन्यसे॥"

उ. श. प्र. १४।४३

सर्वत्यागको विषयमा भनिएको छ— यो सारा जगत् चित्तको नै विलास भएकोले चित्तत्याग नभएसम्म सर्वत्याग बन्न सक्तैन। सर्व-त्याग नभएसम्म आत्मानन्दको यथार्थ अनुभव हुँदैन। यो प्रसंगमा कचको उपाख्यान ज्यादै मार्मिक छ। बृहस्पतिका पुत्र कचले 'त्याग-बाट शान्ति मिल्दछ' भन्ने कुरा आफ्नै पिताजीबाट सुनेकाले घर छोडेर जंगलतिर गएर धेरै खोजगरे उनलाई शान्ति मिलेन। रूखका

बोक्राका लुगा लाएका थिए त्यो पनि त्यागे, शान्ति मिलेन। आखिर खानु, पिउनु आदि पनि त्यागेर रूखमुनि बस्न थाले, तैपनि शान्ति मिलेन। त्यसैबेला उनका पिता बृहस्पति त्यहाँ अकस्मात् आइपुगे। पितालाई उनले सब कुरा त्यागगर्दा पनि शान्ति नमिलेको कुरा बताए। बृहस्पतिले भने— हे पुत्र ! तिमीले बाहिरका सबै कुरा त्याग्यौ तर चित्तलाई त्याग्न सकेका छैनौ। त्यसैले तिमीलाई शान्ति मिलेन। सर्वत्याग भनेको चित्तत्याग हो। त्यसकारण चित्तलाई त्यागगर, अनिमात्र आत्मालोक प्राप्तगरेर तृप्तहुन सक्छौ। "चित्तं सर्वमिदं प्रोक्तं तत्त्यागात्पुत्र राजसे।" पिताको उपदेश अनुसार चित्तत्याग गरेपछि मात्र कचलाई शान्ति मिल्यो। उनी अप्रतिबद्ध आत्मालोक पाएर परमानन्दमा मग्न भए। चित्त मिथ्यावस्तु हुनाले त्यसलाई सत्य मानुन्जेल मानिसलाई आत्मज्ञान प्राप्तहुँदैन। आत्मज्ञानको प्रतिबन्ध हो चित्तभावलाई खडा गरिराख्नु।

सैद्धान्तिकरूपमा यो कुरा बिलकुल ठीक हो। यसरी कुरा बुझेर पनि किन चित्त चञ्चल भइरहन्छ ? यसको कारण हो वासनाको सम्यक्क्षय नहुनु। वासनाले गर्दा मन फुरिरहन्छ। मोटामोटीरूपमा भोगादिको इच्छा नभए तापनि भित्र कता हो कता सूक्ष्मरूपले भोग-वासना अंकुरित हुन्छ। भोगवासना रहेसम्म आवरण हट्न सक्तैन। त्यसैले हो पूर्णशान्ति प्राप्त नभएको। भोगवासनाले गर्दा मिथ्या-बन्धन खडा हुन जान्छ। यसले स्वरूपलाई ढाकिदिन्छ। वासनाको क्षय भए मात्र बन्धन शिथिल हुन्छ।

"भोग वासनया याति बन्धो दार्ढ्यमवस्तुजः।
तयोपशान्तया याति बन्धो जगति तानवम्॥"

मु. व्य. प्र २।४

त्यसो हुनाले वासनानाशको लागि यत्न गर्नु आवश्यक छ। कल्प-

नामसूत यो जगत मरुभूमिको जल झैं देखिए तापनि मिथ्या भएकोले आस्थायोग्य होइन भनी विवेकपूर्वक जागतिक पदार्थमा वैराग्य बढाउँदै गर्नु र विचारपूर्वक बुद्धिद्वारा आत्मचिन्तन गरिराख्नु वासना-क्षयको लागि उत्तम उपाय हो; किनकि आत्मचिन्तनद्वारा बुद्धि आत्माकारित हुन्छ। अभ्यास गर्दै गएमा यसबाट दृढ आत्मवासना जागृत भएर आउँछ, उता जगद्वासना निर्बल भएर क्षीणहुँदै जान्छ। यसरी बलिष्ठ आत्मवासनाद्वारा दुर्बल जगद्वासनालाई निरसन गर्न सकिन्छ। जगद्वासनाको क्षय भएपछि मोक्ष सिद्ध भइहाल्छ। "वासना तानवं राम मोक्ष इत्युच्यते बुधैः।" मु. व्य. प्र. २।५

विश्वमा यत्रो सृष्टिचमत्कार देखिन्छ। कसरी यो मिथ्या हुन सक्ला र यसलाई त्याग गरेर केवल ब्रह्मस्वरूपमा अवस्थिति संभव होला ? हो आँखा भएसम्म यो सृष्टिचमत्कार देखिन्छ तर यसलाई स्वप्न समान मिथ्या भनेर जानेपछि आफ्नो ब्राह्मीस्थिति संभव हुन्छ। शास्त्रमा धेरै सृष्टिका कुराहरू देखाइएका छन् तर यो हो अपवाद (परिहार) को लागि। वेदान्तशास्त्रमा भनिएको छ कि— "अध्यारोपापवादाभ्यां निष्प्रपञ्चं प्रपञ्च्यते।" सारा सृष्टि अधिष्ठान आत्मामा आरोपित हुन्छ तर मिथ्या भएकोले शास्त्र, युक्ति र प्रमाण-द्वारा यसको अपवाद हुन्छ र सर्पबाधित भएर रज्जुमात्र अवशिष्ट रहे झैं अधिष्ठान आत्मामात्र बाँकि रहन्छ। यो कुरा विद्यारण्य-स्वामीले पनि पञ्चदशीमा स्पष्ट गरी बताउनु भएको छ। "जीवभाव-जगद्भावबाधे स्वात्मैव शिष्यते।" जीव र जगतको बाध गरेर ज्ञानारूढ भएपछि के जगत् देखिंदै देखिंदैनत ? देखिन्छ भने कसरी बाध भयो ? यस बारेमा पञ्चदशीकारले भन्नुभएको छ— "नाप्रतीतिस्तयोर्बाधः किन्तु मिथ्यात्वनिश्चयः।" देखिए तापनि जीवभाव र जगद्भावलाई मिथ्या भनी निश्चयगर्नुको नाम हो बाध। यही कुरा उत्पत्तिप्रकरणको सुरुमा नै वसिष्ठले स्पष्ट गर्नुभएको छ। "स्वप्नवत्

पश्यति जगत् चिन्नभो देहवित् स्वयम् ।" जसले जगत्लाई स्वप्न समान मिथ्या भनेर निश्चयपूर्वक जानेको छ, त्यसले चिदाकाशरूप आफ्नो स्वरूप स्पष्ट बुझिहाल्छ। यसरी कुरा बुझेर अनुभव बढाउँदै लगेमा ब्राह्मीस्थिति असंभव हुँदैन।

अझ सूक्ष्म कुरा यो छ कि इष्ट अनिष्ट पदार्थको प्राप्ति वा निरसनको लागि इच्छा गर्नु नै हो बन्धनको मूलकारण। योगवासिष्ठमा "इच्छामात्रमविद्येह" भनेर इच्छालाई नै अविद्याको संज्ञा दिइएको छ। भगवद्गीतामा पनि 'काम एष क्रोध एष...... विद्धयेनमिह वैरिणम् ; जहि शत्रुं महाबाहो कामरूपं दुरासदम्" भनेर कामनालाई अनर्थको मूल महाशत्रु ठनेर त्याग गर्ने उपदेश दिएको छ। इच्छा नगरे पनि सुख दुःख आइलाग्छन् के गर्ने त नि भन्ने कुराको पनि समाधान गरिएको छ— प्रारब्धवशात् प्राप्त सुख दु:खादिको भोगविना परिहार नहुने हुनाले ज्ञानीले पनि वर्तमान शरीर रहेसम्म प्रारब्धपरिचालित सुख दु खको भोग गर्नैपर्दछ। भोग भए तापनि ज्ञानीको त्यसमा कत्तिपनि ममता वा आसक्ति रहँदैन। यो मायिक सुख दुःख हो भन्ने जानेर ज्ञानी स्वरूपस्थितिबाट विचलित हुँदैन। पण्डित (ज्ञानीमानिस) प्राप्त भोगको परिहार गर्दैन र अप्राप्त भोगको इच्छा पनि गर्दैन।

"अनागतानां भोगानामवाञ्छनमकृत्रिमम्।
आगतानां च संभोग इति पण्डितलक्षणम् ॥"

स्थिति प्र. ४६।८

मायाको प्रसंगमा पनि वसिष्ठले चर्चागर्नुभएको छ। शुद्धचैतन्य ब्रह्मस्वरूपदेखि भिन्न कुनै पदार्थ वास्तवमा छैन। खालि माया किंवा अविद्याले गर्दा नित्य अपरिच्छिन्न स्वप्रकाश आफ्नो वास्तवस्वरूपको याद नभएकोले मात्र यो काल्पनिक पदपदार्थमा सत्यताबुद्धि गरेर

मानिस दुःखको भुमरीमा परिरहेको छ। यो सिद्धान्तमा आंसिक आपत्ति देखाउँदै कसैले भन्ला कि यदि त्यस्तो नित्यसिद्ध स्वप्रकाश आत्मवस्तु भए त्यसमा कसरी आवरण खडा हुन्छ त ? माया किंवा अविद्या त्यहाँ कसरी खडा हुनगयो ? यस बारेमा पनि वसिष्ठले बडो मार्मिक उत्तर दिनुभएको छ— 'संसार' नाम भएकी मायाको अनुसन्धान गरेर कहिल्यै टुङ्गो लगाउन सकिंदैन। संसार नामक मायाको केन्द्र चित्त भएकोले चित्तलाई वशगर्न सकेमात्र मायालाई नाशगर्न सकिन्छ, नत्र अरू उपायबाट यसको नाश हुँदैन।

"राशापर्यवसानेयं माया संसृतिनामिका।
आत्मचित्तजयेनैव क्षयमायाति नान्यथा॥

उ. श प्र. ४४।१

अस्य संसाररूपस्य मायाचक्रस्य राघव।
चित्तं विद्धि महानाभिं भ्रमतो भ्रमदायिनः॥"

उ. श प्र ५०।६

गीतामा पनि भनिएको छ कि मायाको खोज गरेर टुङ्गो-लाउन सकिंदैन "न रूपमस्येह तथोपलभ्यते नान्तो न चादिर्न च संप्रतिष्ठा।" त्यसकारण यो माया कहाँबाट कसरी आयो भन्नेतिर विचारगर्नु ठीक छैन, बरू यसलाई कसरी हटाऊँ भन्नेतिरमात्र विचारगर्नु आवश्यक छ।

"कुतो जातेयमिति ते राम मास्तु विचारणा।
इमां कथमहं हन्मीत्येषा तेऽस्तु विचारणा॥"

स्थिति प्र. ४१।३२

माया भन्ने वस्तु यस्तो गजबको रहेछ। यदि ज्ञानोत्तरकालमा

माया रहँदैन भने वहाँ गएर बस्छे त ? यसको जवाफ पनि मार्मिक ढङ्गले दिएको छ— जस्तो सूर्योदय भएपछि अन्धकार कहाँ गएर बस्छ ? कतै गएको पनि देखिंदैन । जस्तो प्रकाशको अगाडि अन्धकार टिक्न सक्तैन, त्यसै विलाएर जान्छ । त्यस्तै विवेकज्ञानको अभ्युदय भएपछि माया त्यसै विलाएर जान्छ ।

"यथोदिते दिनकरे क्वापि याति तमस्विनी ।
तथा विवेकेऽभ्युदिते क्वाप्यविद्या विलीयते ॥"

उ प्र. ११४।६

ज्ञानीको लोकस्थिति बारेमा वसिष्ठले उपदेश गर्नुभएको छ कि ज्ञानी महात्माहरूकोलागि लोकमा हेयोपादेयता केही पनि बाँकि नरहने भएकोले वहाँहरूमा लौकिक व्यवहारादिको खास अपेक्षा त रहँदैन । तथापि लोकमर्यादालाई सुव्यवस्थित राख्नको लागि ज्ञानीहरूले पनि समुचित आचरणमा रहनु आवश्यक छ भन्ने आशय राखेर रामलाई वसिष्ठले भन्नुभएको छ— हे राम ! भित्र संपूर्ण एषणालाई त्याग गरेर, वीतराग एवं वासनारहित भएर बस; बाहिर भने यथोचित सबै आचारको परिपालनगर्दै लोकयात्रा निर्वाहगर । बाहिर तडक भडक खूब देखाऊ, तर हृदयमा चाहीं कुनै संरंभ नलेऊ । बाहिर अरूको दृष्टिमा कर्ता भएर पनि भित्रचाहीं सधैं अकर्ता भएर लोकयात्रा निर्वाह गर ।

"अन्तः संत्यक्तसर्वाशो वीतरागो विवासनः ।
बहिः सर्वसमाचारो लोके विहर राघव ॥
बहिः कृत्रिमसंरंभो हृदि संरंभवर्जितः ।
कर्ता बहिरकर्तान्तर्लोके विहर राघव ॥"

उ. श प्र. १८।१८,२२

यस्तो रहस्यभूत पवित्र कुरा संसारलोलुप अश्रद्धालु मूर्खलाई बताउनु हुँदैन भनी वसिष्ठले अनधिकारीलाई ज्ञानोपदेश गर्न मनाही गर्नुभएको छ।

"अपरीक्ष्य च यः शिष्यं प्रशास्त्यतिविमूढधीः।
स एव नरकं याति यावदाभूतसंप्लवम्॥"

स्थिति प्र. ३६।२६

त्यसकारण जसको बुद्धि निर्मल छ जो संसारको तुच्छभोगदेखि विरक्त भएको छ, त्यस्ता व्यक्तिलाईमात्र यो ब्रह्मविद्याको उपदेश गर्नु योग्य छ। अनधिकारीलाई उत्तम कुरा बताएर फाइदा पनि छैन। त्यस्तो व्यक्ति त यस्तो उत्तम उपदेशलाई ग्रहणगर्नुको बदला द्वेषगर्न थाल्दछ। त्यसकारण शिष्यको परीक्षा गरेर मात्र उपदेश दिनुपर्छ।

"प्रबुद्धबुद्धेः प्रक्षीणभोगेच्छस्य निराशिषः।
नास्त्यविद्यामलमिति युक्तं वक्तुं महात्मनः॥"

स्थिति प्र. ३६।२४

उपदेशको क्रमको बारेमा पनि वसिष्ठले स्पष्ट भन्नुभएको छ — पहिले शमदमादिको उपदेशद्वारा शिष्यलाई शोधन गर्नुपर्छ। अर्थात् शिष्यमा योग्यता संपादनगराउनु पर्छ, अनिमात्र यथार्थ ब्रह्मविद्याको उपदेश दिनुपर्छ।

"आदौ शमदमप्रायैर्गुणैः शिष्यं विशोधयेत्।
पश्चात्सर्वमिदं ब्रह्म शुद्धस्त्वमिति बोधयेत्॥"

स्थिति प्र. ३६।२३

योगवासिष्ठमा विभिन्नप्रकारले आत्मनिरूपण भएको छ। कहीं आत्मालाई चिदाकाशको रूपमा वर्णन गरिएको छ। चिदाकाश

हो— आत्माको वास्तव स्वरूप। त्यसमा स्पन्दन (स्फुरण) भएपछि चित्ताकाश खडाहुन्छ। चित्ताकाशको दृढतावशले भूताकाश खडा हुन्छ। वास्तवमा भूताकाश चित्ताकाश हो र चित्ताकाश चिदाकाशमात्र हो। चैतन्यमा स्फुरण भए पनि नभए पनि त्यो चैतन्यमात्र हो। समुद्रमा तरंग उठे पनि नउठे पनि त्यो पानी नै हो। सुनमा बुट्टा भए पनि नभए पनि त्यो सुनमात्र हो। जान्नेले सुनमा सुनबुद्धिमात्र गर्छ नजान्नेलेमात्र बुट्टामा दृष्टि राख्छ। त्यस्तै अज्ञले चैतन्यमा चित्तजगत् आदि देख्छ। ज्ञानीको निति चैतन्यदेखि भिन्न केही पनि छैन। "सर्वं खल्विदं ब्रह्म, नेह नानास्ति किञ्चन" यो श्रुति अनुसार पनि यो सारा चैतन्यस्वरूप ब्रह्ममात्र हो, यहाँ नाना (अनेकता) भन्ने कुरा छैन। यही कुरा शुक्राचार्यले बलिराजालाई संक्षेपमा बताउनु भएको छ।

"चिदिहास्ति हि चिन्मात्रमिदं चिन्मयमेव च।
चित्त्वं चिदहमेते च लोकाश्चिदिति संग्रहः॥"

उ. श. प्र. २६।११

त्यसपछि शुक्राचार्यले भन्नुभयो— सार कुरा यही हो। श्रद्धा र विवेकद्वारा मैले भनेको कुरालाई निश्चयपूर्वक ग्रहण गर्‍यौ भने सारा चैतन्यमात्र रहेछ भन्ने जानेर आफ्नो सनातन स्वप्रकाश चैतन्यस्वरूपलाई प्राप्तगर्न सक्छौ। तर यसमा श्रद्धा नगरेर लम्बाचौडा व्याख्यानतिर लाग्नु चाहीं खरानीमा हवनगर्नु झैं व्यर्थ हुन्छ।

"भव्योऽसि चेत्तदेतस्मात्सर्वमाप्नोषि निश्चयात्।
नोचेत् तद् बह्वपि प्रोक्तं त्वयि भस्मनि हूयते॥"

उ. श. प्र. २६।१२

यही कुरालाई कहीं संवित्, संवेदन र संवेद्य भनेर वर्णन गरिएको छ। ज्ञानस्वरूप शुद्धचैतन्य ब्रह्म हो संवित्। त्यसमा स्फुरण-

वशात् चित्त किंवा ईश्वरभाव खडा हुन्छ, यसलाई संवेदन भनिएको छ। संवेदनको दृढताले संवेद्य (जगद्भाव) खडा हुन्छ। यहाँ पनि वास्तवमा हो संवित्मात्र। केवल स्वरूपको अज्ञानले गर्दा संवेदन र संवेद्यभाव खडाहुन्छ। संवेदन र संवेद्य अज्ञानकल्पित कुरा हुनाले त्यतातिर ध्यान-जानु ठीक भएन। यसैले ठाउँ ठाउँमा "संविन्मात्रपरो भव" अरू कुरा छोडेर संवित्को मात्र याद गर भनी रामचन्द्रलाई संझाइएको छ।

योगाभ्यासीहरू संवेदनभावमा अडेका हुन्छन्। संवेदन अन्त-वाहक भएको हुनाले त्यसमा अडेका योगाभ्यासीहरूमा धेरै चमत्कार देखिन्छन्। तर यस प्रसंगमा लीलाको धेरै लामो उपाख्यान छ। लीला पतिव्रता पुण्यात्मा नारी थिइन्। योगाभ्यासद्वारा उनी चित्ताकाश किंवा अन्तवाहक शरीरमा अड्नसक्ने भएकी थिइन्। त्यसैले उनी इच्छानुसार विदूरथको लोकमा पुग्न समेत समर्थ भइन्। इष्टदेवी सरस्वतीको प्रसादबाट वासनाक्षय भएर ज्ञान खुलेपछिमात्र उनी प्रबुद्ध भइन्।

ज्ञान प्राप्तगर्ने अवधि पनि छ कि? यति समय अभ्यास गरे-पछि ज्ञान प्राप्तहुन्छ भनी खास रूपमा अवधि त तोकिएको छैन। तर बुद्धिको स्थितिबाट ढिलोचाँडो हुनसक्छ। शुद्धबुद्धि भएको मानिस छ भने त्यसले शास्त्र र गुरुको वचनामृतलाई श्रद्धाले ग्रहण गरिहाल्छ। गुरु र शास्त्रको वचनलाई ग्रहणगर्नु नै हो यथार्थ आत्मबोध। त्यस्ता निर्मलबुद्धि भएका मानिसलाई चाँडै नै ज्ञान हुनसक्छ। "तद्दिनैरेव नो मासैः।" जो गुरु र शास्त्रको वचनलाई श्रद्धाले ग्रहणगर्न सक्तैन। वासनाक्षीण नभएको हुनाले सुनेर पनि बोध हुँदैन। त्यस्ता व्यक्तिको लागि भने धेरै जन्म लगाएर दीर्घकालको परिपाक भएपछि मात्र बोध हुन्छ। "अनेकजन्मसंसिद्धस्ततो याति परां गतिम्।" भनेको त्यस्तै व्यक्तिको लागि हो। त्यसैले विहङ्गममार्ग र पिपीलिकामार्ग भनी

दुई मार्ग बताएको छ। उत्तम अधिकारी विहङ्गममार्गले चाँडै नै लक्ष्यमा पुगिहाल्छ। मध्यम अथवा मन्द अधिकारी पिपीलिकामार्गद्वारा धेरै समय लगाएर मात्र निर्दिष्ट स्थानमा पुग्न सक्तछ।

चित्तभाव खडा भएपछि त्यतैबाट त्रिपुटी बन्छ र आफू प्रमाता जीव बनेर जगत्को जंजालमा जकडिन्छ। त्यसोहुनाले चित्तनिरसनको लागि यहाँ ज्यादै प्रयास गरिएको छ। चित्तनाशको लागि मुख्यरूपले दुई मार्ग देखाएको छ— योग र ज्ञान। योगद्वारा चित्त निरोधगर्ने अभ्यासगर्दै गएमा क्रमशः चित्त क्षीण हुँदै जान्छ र अन्तमा अभ्यासको बलले चित्तको अभाव बनिहाल्छ। अर्को उपाय हो सम्यग्ज्ञान। यथार्थरूपमा आत्मस्वरूपको बोध भएपछि मिथ्या भएकोले चित्तभाव विनष्ट भइहाल्छ।

"द्वौ क्रमौ चित्तनाशाय योगो ज्ञानं च राघव।
योगश्चित्तनिरोधः स्याद् ज्ञानं सम्यगवेक्षणम्॥"

त्यसवेला चित्त अचित्त बन्छ अथवा चित्त चैतन्यरूप हुन्छ, जे भने पनि कुरा एकै हो।

उपासनाको विषयमा संपूर्ण वेदान्तशास्त्रमा अभेदोपासनालाई नै मुख्य मानेको छ। अभेदोपासनाले बुद्धि सूक्ष्म र तीक्ष्ण हुन्छ। सूक्ष्म बुद्धिद्वारा नै आत्मसाक्षात्कार संभव हुन्छ।

"दृश्यते त्वग्रया बुध्या सूक्ष्मया सूक्ष्मदर्शिभिः।"
— कठोपनिषद्।

भगवान् सर्वव्यापक भएकाले सबैको हृदयमा प्रत्यग्रूपले रहनुभएको छ। प्रत्यक् परमेश्वरलाई नै साक्षी भनेको छ। आफ्नो आत्मस्वरूपले रहनु भएका ईश्वरलाई नबुझेर भेददृष्टि राख्नेहरू बाह्यरूपमा

ईश्वरको उपासना गर्छन्। मुमुक्षु पुरुष अभेददृष्टि राख्तछ र ईश्वरलाई आत्मसात् गरेर आत्मबुद्धिले अभेदोपासना गर्छ। श्रीमद्भागवतमा पनि 'तस्मात् सर्वात्मना राजन् हृदिस्थं कुरु केशवम्' भनेर अभेदोपासना गर्ने नै सुझाव दिइएको छ। यो उच्चकोटीको उपासना हो।

सांसारिक कामनाले कलुषित हृदय भएको कामी पुरुष ईश्वरलाई आफूदेखि भिन्न ठानेर उपासना गर्छ र मायिक ईश्वरबाट मायिक फल प्राप्तगर्छ। मुमुक्षु पुरुष मायिक सांसारिक फलको कामना नराख्ने हुनाले निर्धक्कसंग अभेदोपासना गर्छ र निरतिशय आनन्द प्राप्तगर्दछ। त्यसकारण वसिष्ठले बुद्धिमान् मुमुक्षुलाई अभेदोपासना गर्ने सल्लाहदिँदै भन्नुभएको छ— आत्मा र विष्णुमा भिन्नता छैन। विष्णु नै आत्मा हो र आत्मा नै विष्णु हुनुहुन्छ।

"आत्मा नारायणश्चैव न भिन्नस्तिलतैलवत्।
यो हि विष्णुः स एवात्मा यो ह्यात्मासौ जनार्दनः॥"

उ. श प्र. ४३।५

आत्मस्थितिमा पुग्नको लागि योगवासिष्ठमा विशेषगरेर विवेक विचार र अनुभवमा जोड दिएको छ। चित्त, देह, गेह आदि अनात्म, क्षणपरिणामी, मिथ्यावस्तु भएकाले र आफूचाहिँ यिनीहरूको भाव अभावलाई प्रकाश गरेर सदा रहिरहने नित्यसिद्ध स्वप्रकाशवस्तु हुनाले यी अनात्मवस्तु म हुनसक्तिन र यी मेरा पनि हुन सक्तैनन् भनेर विवेक भएपछि यिनमा अनास्थाबुद्धि (वैराग्य) उत्पन्न भइहाल्छ। यसबाट चित्तशान्त हुन्छ र बुद्धि एकाग्र हुन्छ। अनि विचारद्वारा बुद्धि आत्माकारित हुन्छ अर्थात् आत्मासंग जुटिरहन्छ। बुद्धि आत्मासंग जुटेको न जुटेको आफूलाई थाहा भइहाल्छ। अनि विचारद्वारा फेरि तत्काल जुटिहाल्छ। यसरी विवेक र विचारको बलले आत्मानुभव बढाउँदै लगेमा बुद्धि अखण्डरूपले आत्मामा प्रवेश गरिहाल्छ। अखण्ड

बुद्धिद्वारा आत्मामा प्रवेश गरेर अखण्डचैतन्य आत्मस्वरूप बन्नुको नाम हो यथार्थ आत्मबोध वा ब्रह्मस्वरूपता ।

ब्रह्मस्वरूप प्राप्तगरेपछि उसको लागि कुनै कृत्यशेष रहँदैन । उसले गर्नुपर्ने वा पाउनुपर्ने कुरा केही पनि बाँकि रहँदैन । उ सदाको लागि परिपूर्ण रहन्छ । श्रुतिमा पनि भनिएको छ कि ब्रह्मज्ञानी ब्रह्मस्वरूप नै भइहाल्छ—'ब्रह्मविद् ब्रह्मैव भवति ।" ब्रह्मप्राप्ति भन्दा ठूलो कुरा केही पनि छैन । "सा काष्ठा सा परागतिः ।" हाम्रो सनातनधर्मको अन्तिम लक्ष्य पनि यही हो । यही लक्ष्यमा पुग्नको लागि हाम्रा पूर्वज ऋषि महर्षिहरूले कर्म उपासना र आत्मानुसन्धानका मार्गहरू देखाउनु भएको छ । वहाँहरूको उपदेशलाई शुद्धहृदयले ग्रहणगरेमा अवश्य हामी पनि त्यस पवित्र लक्ष्यमा पुग्नसक्नेछौं । ॐ तत्सत् ।



# महाकवि देवकोटाका कृतिहरूमा अध्यात्म-दर्शन

— प्रा. शिवगोपाल रिसाल

कविताको आत्मा नै दर्शन हो । त्यसैले दर्शन बिनाका कुनै पनि काव्यात्मक कृतिमा सजीवता हुँदैन भन्नु अनुपयुक्त ठहर्दैन । अरू अध्यात्मदर्शनको कति कारणले झण्डै मूलथलो मान्नखोजिएको ऋषिहरूको तपोभूमि, जनकजस्ता ज्ञानीहरूको ज्ञानभूमि, पशुपतिनाथको राज्य, हिमालयको देश नेपालका सबै जसो कविहरू कममा पनि पचीस प्रतिशत दार्शनिक छन् ।

नेपाली साहित्यको आदिकालदेखि नै जति साहित्यस्रष्टाहरू देखापरे तिनमा इन्दिरस, विद्यारण्यकेशरी, रघुनाथ, वसन्तदेखि लिएर भानुभक्त, मोतीराम, लेखनाथ, सोमनाथ, कुलचन्द्र, धरणीधर मात्र होइनन् वालकृष्ण, भीमनीधि माधवप्रसाद, लक्ष्मीप्रसाद आदि निसन्देह अध्यात्मदर्शनकै धरातलमा उभिएका छन् । त्यसमा पनि महाकवि देवकोटाको सबभन्दा रुचिका विषयहरू मध्येको एक नै अध्यात्मदर्शन थियो भन्ने कुरा उनका रचनाहरूबाट भन्न सकिन्छ । वास्तवमा के कुरा चाहिं पक्कै साँचो हो भने संसारका जुनसुकै प्रसिद्ध लेखक या कवि दार्शनिक नै थिए र छन् पनि । कविता र दर्शन यति नजिक छन् जति कल्पना र विचार किंवा हृदय र मस्तिष्क । झन् गहिरिएर विवेचना गर्ने हो भने कविता नै दर्शन हो अनि दर्शन नै कविता हो भन्नु तर्क र यथार्थ विरुद्ध हुँदैन । दृष्टान्तको लागि लिन सकिन्छ— आदिकवि वाल्मीकिरचित योगवाशिष्ठ महारामायण उत्कृष्ट काव्य पनि हो, अनि अद्वैतवेदान्तदर्शनको सर्वोपरि ग्रन्थ । अब कुन चाहिं

ढुंगोमा पुग्नसकिन्छ भने दर्शन र कविता अथवा दार्शनिक र कवि एकै शरीरका दुइ आँखा हुन् किंवा एकै नदीका दुइ किनारा हुन्, अथवा एकै अभिलेखका दुइ शीर्षक हुन्। मान्छेभित्र लुकिरहेका कवि र दार्शनिक एकै चोटि जन्मेका हुन्, त्यसैले यिनमा जेठा कान्छाको नालीवेलीगर्नु निरर्थक सिद्धहुन्छ। जसरी मस्तिष्कबाट दर्शन जन्म्यो त्यसरी नै हृदयबाट कविता जन्म्यो। त्यसो भन्दैमा दर्शनको हृदयसंग र कविताको मस्तिष्कसंग सम्बन्धै छैन भन्नखोजेको चाहिं पक्कै होइन।

आजसम्मको मानवइतिहासको अनुसन्धान गर्दा मानव-विचार र भावनाको कहिल्यै विरोध भएको पाइएको छैन। यसबाट के कुरो भन्न खोजेको हो भने काव्य र दर्शनको कहिल्यै पनि पारस्परिक विरोध र भै-झगड़ा थिएन र छैन पनि। त्यसैले कवि र दार्शनिक दुइजना मान्छे होइनन्।

महाकवि देवकोटालाई दार्शनिक देवकोटा, ईश्वरभक्त, अध्यात्मवादी, आत्मपूजक देवकोटा भन्नुमा पाप लाग्दैन, अझ झन् धर्म नै बढ्ने छ। यसको कारण र बलियो प्रमाण हो—सं. १९७६ मा जब देवकोटाको १० वर्षको मात्र उमेर भएको थियो त्यतिवेला उनबाट अचानक एउटा कविता निस्क्यो -अध्यात्मदर्शनलाई बोकेर। अनि हामी भन्छौं देवकोटा भित्रको कवि जन्म्यो, दार्शनिक प्रकटभयो—

"घनघोर दुःखसागर संसार जान भाई,
नगरे घमण्ड कहिले मर्नु छ हामीलाई।

वाल्मीकि, भानुभक्त, तुलसीदास आदि कविहरूभित्र रहेको कवि र दार्शनिक पनि यसैगरी एकैचोटि जन्मेको पाइन्छ। माथिका दुइ पंक्ति भित्र जति कविता छ त्यत्ति नै दर्शन (अध्यात्म) पनि छ। यसर्थ देवकोटालाई महाकवि मात्र भनेर उनीप्रतिको हाम्रो कर्तव्य पूरा-हुँदैन, उनलाई महादार्शनिक देवकोटा पनि भन्नुपर्छ। दश वर्षको उमे-

रमा जन्मेका कवि एवं दार्शनिक देवकोटाले पचास वर्षको उमेरमा यो पार्थिवशरीर छोडनुभन्दा दश दिन अगाडि ( सं २०१६ भाद्र १६ गते ) उनको सबभन्दा पछिल्लो नेपाली कविताद्वारा नै आफ्नू कवित्व र दार्शनिकतालाई निकै माथि पुऱ्याएर टुंग्याएका छन्—

"संसार रूपी सुख स्वर्ग भित्र
रमें रमाएँ लिइ भित्र चित्र
... ... ... ... ...
रहेछ संसार निशा समान
आएन ज्यूँदै रहँदा नि ज्ञान
आखीर श्रीकृष्ण रहेछ एक
न भक्ति भो, ज्ञान, न भो विवेक
... ... ... ... ...
संस्कार आफ्नो सब नै गुमाएँ
म शुन्यमा शुन्य सरी विलाएँ
जन्में म यो स्वर्ग विषे पलाएँ
आखीर भै खाक त्यसै विलाएँ ।"[१]

अध्यात्म–दर्शनको आदिम–श्रोत अपौरुषेय वेदलाई आदिकाव्य मान्नुबाट र वैदिक ऋृषिहरूलाई दार्शनिकको साथै कवि मान्नु नौलो कुरो होइन। माथिका उद्धरणहरूबाट देवकोटाभित्र रहेको कवित्व प्रतिभा एवं दार्शनिकसत्यताले उनको जीवनभरका रचनाहरूको मोटामोटी परिचय दिइरहेका छन्। दर्शन सम्बन्धी एक लेखमा देवकोटा भन्दछन्—

"मेरो आफ्नो क्षेत्र त थियो कविता र साहित्य, तर कुनै कवि या साहित्यिक पनि केही अंशमा दार्शनिक पनि हुन्छ। कवि आफू बराबर

१ महाकवि देवकोटा नित्यराज, पृष्ठ १९७–१९८

दार्शनिकमा पाउँछ र कुनै समयमा दार्शनिक पनि आफूभित्र कवि ।"[१]

महाकवि देवकोटालाई कतिले कति दृष्टिकोणबाट हेरे। प्रकृतिका पूजारी भन्दछन् त कोही मानवधर्मका समर्थक; अनि कोही समाज-सेवीको तक्मा लगाइदिन्छन्, कोही सत्यका पक्षपाती भन्दै गुण-गाउँछन्; अनि कोही मूर्तिपूजाका विरोधी भन्न पनि हिच्किचाउँदैनन् त कोही आस्तिकदर्शनका समर्थक भनी मुक्तकण्ठले प्रशंसागर्दछन्। प्रसिद्धदार्शनिक एवं लेखक श्रीचूडानाथ भट्टराय भन्दछन्—

"यसरी उनले स्पष्ट शब्दले घोषित गर्दा पनि यिनी के हुन् भन्दछन् भने त के भनेर सम्झाउनु खोइ ! यस आस्तिकतामा विश्वास छ। दृढधारणा छ आखिर जीवनदर्शन र त्यही आस्था लिएर मृत्यु समेत छ। त्यसोहुँदा यिनी पूर्ण आस्तिकदर्शनका पक्षपाती थिए। यिनले आफ्नो पक्षसमर्थन गर्नलाई अनङ्गको मुखबाट बोले। कविता‌मा समेत यात्रीलाई बाटो देखाएर मार्ग बताए।"[२]

अध्यात्मदर्शन शाश्वत र सनातन हो। पूर्वजन्म, ईश्वर, आत्मा मान्दै ज्ञानद्वारा मोक्षको लक्ष्यराख्ने हिन्दूहरू अध्यात्मदर्शनका अनुयायी हुन्। यिनीहरूको मूलशास्त्र हो—अपौरुषेय वेद। विश्वको एकमात्र हिन्दू अधिराज्य, पाशुपतक्षेत्र, हिमवत्खण्ड, पार्वती र सीताको माइतीघर 'सुन्दर, शान्त, विशाल'[३] नेपालको सनातनधर्मावलम्बी पवित्र ब्राह्मणकुलमा जन्मेका, पण्डितका छोरा देवकोटा (लक्ष्मी-प्रसाद) मा जन्मजात संस्कारवशात नै अध्यात्मदर्शनको गहिरो प्रभाव थियो भन्नु अनुपयुक्त देखिंदैन। त्यसैले उनले दश वर्षको उमेरमा नै संसारको निःसारता एवं दुःखैदुःखले भरिएको अवस्था देखे, जीवनभर दुःखले भरिएको व्यथाको कथा लेखे र दार्शनिक विचार पोखे।

---

१ महाकवि देवकोटा–नित्यराज, पृष्ठ १६४

२ भानु–महाकवि देवकोटा विशेषाङ्क–पृष्ठ–१८१।

३ के नेपाल सानो छ ?–महाकवि देवकोटा।

अध्यात्म-दर्शनमा महाकवि देवकोटा कसरी चुर्लुम्म डुबेका-छन् भन्ने कुरा त उनका केही रचनाहरूलाई राम्ररी केलाउँदा छर्लङ्गै देखापर्छन्—

'भिखारी' कवितामा गरीबको अनुहारमा नै ईश्वरको साक्षात्कारगर्ने देवकोटा भन्छन्—

"दुःखको दिलमा ईश्वर बोल्दछ, अधर अनन्त उघारी।
माग्दछ भिक्षा ईश्वर मेरो, आँगनका एक भिखारी !"

आफ्नू हृदयभित्र रहेको 'अन्तरात्मद्दक्'[1] स्वरूप भगवान ईश्वरलाई नदेखेर ईश्वर खोज्दै मन्दिर, मन्दिर चाहार्ने तीर्थयात्रीलाई सम्बोधनगर्दै देवकोटा भन्छन्—

'मन्दिर आफू अपार'

दार्शनिक देवकोटाले यतिमा सन्तुष्ट नभएर फेरि भने—

"मनको सुन्दर सिंहासनमा जगदीश्वरको राज !"

ईश्वर खोज्न बहिर्मुखीहुनु निरर्थक कुरो हो। अतः वास्तवमा ईश्वर आफू भित्रै छ भन्ने हाम्रो वेदान्तदर्शनको मर्म बुझेका दार्शनिक कवि ईश्वरलाई आफूभित्र भएको यथार्थ अनुभवगर्दै भन्दछन्—

"भित्र छ ईश्वर बाहिर आँखा, खोजि हिंड्छौ कुन पुर ?
ईश्वर बस्दछ गहिराइमा, सतह बहन्छौ कति दूर ?"

यात्रीलाई ईश्वर प्राप्तगर्ने यथार्थस्थानको निर्देशन गरिसकेपछि मार्गमा पुगेर उही चित्तमा रहेको ईश्वरलाई लक्ष्यगर्दै चित्तशुद्ध भएमा ईश्वर सहज छ भन्दछन् —

"देखिन्छ ईश कुन मन्दिरमा पसेर ?
त्यो हाँस्छ शुद्ध मन आसनमा बसेर।"

---

१ श्रीमद्भागवत।

दार्शनिक देवकोटा –

'मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः' भन्ने सिद्धान्तलाई अक्षरसः पालना गर्दछन । मनमनै ईश्वरको यथार्थ अनुभव हुने भएकोले त्यही मनलाई शुद्ध गराउनुपर्दछ भन्ने उनको भनाइ बिल्कुल वेदान्तपरक छ । मनोनाश, वासनाक्षय भन्नु पनि वास्तवमा चित्तको आत्यन्तिक शुद्धि नै हो । यस पछि तत्वसाक्षात्कार किंवा आत्मज्ञान टाढाको कुरो होइन ।

त्यागको महान् महिमा बुझेका कवि त्यागद्वारा नै आत्यन्तिकशान्ति सम्भव छ भन्दै –

"खोज्छन् सबै सुख भनी सुख त्यो कहाँ छ ?
आफू मिटाई अरूलाई दिनू जहाँ छ ।"

यस्ता शास्त्रसम्मत, वेदान्तरक उत्कृष्ट सिद्धान्त अभिव्यक्त गर्दछन् । 'न कर्मणा प्रजया धनेन त्यागेनैके अमृतत्वमानसु' भन्ने श्रुतिवाक्यलाई कवि देवकोटाले राम्ररी बुझेका छन् भन्ने कुरामा शंका छैन । त्यागबाट मात्र हैन सन्तोषबाट पनि मान्छे अनन्त आनन्दको अनुभवगर्न सफल बन्दछ भन्ने कुरा देवकोटाले धेरै ठाउँमा देखाएका छन् ।

'सन्तोषं परमं सुखम्'

साँच्चै नै सुखको इच्छागर्नेले सन्तोषी नभई हुँदैन । यही कुराको सन्दर्भमा योगवासिष्ठ महारामायणमा भगवान् वसिष्ठ श्रीरामचन्द्रलाई बताउनुहुन्छ– मोक्षका चार द्वारपाल मध्ये कसैलाई हातलिए पछि सजिलैसंग प्रवेशगर्न सकिन्छ यी गणनामा चार जस्ता देखिन्छन् वास्तवमा एकै हुन् । ती हुन् —

शम, सन्तोष, विचार र सत्सङ्ग ।

प्रारब्धवशात् प्राप्त कुराहरूमा सन्तुष्टहुनु नै मुमुक्षुको लक्षण हो । सन्तोष भएन भने करोडौंको मालिक भए पनि, सम्पूर्णशास्त्रमा पारंगत

भए पनि, स्वर्गादि सारा लोकको ऐश्वर्य भोगे पनि आत्यन्तिकशान्ति मिल्दैन। अनि त्यस्ता अशान्त चित्तवालालाई कहाँबाट सुख होला ?

'अशान्तस्य कुतः सुखम्'[१]

यो कुरा राम्ररी बुझेका देवकोटाको 'गरीब' धनको गरीब भए पनि मनको र सन्तोषको धनी छ, त्यसैले सदासर्वदा सुखी छ। वास्तवमा आफू नै सदा अविनाशी सुखको भण्डार हो। बाहिरी वस्तुमा कहीं पनि र कहिले पनि सुख छैन। देवकोटाको गरीब आफूमा नै सन्तुष्ट छ, अतः ऊ धनमा सुख छ भनेर रात-दिन जसरी तसरी धन जम्मा गर्न लागेका धन-पिपासु असन्तोषीहरूलाई हाँक दिंदै भन्दछ—

"गरीब भन्छौ सुखको म झैं धनी
मिल्दैन संसारभरी कतै पनि।
विलासको लालस दास छैन म
मीठो छ मेरो रसिलो परिश्रम ॥[२]

अद्वैत-वेदान्तदर्शनका अनुयायी कवि मानिस, ईश्वर र आत्मामा कत्ति पनि भेद छैन भन्ने कुरामा अत्यन्त विश्वस्त छन—

'आत्मा ईश्वर यौटै हो, नरै हो परमेश्वर।'[३]

ईश्वर छैन भन्ने नास्तिक तिमिरमर्दनलाई बडो तार्किक जबाफले परास्तगर्ने कविका नायक अनङ्ग भन्दछन्—

"उहाँ छैनन् छैनन् हरि हरि हरि प्राण सबका।
पिता छैनन् छैनन् शिशुहरू सबै छन् जनकका ![४]

यही कुराको पुष्टिगर्न लक्ष्मी निबन्धसंग्रह' मा पाँचौटा चाहिने

---

१ श्रीमद्भगवद्गीता

२ भिखारी ( कविता संग्रह ) पृष्ठ-३२

३ सुलोचना महाकाव्य, चतुर्थसर्ग-पृष्ठ ७०

४ सुलोचना महाकाव्य, चतुर्थसर्ग-पृष्ठ ८१

कुराहरू ईश्वर, आत्मा, स्वर्ग, नरक, धर्म लिएर कवि आउँछन् र भन्दछन् ईश्वर विना संसारै शून्य छ। कारण नभई कार्य हुँदैन। अतः संसार कार्य हो र ईश्वर कारण हो।

'के नेपाल सानो छ ?' निबन्धमा चीन, रूस आदि महादेशहरूको दाँजोमा आध्यात्मिक दृष्टिले प्रणवको विन्दु, आँखाको नानीको दृष्टान्त दिंदै नेपाललाई विशालताको वरमाला पहिराउने कवि निसन्देह अध्यात्मवादी थिए भन्न कत्ति पनि हिच्किचाउनु पर्दैन।

आत्म–सन्तोषमा नै अखण्ड आनन्द र अनन्तज्ञान प्राप्त छ भन्ने कविको दर्शन यसरी व्यक्तिएको छ--

"हामीलाई पुगिहाल्छ आत्म–सन्तोषले सबै।
जहाँ आनन्द पाइन्छ त्यहाँ ज्ञान अनन्त छ।"[१]

स्थितप्रज्ञको लक्षण के हो ? भन्ने अर्जुनको प्रश्नको उत्तरमा योगेश्वर भगवान् श्रीकृष्णचन्द्र आज्ञाहुन्छ—

"प्रजहाति यदा कामान् सर्वान् पार्थ मनोगतान्।
आत्मन्येवात्मना तुष्टः स्थितप्रज्ञस्तदोच्यते॥[२]"

यसरी कवि देवकोटा आफ्ना सबैजसो कृतिहरूमा आध्यात्मिक दर्शनले ओतप्रोत भएका छन् र उनका पात्रहरू अत्यन्त आदर्श र अध्यात्मवादी, सन्तोषी र सुखी छन्। सम्पूर्ण प्राणीमा ईश्वर देख्ने दार्शनिक कवि रोगी, गरीव, भिखारी, सुन्दरी, वेश्या, पूर्णचाकी स्वास्नी, च्यामिनी, कामिनी, कामीदाइ आदि सबैमा समान व्यवहार गर्दछन् र मानवताको नाताले कसैमा पनि भेदभाव छैन भन्दछन्। प्रकृतिमा ईश्वरको साक्षात्कारगर्ने कवि गधा जस्तो नीच मानिएको

---

१ सुलोचना महाकाव्य, तृतीयसर्ग पृष्ठ–५५

२ श्रीमद्भगवद्गीता–अ० २.५५

पशुमा पनि विद्वत्ताको पराकाष्ठा पाउँछन् ।[1] 'गधा बोल्छ' कवितामा आधुनिक जडवादले भरिएको भौतिकवादी सभ्यतालाई निस्फिक्रीसंग भर्त्सनागर्ने कवि 'हाइ ! हाइ ! अंग्रेजी' निबन्धमा पुगेर आधुनिक बोक्रे शिक्षापद्धतिको मनग्गे आलोचना गर्दछन् ।

अर्काको भलाइ र कल्याणगर्नु नै जीवनको लक्ष्य ठान्ने कविलाई सँधैंनै दाल भात डुकुको समस्या थियो तापनि पैसाको पछि उनी कहिल्यै लागेनन्, बरू पैसाको सदुपयोग कसरी गर्नुपर्छ भन्ने बाटो देखाए—

"पैसा हुँदा पुछिदिनु दुःख आँशु दाना
गर्नू सकेभर भलाइ न ठान्नु साना ।"

शास्त्रको सत्यतामा र आत्माको अमरतामा विश्वासगर्ने आस्तिक कवि आफ्नू जीवन–दर्शन देखाउँछन् —

'शास्त्रहरू सब सचा हुनेछन् ! विश्वास गर !
तिम्रो आत्मा मर्दैन कहीं !
हामी नास्तिक बन्ने छैनौं ![2]

यहाँनेर देवकोटा कविभन्दा पनि बढी दार्शनिक देखिएका छन् । यो स्वाभाविक पनि हो । कहिले पूरा दार्शनिक बन्दछ भने कहिले राजनैतिक नेता, कहिले समाजसुधारक त कहिले अभिनेता— त्यसैले कवि सबैथोक हो ।

कविशिरोमणि लेखनाथसंग अथवा आदिकवि भानुभक्त आचार्यसंग जति मात्रामा काव्यात्मकता छ त्यत्ति नै दार्शनिकता पनि । अंग्रेजी साहित्यका प्रसिद्ध कवि वर्डस्वर्थ ब्राउनिङ्, रूसका प्रसिद्ध

---

१ लक्ष्मीनिबन्ध संग्रह गधा बुद्धिमान् कि गुरु ?

२ 'एक तिमी'–कविता

कथाकार लियोटल्सट्वाय साहित्यका स्रष्टामात्र होइनन महान् दर्शनिका पनि थिए। त्यसै नै माथि पनि उल्लेख भइसकेको छ–हाम्रो देशमा जति कवि र दार्शनिक छन् ती कवि भएर नै दार्शनिक एवं दार्शनिक भएर नै कवि भएका छन्।

देवकोटाको अध्यात्म-दर्शनमा भएको दृढ-विश्वास र धारणालाई अरू स्पष्ट पार्न सकिन्छ–उनका क्रियाकलापहरूद्वारा पनि। सं. २००८ सालमा पचलीघाटमा संस्थापित 'गीता–गेह' का अध्यक्ष नेपाल दार्शनिकसंघका सदस्य, वटु मुवहालमा भएको सतधर्मचर्चामा भागलिने कवि भित्रदेखि नै अध्यात्मवादी थिए।

'लक्ष्मीनिबन्ध संग्रह' का निवन्धहरूमध्ये 'श्रीगणेशाय नमः' 'पाँचौटा चाहिने कुराहरू', 'साधुको महात्म्य', वैराग्य', 'सत्य सोझो हुन्छ' जस्ता निवन्धहरू त पूर्णतः दार्शनिक पाराका छन।

'ईश्वर विना ऐँडी हुँदैन, आत्मा विना माटो हुन्छ, किरण हुँदैन, जवाफदेही हुँदैन। नरक विना त्रास हुँदैन, र धर्म विना वाटो हुँदैन।'[१]

यी प्रमाणहरूको आधारमा भन्न सकिन्छ–देवकोटालाई कुनै वादी' को संज्ञा दिने नै हो भने 'अध्यात्मवादी' भन्नु जत्तिको सार्थकता अरूमा पाइँदैन। किनभने यही वादभित्र नै मानवतावाद, विश्ववाद, राष्ट्रवाद, प्रकृतिवाद आदि सारा वादहरू समाविष्ट छन्।

नेपाली काव्य-जगत्मा सर्वोत्कृष्ट मान्न सकिने 'शाकुन्तल महाकाव्य' मा लक्ष्मीप्रसाद देवकोटाका दर्शन र कविताका महान् धारा बगेका छन्। उनी सुरूमा नै आफ्नू रुचि र पूर्वीय आकाशको विशालतामा प्रकाशपार्दै भन्छन् –

"मीठो लाग्छ मलाई ता प्रियकथा प्राचीन संसारको।"[२]

---

१ लक्ष्मीनिबन्ध संग्रह–पाँचौटा चाहिने कुराहरू, पृष्ठ ४२

२ शाकुन्तल महाकाव्य–प्रथमसर्ग पृष्ठ–२

यस महाकाव्यको महिमा गाउँदै कविको निस्पक्षपाती आत्मा बोल्दछ—

"ठूला नीति सिकून् प्रजाहरू सिकून् सद्भक्तिको माधुरी
ज्ञानी ज्ञान सिकून् सिकून् कविहरू यो काव्यमा चातुरी।"[१]

विश्वामित्रको कुटी, तपोभूमि, घनघोरजङ्गल (जहाँ सधैं नै मङ्गलै मङ्गल छ) को वर्णनको क्रममा कवि यसरी आफू छर्लङ्गिएका छन्—

"प्रथम घर कलाको व्यासको पाठशाला।
प्रथम भल यही हो आर्यहृद्को उज्याला॥
कुसुमहरू यहाँ छन् वेदका पत्रतुल्य।
सृजन प्रलयका छन् चित्र राम्रा अमूल्य॥"[२]

विश्वामित्र ऋषिले यमनियमादि पूर्वक मनलाई नियन्त्रणगरी हजारौं वर्षसम्म अति नै कठिन महान् तपस्या गरेपछि उनलाई आत्यन्तिक शान्ति मिल्यो र उनी सबै शत्रुका विजयी बने भन्ने प्रसङ्गमा—

"हरे! हामो भन्छौं त्रिभुवन जितौं शस्त्र-बलले।
गुनो सेना संख्या रुधिरपथमा भूठ छलले॥
अहा! सत्को प्यारो सुखद पथमा शान्त विजयी।
अशोकै छन् यौटा कि त अघि थिए कौशिक यिनै॥[३]"

पूर्वजन्मदेखि नै दार्शनिकसंस्कार बोकेर आएका लक्ष्मीप्रसादले आजीवन अध्यात्मदर्शनकै गीत गाए, मानवमात्रमा प्रीत लाए। अरू जति जति मृत्युका घडीहरू नजिकै आए उति उति उनको दार्शनिक

---

१ शाकुन्तल महाकाव्य प्रथमसर्ग पृष्ठ–९

२ शाकुन्तल महाकाव्य, द्वितीयसर्ग पृष्ठ–१६

३ शाकुन्तल महाकाव्य, द्वितीयसर्ग पृष्ठ–२२

विचार प्रस्फुरित भएको पाइन्छ। बरू एउटा साह्रै नै उल्लेखनीय कुरो चाहिं के छ भने मृत्युलाई नजिकै आएको देखेर र आफ्नो बितेको जीवनमा आध्यात्मिक खास उपलब्धि भएको नपाएर उनी ज्यादै नै असन्तुष्ट छन् अनि पछुतो गर्छन्। तर मर्ने वेलाको पछुतोले खास केही काम नदिए पनि संस्कार चाहिं राम्रै बनाएर गए।

"निश्वासे न हि विश्वासो कदा रुद्धो भविष्यति।
कीर्तनीयमतो बाल्यात् हरिःसर्वत्र सर्वदा॥"[१]

भक्तशिरोमणि प्रह्लाद आफ्ना सहपाठी दौंतरीहरूलाई मृत्युको केही विश्वास र निश्चय छैन, त्यसैले बालककालदेखि नै हरिभजन आत्माको अनुसन्धानगर्दै जानुपर्छ भनी उपदेश दिन्छन्। त्यसकारण आफ्नो वास्तव हित चाहनेले महाराज भर्तृहरिले बताए झैं—

'यावत् स्वस्थमिदं कलेवरगृहं यावच्च दूरे जरा।[२]
... ... ... ... ... ... ... ...

समयमा सोचिहाल्नु नै महान् बुद्धिमानी हो।

कविज्यूलाई क्यान्सर जस्तो असाध्य भयानक रोगले ज्यादै नै सताए पछि उनलाई जीवनको आश मर्‍यो। शान्तभवन अस्पतालको ओछ्यानमा शारीरिक पीडाले छटपटाएका कवि सर्वशक्तिमान ईश्वरलाई सम्भेर यसरी कराए—

"यस दुनियामा सुख दुःख दुइको गहिराइमा डुबियो खुब
दुःख भो अतिशय सुख भो अतिशय प्रभुले पुर्‍यायो मनसुब
विषको महको चाखी मिठास जगमा बसियो अन्धसरी
तर प्रभुका क्यै चेत खुलेन अब दुःखीको लौ मसरी……"[३]

---

३ श्रीमद्भागवत।

१ नीतिशतक–भर्तृहरि

२ महाकवि देवकोटा, पृष्ठ ५५

शारीरिक कष्टले गर्दा खपिनसक्नु स्थितिमा "मलाई पोटासियम सेनाइड्, ओपियट् आदि विष दिनुहोस्" भने पनि कविज्यूले मरुन्जेल सम्म पनि कविता लेख्न र दर्शन पोख्न छोडेनन्। २०१६ भाद्र १८ गते 'सङ्कल्प हाम्रो फलोस्' भन्ने समस्यापूर्ति कविसम्मेलनमा[१] सुनाइएको कविता —

"संसारै घुमियो भएर विषयी मीठो विषैपो पिएँ,
लेख्थें घेर वितर्क तर्क मनमा उल्टो भई पो जिएँ,
आयो घोर हुरी तवै प्रलय भो आगो जल्यो लौ जलोस्,
भावै मात्र फिर्जं तथापि सबको 'संकल्प हाम्रो फलोस्'।"

जीवनका महान घडीहरू त्यसै त्यसै बितेको र आध्यात्मिक शान्ति नपाइएकोले देवकोटा यतिखेर बढी दुःखी देखिन्छन्। वास्तवमा पुस्तकको अध्ययन शास्त्रार्थमा विजय पाएर मात्र पनि हुँदैन, अनुभव नै चाहिन्छ। त्यसैले होला, देवकोटामा अनुभवको परिपाक नभएर शान्ति मिलेन। तैपनि अध्यात्मदर्शनको अत्यन्त राम्रो संस्कार छ र त मर्ने वेलामा पनि विषयसुखादितिर मन नगएर परमात्मातिर गयो।

कविशिरोमणि लेखनाथ र रामकृष्ण मिसनका एक विद्वान् वेदान्तीसंग आशुतोष भगवान् शिवको महान् महिमा गाउँदै भेटवार्ता भएको थियो।

शान्तभवनका डाक्टर ( चिकित्सक ) मिलरलाई लेखेर दिएको अंग्रेजी कवितामा र प्रमेथियस सम्बन्धी कवितामा पनि अध्यात्मभाव पाइन्छ —

'यहाँ जन्मने मानवको निमित्त जीवन एक सबभन्दा वैभवशाली समारोह हो।'[२]

---

१ मोती जयन्तीको उपलक्ष्यमा

२ लाइफ् इज् दि रिचेस्ट् फिस्ट् फरम्यान् हियर् वर्न

'प्रमेथियसको जस्तो भयानक दुःख म आँशुमा आँशु नै डुबाएर सहन्छु।'[१]

अन्त्यमा 'प्रलयवेदना' ले छट्पटाएका दार्शनिक कवि जीवनको पछिल्लो भागमा पुगेर भन्छन् –

"धन्य हे आत्मा, धन्य हे ईश्वर तिम्रो लीला बुझिएन
तिम्रो पदमा साथ–स्मृति ली आह कहिल्यै भिजिएन......"

अब निस्कर्षमा पुगेर के कुराको टुंगो लगाउने आँटगर्न सकिन्छ भने महाकवि लक्ष्मीप्रसाद देवकोटा नेपाली साहित्याकाशका अत्यन्त उज्वल नक्षत्र हुन्। उनको विषयमा विभिन्न दृष्टिकोणबाट अध्ययन र अनुसन्धान हुनु अत्यन्त वाञ्छनीय भएकोले अध्यात्म–दर्शनको कसीमा राखेर देवकोटालाई हेर्ने प्रयास गरिएको छ। आफ्-आफ्नो आँखाले एक कविलाई मात्रै होइन संसारैलाई हेर्ने स्वतन्त्र अधिकार भएकोले पनि यो आफ्नो आँखाले हेरिएको एक हेराइ हो र देवकोटा यसै भित्रका हुन् भन्ने कुरामा एकजातै शंका छैन।

---

१ प्रोमिथिअन् पेन् आइ वीयर् वीथ् टीयर् अन् टीयर्

# पटरानी

## (शास्त्रानुसन्धानद्वारा भ्रमनिराकरण)

—प्रा. चूडानाथ भट्टराय

छिन्न भिन्न भएको नेपाललाई एकीकरणगरी जसको अकथ परिश्रमले आज विश्वको सामू एक हिन्दू अधिराज्य भन्ने जग बसायो, उही प्रातःस्मरणीय राष्ट्रनिर्माता श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको संक्षिप्तजीवनी श्री ५ महाराजाधिराजका प्रेस सचिवालय राजदरबार नेपालबाट प्रकाशितहुनु ठूलो गौरवको कुरो हो। यसका लेखक श्री इतिहास शिरोमणि बाबुराम आचार्यको परिश्रम पनि अवर्णनीय छ। यसरी नै प्रमाण संकलनगरी इतिहासको खोजीगरेमा सत्य कुराको ज्ञान भएर समाज दरो हुन्छ। खालि बाहिरियाको हाहामा लागेर भाषान्तरगरी इतिहासकार बन्ने मोह पनि हट्दछ। यस क्षेत्रमा स्तुत्यप्रयास प्रा. नयराज पन्तबाट सुरुभई पछि उहाँकै सञ्चालकत्वमा इतिहास संशोधन-मण्डल पनि खडा भएको छ। अब झटपट इतिहासकार बन्न मानिसलाई निकै गाह्रोहुन गएको छ। किनभने संशोधन तुरुन्त गर्ने मण्डलको पनि ख्याल नगरीनहुने बेला आइसकेको छ।

यहाँ एक ठाउँमा अलि शास्त्रसंग नमिल्ने कुरा श्री बाबुराम आचार्यज्यूले गर्नु भएको छ, त्यसतर्फ पाठकको ध्यान लगाउन यो सानो लेख यहाँ प्रस्तुतगर्ने धृष्टता गर्छु।

श्री ५ बडा महाराजाधिराज पृथ्वीनारायण शाहको संक्षिप्तजीवनी भाग १ को पृष्ठ १६० को पंक्ति ५ मा यस्तो लेखिएको छ—

"राज्याभिषेकमा राजाका साथ जेठी महारानीले एउटै पाटको वस्त्र ओढेर अभिषेक लिनुपर्दथ्यो र यस तरहसंग अभिषेक लिएका

रानीलाई पटरानी[२] कहिन्थे। श्री ५ पृथ्वीनारायण शाहकी जेठी महारानी इन्द्रकुमारी माइतीघरमै रहेकीले कान्छा महारानी नरेन्द्र-लक्ष्मी राज्याभिषेकमा सम्मिलितभएकी हुँदा पटरानी यिनै भइन्"-

यहाँ श्री बाबुराम आचार्यले पटरानीको संस्कृतरूप 'पट्टराज्ञी' भन्ने धरहराको अभिलेखद्वारा प्रमाणित भएकोमा पूर्णसहमति जना-उनु भएको छ। त्यसोहुँदा 'पट्ट' शब्द संस्कृतमा के अर्थमा प्रयुक्तहुन्छ भन्ने कुरालाई विचार गर्दा हामी कुन तथ्यमा पुग्दछौं यसतर्फ फर्कनु पर्‍यो। अमरकोशको तृतीयकाण्डमा "पूंखो न्यूंखः समुद्गश्च विट-पट्टधटाः खटः" भन्ने छ, त्यसको अर्थ पं. वि. शि कुलचन्द्रले पट्ट ( सिलौटो, घाउमा बाँध्ने पट्टी ) भनी लेख्नुभएको छ। हिन्दी–शब्द–संग्रह ( संपादक श्री मुकुन्दीलाल श्रीवास्तव श्री राजवल्लभ सहाय, मा पट्ट- पु० तख्ती, पटिया। पट्टा। दुपट्टा। सिंहासन। नगर। रेशम। एक तरहका सन। चौराहा। वि. मुख्य। औंधा। लेखिएको पाइन्छ। कौटिलीय अर्थशास्त्रको सूत्राध्यक्ष प्रकरणमा- "सूत्राध्यक्षः सूत्रवर्मवस्त्र-रज्जुव्यवहारं तज्जातपुरुषैः कारयेत्। ऊर्णावल्ककार्पासतूलशण-क्षौमाणि च ··· ··· कर्तयेत्।" यताबाट ऊन वल्कल कपास शन रेशमको धागो कातेर धागो कवच कपडा डोरी बनाउने चलन रहेछ भन्ने देखिन्छ। यिनै आधार मानेर र रेशमीवस्त्रको प्रावरण पनि ओढ्ने हुँदा पट्टबाट पाटको वस्त्र बन्ने हुँदा अभिषेकमा त्यही ओढ्ने रानी 'पटरानी' भएकी भन्ने विद्वान लेखकले संझनु भएझैं लाग्छ।

तर इतिहास शिरोमणिज्यूले यहाँ अलि बाटो बिराउनु भएझैं देखिन्छ। वर्णाश्रमधर्मको संरक्षकको रूपमा रहने राज-तन्त्रमा राजाको निम्ति धेरै चर्चा वेदमा पाइन्छ। राजाभि-षेकद्वारा उसमा राजत्वको पूर्णता स्वीकारगरिने हुँदा ऐतरेयब्राह्मणमै

---

"२ पटरानी शब्दको संस्कृतरूप पट्टराज्ञी शब्द श्री ५ राजेन्द्रका समयका कान्तिपुरका धरहराका अभिलेखमा पनि पाइएकोछ। ( इ. प्र. १ पृ. ८६ )"

राजाभिषेकको एक राम्रो प्रक्रिया हाम्रो सामुमा देखापर्छ। निबन्धकारहरूद्वारा विशद व्यवस्था यस विषयमा हामी पाउछौं। वीरमित्रोदयको राजनीति प्रकाशमा राजाभिषेकको एक सुन्दर विवेचना छ। विद्वान् लेखकले त्यो सुनिदिनुसम्म भएको भए यस्तो प्रामाणिक ग्रन्थमा त्यति मनगढन्ते कुराले स्थान पाउने थिएन।

अरू प्रसंग छोडेर यहाँ 'पटरानी' विषयमा विचार गर्दा मीमांसामा "दम्पत्योः सहाधिकारः" भन्ने विधान पाइन्छ। राजा पट्टाभिषिक्त हुँदा रानी पट्टाभिषिक्ता हुन्छिन्। यो त आचार्यज्यूले पनि स्वीकार्नु भएकै छ। तर पट्ट भनेको उहाँले पाट संझनु भयो एक अर्थमा पट्टवस्त्र भन्दा रेशमी कपडा भन्ने प्रयोग ठाउँ ठाउँमा नपाइने होइन। त्यसैले त शास्त्रको अनुसन्धान गरी कहाँ कुन रूपमा के भनिएको छ। त्यसमा शास्त्रको प्रामाण्य हेरकोर गर्नु पऱ्यो नि।

शास्त्रकारले राजाभिषेकमा पट्ट केको वनाउने ? कति अङ्गुलको वनाउने ?, कति चुच्चे पार्ने ?, कसले लगाइदिने ? इत्यादि विचार गरेका छन्। पट्टलक्षणं देवीपुराणे—

"सर्वस्नानमलङ्कारं रोचनाख्यं च पट्टकम्।
वृद्ध्याऽव्यङ्गुलमङ्गुल्या षट्त्रिंशदङ्गुलावधि ॥"

यसको अर्थ वीरमित्रोदयले यसरी गरे—अव्यङ्गुलं—सप्ताङ्गुलम्, अङ्गुल्या एकया सहित मष्टाङ्गुलम इत्येकं पट्टलक्षणम्। अर्थात् सात औंला नापमा एक औंला सहित थपगर्दा आठ औंलाको पट्ट हुन्छ। यो एक पट्टको लक्षण हो।

आठ औंलाको पाटको लामो धरो ओढेर अभिषेक लिनेपो हो कि भन्ने शङ्का गर्ने ठाउँपनि पाइँदैन। वराहसंहितामा यसमा संदेह हटाउने श्लोक पाइन्छ —

"सर्वे द्विगुणायामा मध्यादर्धेन तदर्धविस्तारा:।
सर्वे विशुद्धकाञ्चननिर्मिताः श्रेयसो वृद्ध्यै ॥

पञ्चशिखो भूमिपतेस्त्रिशिखो युवराजमहिष्योः।
एकशिखः सैन्यपतेः प्रसादपट्टो विना शिखया॥

अर्थात् सबै दुइगुना आयामका माँझमा आधार त्यसको अर्ध विस्तार, कल्याण वृद्धिका निम्ति विशुद्ध सुवर्णनिर्मित सबै पट्ट हुन्छन्। पाँचशिखा ( चुच्चे ) भएको राजाको, अभिषेक लिने; बडामहारानीको तीनशिखे, युवराजको पनि तीनशिखे, सेनापतिको एकशिखे र शिखा नभएको चाँहि प्रसाद पट्ट हुन्छ।

यहाँ नेपालको आफ्नै परम्परा बनेको छ शिवको र शिवपरिवार नै चन्द्रमौली हुन्छन् शिवलाई चन्द्रचूड पनि शिरमा चन्द्रमा लगाएको बापतैमा भनिएको हो। त्यसैले यहाँ राजमुकुट पनि पाँच चाँद भएको अर्थात् पाँच चुच्चे छ। चाँद शब्द चन्द्र शब्दकै अपभ्रंश हो। पहिले अधिकृतहरू पनि चाँद-तोडा लाउँथे त्यसको आकार प्रकार एक चुच्चे र चन्द्राकारकै हुन्थ्यो। यहाँको पट्ट चाँहि मुकुट होइन राजाभिषेकमा निधारमा सुनको आठ औंला च्याप्टो पाता पाँचशिखा भएको बाँधिन्छ। त्यसमाथि शिरपेच पहिरिन्छ। यो शास्त्रविहित कर्म हो बडामहारानीबाट अभिषेकमा टायरा पहिरिने पनि चलनछ त्यसैले मुख्य महारानीलाई अभिषेक साथै राजगराइने हुँदा पट्टराज्ञी, महिषी शब्द प्रचलनमा आएको हो। पाटको ओढ्ने ओढेर पटरानी भनेको होइन। राजा खुशी भएर दिने प्रसाद पट्टकै रूपमा हाम्रा तक्मा बनेको छ र त्यसको नामको पछाडि "त्रिशक्तिपट्ट" भन्ने पट्ट पनि जोडिएको छ। यसरी आफ्नो परम्पराको शास्त्रीय मर्यादा कायम छंदाछंदै आचार्यज्यूको तर्कले काम दिंदैन।

पञ्चशिख भएको सुवर्णपट्ट राजाको निधारमा सांवत्सर (ज्योतिषी) ले बाँधोस् शिरमा मुकुट पहिराओस् भन्ने वाक्य राजनीतिप्रकाशमा यसरूपमा पाइन्छ।

"ततः सांवत्सरो राज्ञो ललाट उक्तलक्षणं पट्टं बध्नीयात् मूर्ध्नि

मुकुटम्" यस्तो विधान पाइन्छ र राजालाई यस्ता विशेषणद्वारा विभूषित गरिन्छ--"आवद्धमुकुटः स्रग्वी बद्धपट्टो विभूषितः "

—ब्रह्मपुराण।

"पट्टबन्धं प्रकुर्वीत मुकुटस्य च बन्धनम्"

—विष्णुधर्मोत्तर।

"आयुधानि च पट्टं च विप्रान् गन्ध दिनाऽर्चयेत्"

—वृद्धवसिष्ठः।

फेरि राजाभिषेकमा राजाको शिरपोश, सेतै लुगा, सेतै माल्य-चन्दनादिको पनि उल्लेख पाइन्छ—

"सोष्णीषः श्वेतवसनः सितचन्दनभूषितः।
सितमाल्योपवीतश्च सर्वाभरणभूषितः।"

—रामायण।

यसबाट पनि पाटको ओढ्ने ओढेको वर्णन मेरो दृष्टिगोचर भएनन्। यसैले शब्दको योगार्थले कष्टकारि भनी जुत्ता भने झैं नहोस्।

विश्वमा एक मात्र हिन्दूराज्य नेपालमा नै शास्त्रसंमत वैध हिन्दू-परम्परा अनुसारको शुभराज्याभिषेक हुन्छ। त्यस्तो प्रक्रियामा यस्तो अनर्थ अर्थ गरी इतिहाससित संबन्ध नरहंदा नरहंदै पनि पटरानीको परिभाषा गर्नु विद्वान लेखकलाई के समन्वय परेको हो यो बुझ्न सकिएन। उहाँले 'न हि सर्वः सर्वं जानाति' भन्ने सिद्धान्त न बुझेको त कहाँ होला र। आफ्नो राष्ट्रको मर्यादालाई न बुझेर लेख्ता त्यो आफ्नै देशवासीले संभाल्दा बढ्ता राम्रो हुने भो र विदेशीले यसको उपहास गरिदिंदा अरू नेपालीको पनि अज्ञानले झन् ठूलो चोट पर्ने सम्भावना हुँदा यति लेख्न वाध्य भएकोमा अनौचित्य नरुझिदिन हुन आचार्य-जीलाई सविनय अनुरोध गर्छु।

# प्रान्तीय प्रचलित शब्द-संग्रह

## लुम्बिनी अञ्चल

फुंगो— लुगा राख्ने एक किसिमको भांडो
जिउँती— रत्यौली
तिंजू— चैत महिनातिर पाक्ने फलविशेष ।
सरहाँ— दशैंमा कोटमा गएर धेरै मानिसहरू भेलाभै ढाल तरवार आदि लिई विशेष उमङ्गका साथ खेल्ने खेल ।

सौजन्यः— श्री विष्णुप्रसाद 'शास्त्री'

## सेती अञ्चल

पारो— ठेकी
हम्र— माथि
घरपैसोगर्नु— दुलही भित्र्याउनु ।
पल्लो वाटो— तेर्सो वाटो ।

सौजन्यः— श्री धनञ्जय तिमल्सिना

## धवलागिरि अञ्चल

अमराई— अमिलो फल
जुट्केलो— मृगोको बच्चा
त्यायौं— मृगिनी
विन्डो— ठूलो ठेकी

सौजन्यः— श्री लक्ष्मीनारायण न्यौपाने

## कर्णाली अञ्चल

जीया— आमा
काउज्यू— काका
आज्यू— दिदी
ज्याक्कै— सबै
पौला— जुत्ता

सौजन्यः— श्री रत्नाकर देवकोटा

# हाम्रो विचार

हाम्रा पूर्वज ऋषि-मुनिहरूले हाम्रो हिन्दूसमाजलाई व्यवस्थित गराउन हाम्रा आदर्श शास्त्र-ग्रन्थहरूको रचनाद्वारा हामीहरूको आचार र कर्तव्यको निर्देशनगरी हामीलाई जीवनमार्गको दर्शन गराइ-दिएका छन्। हाम्रा शास्त्रग्रन्थहरूमा जन्मदेखि मृत्युसम्मका हाम्रा सबै आचार र कर्तव्यहरूको विशदरूपमा व्यवस्था गरिएको छ; जसबाट हाम्रो समाज सुदृढ बन्दछ र इहलोक र परलोकको सुख समेत प्राप्तगरी हाम्रो जीवनलाई शान्ति मिल्दछ। तर समयको क्रमले गर्दा शास्त्रमा बताइएका व्यवस्थाहरूको यथार्थ मूल्याङ्कनगर्न हामी असमर्थ हुँदै आइरहेका छौं। यदि यो क्रम बढ्दै जाने हो भने हाम्रो समाजमा आफ्नो आचार-विचार, रहन-सहन, खान-पान आदि सामाजिक व्यवस्थाहरू प्रति जुन उपेक्षाभाव बढ्दै आएको छ, त्यसले सीमा नाघी हामी अन्त्यमा अवश्य पनि मार्गभ्रष्ट हुनेछौं; जसको परिणाम हाम्रो अस्तित्व मेटिनु निश्चित छ।

हाम्रा चलिआएका आचार-व्यवहारहरू रीति-रिवाजहरू र यी सबैको व्यवस्थागर्ने शास्त्रहरू प्रति हामीमा त्यसै बेला मात्र वास्त-वमा श्रद्धा उत्पन्नहुन्छ, जब हामी यी सबैको रहस्य र मर्म स्पष्टरूपमा थाहा पाउँछौं। दृष्टान्तको रूपमा—स्नानकर्म र सन्ध्याकर्म प्रति हाम्रो मनमा दृढआस्था त्यसै बेला मात्र पैदा हुन्छ, जब यी कर्महरूको रहस्य र यसबाट हुने लाभको यथार्थज्ञान हामीमा स्पष्टरूपमा हुन्छ। यी कुराहरू शास्त्रहरूको अनुसन्धान र मननद्वारा मात्र थाहाहुने हुनाले हामी आफ्नो हिन्दूजातित्व र हिन्दूराष्ट्रको रक्षाको निमित्त शास्त्रको अनुसन्धानगर्न अघिसरेका हौं। अरू विद्वान्‌हरूलाई पनि यस पवित्र काममा लागिपर्न आह्वान गर्दछौं।

तर शास्त्रको अनुसन्धानगर्नु बडो कठिन कुरा छ। हाम्रा शास्त्रकारहरू नबुझिकन नै नियम र मर्यादाहरू स्थापनागर्ने खालका विद्वानहरू थिएनन्। उनीहरूले जे जति नीति र नियमहरू निर्धारितगरे ती सबै दीर्घकालको अनुभव र अनुसन्धानको आधारमा नै निर्धारित गरेका हुन्। हाम्रो जुन आदर्श सामाजिक व्यवस्था छ यसले हाम्रो समाजलाई सधैं सशक्तरूपमा राख्दै आएको छ र हाम्रा शास्त्रमा विधान गरिएका कर्तव्याकर्तव्य र भक्ष्याभक्ष्य आदिका जुन रहस्यहरू छन्—ती उचित छन्। यिनै विशेषताहरूले गर्दा नै हाम्रो समाज अनेक ठक्कर खाएर पनि आजसम्म जीवित रहन सकेको हो। हाम्रो सामाजिक व्यवस्थामा हाम्रा पूर्वजहरूको ठूलो त्याग, तपस्या र साधनाको योगदान मिलेकोले हाम्रा पूर्वजहरूले बनाएका ती शास्त्रग्रन्थहरूको अध्ययन र मननको निमित्त पनि हामीमा त्यस्तै तल्लीनता, गम्भीरता र साधनाको खाँचो छ। यसको लागि हाम्रा प्राचीन शास्त्रहरूको ज्ञानको लागि हामीले विशेष परिश्रमगर्नु परेको छ।

हाम्रा ऋषिहरूले व्यवहार गर्दा यो हो कि उ हो भन्ने दोधार नपरोस् भनी निश्चित विचार भएका ग्रन्थहरू बनाएका छन्। जस्तै—पाणिनिका सूत्रहरूले हामीलाई यो रूप शुद्ध हुन्छ र यो रूप अशुद्ध हुन्छ भन्ने कुरा ठोकेर भनिदिन्छन्। हाम्रो शास्त्रमा पाण्डित्यको परिभाषामा 'किं पाण्डित्यम् ? परिच्छेद' (ठोकेर भन्नसक्नु नै विद्वत्ता हो) भनिएको छ। जस्तै 'रामेषु' मा 'ष' मूर्धन्य 'रमासु' मा 'स' दन्त्य र 'हरिषु' मा 'ष' मूर्धन्य हुन्छ भन्ने कुरा निःसन्देह रूपमा पाणिनीय सूत्रले हामीलाई बताइदिन्छन्। अर्थात् पाणिनिका सूत्रहरू घोकि-बुझिदिएको खण्डमा यो यस्तै हुन्छ भनेर निशंक भै लेख्न—बोल्न सकिन्छ। यी नियमहरू कण्ठस्थ भइरहून् भनी पाणिनिले हुन्ज्यालसम्म छोट्याएर सूत्रहरू बनाएका छन्। पाणिनिका सूत्रका एउटा अक्षर पनि व्यर्थ छैनन् भन्ने कुरा विद्वान्हरूमा प्रख्यात छ। ती नियमहरूलाई उपस्थितराख्न आफू पनि नियममा बस्नुपर्दछ अर्थात् पढ्ने पढाउने दुवैले

नियममा रही शास्त्रीय क्रमानुसार पढ्दै पढाउँदै गए मात्र ती नियमले काम दिन्छन्, नत्र दिंदैनन्‌ शास्त्रका नियममा नरहने मानिस शास्त्र-पढ्ने अधिकारी बन्दैनन्‌ र अनधिकारीले पढेको पनि नपढे झैं हुन्छ। गुरुसंग विद्या पढ्नु र मनोरञ्जनगर्नुमा धेरै अन्तर छ भन्ने कुरा 'आख्यातोपयोगे' (१।४।२९) यो पाणिनीयसूत्रको अर्थमा गुरुसंग पढ्छ भन्दा पञ्चमी विभक्ति भई 'उपाध्यायाद्‌ अधीते' रूप बनेको र मनोरञ्जन गर्छ भन्दा 'नटस्य शृणोति' यस्तो रूप बनेकोबाट स्पष्ट हुन्छ।

यति भन्नाको तात्पर्य—मनोनियोगपूर्वक शास्त्र पढे-पढाएमा मात्र शास्त्रको रहस्य खुल्दछ, नत्र खुल्दैन भन्ने हो। व्याकरणको यहाँ दृष्टान्त दिइयो, अरू शास्त्रहरूमा पनि यो नियम लागुहुन्छ। घोक्ना-लाई सूत्र र मनन, निदिध्यासन आदि गर्नाका लागि भाष्य, वृत्ति, वार्तिक, टीका र टिप्पणीहरू गरी विद्वान्‌हरूले पढ्ने पढाउनेलाई निःसंदेहबन्ने उपयुक्त बाटो देखाइदिएका छन्‌। ज्यौतिष विषयका विद्वान्‌ भास्करले पनि 'व्याकरण राम्ररी नपढेको मानिस ज्यौतिष त के, कुनै शास्त्र पनि पढ्न सक्तैन' भनी स्पष्ट लेखिदिएका छन्‌। यसै कारण पहिले विद्यार्थीहरूमा संस्कृत भाषामा राम्रो दखल होस्‌, त्यसको व्याकरणको पनि ज्ञान रहोस्‌, त्यताबाट अरू शास्त्र पढ्नसक्ने अधिकारीहरू तयार होऊन्‌ र तयार भएका विद्वान्‌हरूले शास्त्रको अनुसन्धान गर्न सकून्‌ भन्ने विचार हामीले राखेका छौं।

\+ \+ \+

सौभाग्यवश मर्यादाको यो अङ्क श्री ५ महाराजाधिराज सरका-रको शुभजन्मोत्सव समारोहको अवसरमा प्रकाशित हुन लागेकोले हामीले यसलाई 'शुभजन्मोत्सव विशेषाङ्क' को रूपमा प्रकाशित गरेका छौं। हिन्दूधर्मका संरक्षक र समस्त हिन्दूहरूका एकमात्र सम्राट्‌ मौसूफ सरकारको सुदीर्घायु, आरोग्य, ऐश्वर्य, सुख र शान्तिको निमित्त हृदयदेखि नै श्री पशुपतिनाथमा पुकारा गर्दछौं।

